सरल नेपाली भावार्थसहित

# विदुरनीति

**डा. वासुदेव खनाल**
सहप्राध्यापक
नेपाल संस्कृत विश्वविद्यालय
वाल्मीकि विद्यापीठ
काठमाडौँ

**रत्न पुस्तक भण्डार**
काठमाडौँ, नेपाल

सरल नेपाली भावार्थसहित

# विदुरनीति

*डा. वासुदेव खनाल*

प्रकाशक : रत्न पुस्तक भण्डार, काठमाडौँ, नेपाल
© सर्वाधिकार : लेखकमा
आवरण सज्जा : सूर्यनारायण श्रेष्ठ

नेपालमा मुद्रित

**SARAL NEPALI BHAVARTHA SAHIT**
**VIDUR NITI**
(The Wisdom of Vidur)

**ISBN: 978-9937-33-169-2**

# प्रकाशकीय

वैदिक सनातन संस्कृतिको मूल आधार वेद हो। वेदबाट नै पूर्वीय वाङ्मयका विविध धाराको उत्पत्ति भएको हो। नीतिशास्त्रको उत्पत्तिको स्रोत पनि वेद नै हो। वेदपछि स्मृति, महाभारत, पुराण आदिमा नीति विषयक हजारौँ सूक्तिको भण्डार पाइन्छ। आचारप्रधान भएका कारण नीति विषयक सूक्तिमा धर्म र दर्शनको प्रभाव पाइन्छ। सामाजिक सद्भाव, मैत्री भावनाको निर्माण, सदाचार र राजनीतिजस्ता गम्भीर विषयमा सरल एवम् काव्यमयी शैलीमा प्रस्तुत भएका नीति ग्रन्थहरूलाई उपदेशात्मक काव्यका रूपमा लिन सकिन्छ। नीतिशास्त्रमा शास्त्रकारले सुखदुःखको विवेचनाका साथै जीवनका साथ त्यसको सम्बन्धमा प्रकाश पारेका छन्। नीतिशास्त्रमा जीवनको अभ्युन्नतिलाई दृष्टिमा राखेर सुमार्ग र कुमार्गको राम्रो तथा नराम्रोको परीक्षण गरेको पाइन्छ। भाग्यको अवश्यम्भाविताका साथै पुरुषार्थलाई सर्वोपरि स्थान नीतिशास्त्रमा दिइएको छ। नीतिशास्त्रमा आत्मश्लाघा, पाण्डित्य प्रदर्शन र अनियमित ज्ञानार्जनलाई राम्रो मानिएको छैन। संस्कृत वाङ्मयमा नीति विषयक उपदेशात्मक काव्यका निर्माताहरूको यो अद्भुत मनोविज्ञान विश्वलाई नै आश्चर्यचकित पार्ने खालको छ। यसले गर्दा संस्कृत वाङ्मयमा रहेका नीति विषयक ग्रन्थहरूको विश्वका अनेकौँ भाषामा रूपान्तरण भएको पाइन्छ।

नीति विषयक अनेकौँ ग्रन्थमध्ये 'विदुरनीति' पनि एक हो । यो कुनै स्वतन्त्र नीति ग्रन्थ नभएर महाभारतको उद्योगपर्वअन्तर्गतको प्रजागरपर्वको ३३ देखि ४० अध्यायसम्मका आठ अध्यायको प्रसङ्ग हो जसलाई 'विदुरनीति' नामले जानिन्छ। व्यवहार, सदाचार, धर्म, सुखदुःख-

प्राप्तिका साधन, त्याज्य एवम् ग्राह्य गुण तथा कर्मको निर्णय, त्यागको महिमा, न्यायको स्वरूप, सत्य, परोपकार, क्षमा, अहिंसा, मित्रको लक्षण, कृतघ्नको दुर्दशा, निर्लोभिता आदिका साथै राजधर्मको सुन्दर वर्णन यस नीति ग्रन्थमा गरिएको छ। संस्कृत भाषामा रहेको विदुरनीतिको मूल संस्कृतका साथ सरल नेपाली भावार्थसहित सहप्राध्यापक डा. वासुदेव खनालले तयार गरेर प्रकाशनका लागि हामीसमक्ष ल्याउनुभयो। यसको प्रकाशनका लागि हामीले अग्रसरता देखायौँ जसको फलस्वरूप प्रस्तुत ग्रन्थ पाठकसामु आएको छ। नीति विषयक अनेक ग्रन्थहरू नेपाली भाषामा अनुवादका साथ प्रकाशित छन्। प्रस्तुत ग्रन्थ विदुरनीति पनि नेपाली अनुवादका साथ प्रकाशित भएको छ। धर्मशास्त्रमा विद्यावारिधि गर्नुभएका डा. वासुदेव खनालले सरल नेपाली भावार्थसहित तयार गर्नुभएको प्रस्तुत ग्रन्थले छुट्टै पहिचान दिन सक्ने विश्वास हामीले लिएका छौँ। प्रस्तुत ग्रन्थ र ग्रन्थकारका सम्बन्धमा नेपाल संस्कृत विश्वविद्यालयका पूर्व उपकुलपति प्राध्यापक माधवराज गौतमले लेख्नुभएको अनुसन्धानमूलक मन्तव्यले यस ग्रन्थको गरिमालाई अझ उचाइमा पुऱ्याएको छ जसमा नीतिशास्त्रको उत्पत्तिका सम्बन्धमा ऐतिहासिक विश्लेषण गरिएको छ। ग्रन्थकार स्वयम्को भूमिका पनि पाठकवर्गको मनलाई स्पर्श गर्ने खालको छ।

नीतिको नामनिसाना नै हराएको वर्तमान परिप्रेक्ष्यमा विदुरनीतिमा भएका कुरालाई शासकवर्गले आत्मसात् गरी अक्षरशः पालन गर्नु आवश्यक छ। सरल नेपाली भावार्थसहित प्रकाशित प्रस्तुत ग्रन्थ प्रत्येक व्यक्तिका लागि समान उपयोगी हुने विश्वास हामीले लिएका छौँ। सहप्राध्यापक वासुदेव खनालले प्रस्तुत ग्रन्थ प्रकाशन गर्ने अवसर प्रदान गर्नुभएकोमा उहाँप्रति शतशः आभार प्रकट गर्छौं। नीति एवम् राजनीतिको क्षेत्रमा ठूलो महत्त्व राख्ने प्रस्तुत ग्रन्थमा भएका कमीकमजोरी औँल्याई आगामी संस्करणमा सुधार गर्ने मौकासमेत दिनुहुन समस्त पाठकवर्गमा हार्दिक अनुरोध गर्छौं।

# महनीय नीतिग्रन्थ 'विदुरनीति' को नेपाली अनुवाद

– **प्रा. माधवराज गौतम***

सहप्रा. डा. वासुदेव खनालद्वारा नेपाली भाषामा अनूदित **विदुरनीति** नामक ग्रन्थको टङ्कन प्रति मैले आद्योपान्त अध्ययन गरेँ। डा. खनाल धर्मशास्त्र र त्यसका प्रमुख अङ्गका रूपमा रहेका राजशास्त्र, नीतिशास्त्र र अर्थशास्त्रका विशिष्ट विद्वान् हुनुहुन्छ। उहाँले यस ग्रन्थको नेपाली अनुवादमा अर्थ स्पष्ट गर्ने सन्दर्भमा ती सबै शास्त्रको आलोडल गरी नीति विषयक विषयवस्तुलाई स्पष्ट पार्नुभएको छ। उहाँको भाषा अत्यन्त सरल र सहज भएकाले सबै तहका पाठकहरू संस्कृत भाषामा रहेका कुराहरू बुझ्न र हृदयङ्गम गर्न सक्षम हुने छन्। यो ग्रन्थ आम पाठकका साथै अहिलेको राजनीतिक व्यवस्था र अवस्थामा शासकीय पदहरूमा सत्तासीन रहेका व्यक्तिहरूका लागि विशेष रूपले अध्ययन, मनन र अनुशीलन गर्नुपर्ने अनिवार्य विषयका रूपमा रहेको छ। एउटा शासकले आम जनताप्रति गर्नुपर्ने कर्तव्याकर्तव्यका सन्दर्भमा उसको मनमस्तिष्कलाई दिशानिर्देश गर्न यो नीतिग्रन्थ अति उपयोगी हुने छ। यस्तो महनीय ग्रन्थको नेपाली भाषामा अनुवाद गरी डा. वासुदेव खनालले आम नेपाली जनताप्रति ठूलो गुन लगाउनुभएको छ। उहाँका धर्म, संस्कृति, परम्परा र व्यवहार विषयक ग्रन्थहरू प्रकाशोन्मुख रहेका छन्। यो **विदुरनीति** नेपाल संस्कृत विश्वविद्यालयको उत्तरमध्यमा तहको प्राच्य राजशास्त्र र नीतिशास्त्रको

---

* पूर्व उपकुलपति, नेपाल संस्कृत विश्वविद्यालय।

पाठ्यपुस्तकका रूपमा पनि रहेको छ। यसरी समग्रमा हेर्दा यो ग्रन्थ सो तहको अध्ययन-अध्यापनमा संलग्न शिक्षक एवम् विद्यार्थीहरूका साथै आम पाठकलाई अत्यन्त उपयोगी हुने विश्वास लिएको छु।

यस ग्रन्थको शीर्षकका रूपमा आएको विदुरनीतिका बारेमा केही भन्नुभन्दा अगाडि यस नीतिका प्रवर्तक विदुरका सम्बन्धमा केही उल्लेख गर्नु सान्दर्भिक नै हुने छ। विदुर शब्द ज्ञानार्थक विद् धातुबाट कुरच् प्रत्यय भएर निष्पन्न हुन्छ जसको अर्थ बुद्धिमान्, मनीषी, विद्वान् आदि हुन्छ। विदुरको सन्दर्भमा ऐतिहासिक अध्ययन गर्दा राजा दिलीपका पुत्र प्रतीपका देवापि, शन्तनु र बाह्लिक गरी तीन भाइ छोरा थिए जसमध्ये देवापि तपस्याका लागि गएकाले उनका माहिला छोरा शन्तनु राजा भए। यिनै शन्तनु र गङ्गाको गर्भबाट भीष्मको जन्म भयो। शन्तनुबाट नै दाशराजकन्या सत्यवतीको गर्भबाट चित्राङ्गद र विचित्रवीर्य गरी दुई छोरा भए। यिनै दाशराजकन्या सत्यवती कन्यावस्थामा छँदा पराशर ऋषि र मत्स्यगन्धा (सत्यवती)-को गर्भबाट कृष्णद्वैपायन व्यासको जन्म भएको थियो। सत्यवती यथार्थमा उपरिचर वसुको वीर्यबाट माछामा उत्पन्न भएको पौराणिक कथा पाइन्छ। माछाबाट उत्पन्न भएकी र उनको शरीरबाट माछाको जस्तो गन्ध आउने हुनाले उनको नाम मत्स्यगन्धा पनि हो। माझीको घरमा हुर्केबढेकी हुँदा यिनी दाशकन्याका रूपमा चिनिन्छिन्। चित्राङ्गदको मृत्युपछि विचित्रवीर्य राजा भए। उनको विवाह काशीराजका कन्या अम्बा र अम्बालिकासँग सम्पन्न भयो। यी दुवै कन्यालाई भीष्मले स्वयंवरबाट हरण गरेर ल्याई भाइ विचित्रवीर्यका साथ विवाह गराइदिएका थिए। भाइ विचित्रवीर्यलाई राजयक्ष्मा रोग लागेका कारण उनको पनि मृत्यु भयो। आमा सत्यवतीको आज्ञाले वेदव्यासबाट आफ्ना भाइका पत्नी अम्बा र अम्बालिकाबाट धृतराष्ट्र र पाण्डु गरी दुई पुत्र जन्माउनुका साथै अम्बालिकाकी दासीबाट विदुरको जन्म भएको वर्णन महाभारत र विभिन्न पुराणहरूमा पाइन्छ। यसरी विदुर कृष्णद्वैपायनका पुत्र राजा विचित्रवीर्यकी रानी अम्बिकाकी दासीको गर्भबाट

उत्पन्न भएका थिए।[१] यिनी कौरवका मन्त्री थिए। यिनी राजनीति, धर्मनीति र अर्थनीतिका महान् ज्ञाता मानिन्छन्। धर्म, विदुर र युधिष्ठिरको एकतालाई महाभारतमा प्रतिपादन गरेको पाइन्छ। त्यसै कारण यिनलाई धर्मका अवतार भनिन्छ। अणिमाण्डव्य ऋषिको शापका कारण धर्मराजले नै विदुरका रूपमा शूद्रयोनिमा जन्म लिएका थिए।[२] यिनको विवाह राजा देवककको घरमा रहेकी शूद्राको गर्भबाट ब्राह्मणद्वारा उत्पन्न पारशवी (दासरवि) कन्याका साथ भएको थियो। ब्राह्मणद्वारा शूद्रामा उत्पन्न सन्तानलाई पारशव भनिन्छ।[३] ती पाराशवी कन्याबाट विदुरले आफूसमान विनय गुणसम्पन्न पुत्रहरू जन्माएका थिए।[४] प्रारम्भमा यिनी पाण्डुका मन्त्री थिए। यिनी पाण्डवहरूप्रति अत्यन्त सद्भाव र स्नेह राख्थे। त्यसैले पाण्डवलाई अनेक सङ्कटापन्नावस्थामा

---

१. क्षेत्रेऽप्रजस्य वैभ्रातुर्मात्रोक्तो बादरायणः।
धृतराष्ट्रं च पाण्डुं च विदुरं चाप्यजीजनत्।। (भागवत ९/२२/२५)

२. एतेन त्वपराधेन शापात्तस्य महात्मनः।
धर्मो विदुररूपेण शूद्रयोनावजायत।। (महाभारत, आश्रमवासिकपर्व १०३/३७)
अल्पापराधे विपुलो मम दण्डस्त्वयाधृतः।
शूद्रयोनावतो धर्म मानुष सम्भविष्यसि।।
(महाभारत, आदिपर्व १०३/३४–३५)

३. विप्रान्मूर्धावसिक्तोहि क्षत्रियायां विशःस्त्रियाम्।
अम्बष्ठ शूद्र्यां निषादो जात पाराशरोऽपि वा।। (याज्ञवल्क्यस्मृति १/९१)

४. अथ पारशवीं कन्यां देवकस्य महिपतेः।
रूपयौवनसम्पन्नं शुश्रावापगासुतः।।
ततस्तु वरयित्वा तां आनाय्य पुरुषर्षभः।
विवाहं कारयामास विदुरस्य महामते।।
तस्यां चोत्पादयामास विदुरः कुरुनन्दनः।
पुत्रान् विनयसम्पन्नान् आत्मनस्सदृशान् गुणैः।।
(महाभारत, आदिपर्व १०७/७३–७५)

यिनले रक्षा गरेका अनेक उदाहरणहरू महाभारतमा पाइन्छन्। जस्तै लाक्षागृह जल्दा यिनैको परामर्शमा पाण्डवको जीवन बचेको थियो। महाभारत युद्ध रोक्न धृतराष्ट्रलाई सम्झाउने प्रसङ्गमा नै विदुरनीतिको प्रादुर्भाव भएको हो जुन कुरा महाभारतको उद्योगपर्वको प्रजागरपर्वअन्तर्गत ३३–४० अध्यायमा रहेको छ। उनले सम्झाएको कुरा धृतराष्ट्रले नमान्दा महाभारतको युद्ध भएको थियो। त्यसमा विदुरले पाण्डवको पक्ष लिएका थिए। युद्धपछि पनि लामो समयसम्म यिनी राजा युधिष्ठिरका मन्त्री रहेका थिए। अन्त्यमा तपस्याका लागि वनमा गएको अवस्थामा त्यहीँ उनको स्वर्गवास भएको थियो। यिनै विदुर महाभारतको उद्योगपर्वअन्तर्गत रहेको विदुरनीतिका प्रवक्ता मानिन्छन्। दासीपुत्र हुँदाहुँदै पनि यिनको घरमा श्रीकृष्णले प्रेमपूर्वक खानेबस्ने गरेको कुरा विभिन्न पुराण एवम् महाभारतमा वर्णन गरेको पाइन्छ।

नीति शब्द नी धातुदेखि क्तिन् प्रत्यय भएर सम्पन्न हुन्छ जसको व्युत्पत्ति 'नीयन्ते, संलभ्यन्ते उपायादय ऐहिकामुस्मिककार्या इति नीतिः' भन्ने विग्रहमा भाव अर्थमा क्तिन् प्रत्यय भएर यो शब्द निष्पन्न हुन्छ। नीतिमयूखमा नीतिलाई विनयको मूल, विनय शास्त्रको निचोड र विनय नै इन्द्रियजय हो भनिएको छ।[५]

---

५. नयस्य विनयो मूलं विनयः शास्त्रनिश्चयः।
विनयोहीन्द्रिय जयस्तयुक्तशास्त्रमिच्छति।।
आत्मानं प्रथमं राजा विनयेनोपपादयेत्।
ततोऽमात्यान् ततो भृत्यांस्ततः पुत्रांस्तत प्रजाः।।
सदानुनुरक्तप्रकृतिः प्रजापालनतत्परः।
विनीतात्मा हि नृपतिर्भूयसीं श्रियमश्नुते।।
एवं करणसामर्थ्यात्संयम्यात्मानमात्मना।
नयानयनविद्रारा कुर्वीत हितमात्मनः।।
जितेन्द्रियस्य नृपतेर्नीतिशास्त्रानुसारिणः।
भवन्त्युज्ज्वलिता लक्ष्म्याः कीर्तयश्च नभस्पृशः।। (नीतिमयूख, द्वितीय प्रयोग)

आचार्य शुक्रले नीतिशास्त्रलाई धर्म, अर्थ, काम र मोक्षरूप पुरुषार्थ-चतुष्टय प्राप्त गराई सम्पूर्ण जीवको उपकारक र व्यवस्थापक रहेको उल्लेख गरेका छन्।[६] नीतिशास्त्रका आदिप्रवक्ता ब्रह्मा मानिन्छन्। उनबाट त्यो शास्त्र सर्वप्रथम बृहस्पति र शुक्रले अध्ययन गरे। त्यसैले यस नीतिशास्त्रका प्रथम प्रवक्ता बृहस्पति र शुक्र हुन्[७]। यही कुरा महाभारतमा पनि उल्लेख गरिएको पाइन्छ।[८] महाभारतकै एक अर्को प्रसङ्गमा भीष्मले युधिष्ठिरलाई उपदेश दिँदै राजशास्त्रका प्रणेताहरूको विवरण प्रस्तुत गरेका छन् जसमा ब्रह्मा, शिव, बृहस्पति, शुक्र, मनु, इन्द्र, भारद्वाज र गौरशिराको नाम दिइएको छ।[९] वात्स्यायनले पनि प्रजापतिबाट नै मौलिक शास्त्रको उत्पत्ति भएको मानेका छन्। उनले त्यहाँ यस शास्त्रको नाम प्राजापत्य रहेको उल्लेख गरेका छन्। त्यसैबाट धर्मको अंश मनुले र अर्थको अंश बृहस्पतिले लिएर शास्त्रहरूको रचना गरेको प्रसङ्ग पनि सो सन्दर्भमा आएको छ।[१०]

---

६. सर्वोपजीवकं लोकास्थितिकृन्नीतिशास्त्रकम्।
धर्मार्थकाममूलं हि स्मृतं मोक्षप्रदं यतः।। (शुक्रनीति १/५)

७. नीतिर्बृहस्पतिः प्रोक्ता तथैवौशनसी परा।
उभयोरविरुद्धात्र निरूप्या नीतिरुत्तमा।। (युक्तिकल्पतरु, पृ. २।)

८. नीति बृहस्पति प्रोक्तं भ्रातृन्मेऽग्राहयत्पुरा। (वनपर्व ३२/६१)

९. एतत्ते राजधर्माणां नवनीतं युधिष्ठिर।
बृहस्पतिर्हि भगवान्नायं धर्मं प्रशंसति।।
विशालाक्षश्च भगवान्काव्यश्चैव महातपाः।
सहस्राक्षो महेन्द्रश्च तथा प्राचेतसो मनुः।।
भरद्वाजश्च भगवाँस्तथा गौरशिरा मुनिः।
राजशास्त्र प्रणेतारो ब्राह्मणा ब्रह्मवादिनः।। (शान्तिपर्व ५७/१–३)

१०. प्रजापतिर्हि प्रजाः सृष्ट्वा तासां स्थितिनिबन्धनं त्रिवर्गस्य साधनमध्यायानां शतसहस्रेणाग्रे प्रोवाच। तस्यैकदेशिकं मनुः स्वायम्भुवो धर्माधिकारिकं पृथक्चकार। बृहस्पतिरर्थाधिकारिकम्। (कामसूत्र ५–७)

यसै कुरालाई महाकवि भासले आफ्नो **प्रतिमा** नाटकमा मनुकृत शास्त्रलाई मानवशास्त्र र बृहस्पतिकृत शास्त्रलाई बार्हस्पत्य भनी उल्लेख गरेका छन्।[११] अश्वघोषद्वारा रचित **बुद्धचरित**[१२] र राजा भोजद्वारा रचित **युक्तिकल्पतरु**मा पनि औशनस र बार्हस्पत्य नीतिका बारेमा उल्लेख गरेको पाइन्छ।[१३] ब्रह्माले रचना गरेको नीतिशास्त्रलाई पैतामहशास्त्र पनि भनिन्थ्यो। यो एक लाख अध्यायमा निबद्ध थियो। यसमा धर्म, अर्थ, काम र मोक्षसम्बन्धी विषयवस्तुको वर्णन गरिनुका साथै त्रयी, आन्विक्षिकी, वार्ता र दण्डनीतिका विषयहरू पनि समाविष्ट थिए। यस ग्रन्थलाई भगवान् शङ्करले १० हजार अध्यायमा सङ्क्षेपीकृत गरे भने त्यसैलाई इन्द्रले पाँच हजार अध्यायमा सङ्क्षिप्त गरे। त्यसपछि बृहस्पतिले तीन हजार अध्यायमा सङ्क्षिप्त गरे जसलाई बार्हस्पत्यशास्त्र पनि भनिन्छ। त्यसपछि यसैलाई शुक्राचार्यले एक हजार अध्यायमा सङ्क्षिप्त गरेको कुरा महाभारतको शान्तिपर्वमा उल्लेख छ।[१४] यसरी विकसित भएको नीतिशास्त्र विदुरले धृतराष्ट्रलाई उपदेश दिने सन्दर्भमा विदुरनीतिका रूपमा आएको हो। यस विदुरनीतिमा प्रथम अध्यायमा १२८ श्लोक रहेका छन् भने द्वितीय अध्यायमा ८६, तृतीय अध्यायमा ७८, चतुर्थ अध्यायमा ७४, पञ्चम अध्यायमा ६४, छैटौँ अध्यायमा ४७, सातौँ

---

११. रावणः '...काश्यपगोत्रोऽस्मि साङ्गोपाङ्गं वेदमधीये, मानवीयं धर्मशास्त्रं, माहेश्वरं योगशास्त्रं, बार्हस्पत्यमर्थशास्त्रं, मेधातिथे न्यायशास्त्रं, प्राचेतसं श्राद्धकल्पं च।' (प्रतिमा नाटक, पृ. ७९)

१२. यद्राजशास्त्रं भृगुरङ्गिरा वा
न चक्रतुर्वंशकरौवृषी तौ।
तयोः सुतौ तौ च ससर्जतुस्तात्
कालेन शुक्रश्च बृहस्पतिश्च।। (बुद्धचरित १/४६)

१३. नीतिर्बृहस्पतिप्रोक्ता तथैवौशनसीपरा।
उभयोरविरुद्धात्र निरूप्या नीतिरुत्तमा।। (युक्तिकल्पतरु, पृ. २।)

१४. महाभारत, शान्तिपर्व ५९/२८–९१।

अध्यायमा ८५ र आठौँ अध्यायमा ३२ गरी जम्मा ५९४ श्लोक रहेका छन्।

आज हामी जुन विषयलाई राजनीति भन्छौँ त्यसलाई प्राचीन समयमा राजनय, राजशास्त्र या अर्थशास्त्र भन्ने गरिन्थ्यो जुन प्राचीन सन्दर्भमा राजधर्मका रूपमा पनि परिचित थियो। महाभारत राजधर्मका प्रसङ्ग तथा तथ्यहरूले परिपूर्ण छ। शान्तिपर्वमा राजधर्मको विशेष रूपले निरूपण गरिएको छ। यसका अतिरिक्त प्रायशः सबैजसो पर्वमा प्रसङ्गानुकूल राजधर्मका बारेमा विवरणहरू प्राप्त हुन्छन्। विशेष गरेर राजधर्मको निरूपण गरिएका पर्वहरूमा सभापर्वको नारद-कणिक प्रसङ्ग, उद्योगपर्वको धृतराष्ट्र-विदुर प्रसङ्ग एवम् आश्रमवासिकपर्वको धृतराष्ट्र जिज्ञासा विषयक प्रसङ्ग उल्लेखनीय रहेका छन्। आर्यवर्तीय साहित्य र चिन्तनपद्धतिको सर्वश्रेष्ठ ग्रन्थ श्रीमद्भगवद्गीता पनि यसै महाभारतको एक अंश हो। यसका अतिरिक्त विष्णुसहस्रनाम, अनुगीता, भीष्मस्तवराज, गजेन्द्रमोक्षजस्ता आध्यात्मिक एवम् भक्तिसाहित्य महाभारतका अङ्गका रूपमा रहेका छन्। यिनलाई पञ्चरत्न पनि भन्ने गरिन्छ। त्यस्तै महाभारतका शान्तिपर्व र उद्योगपर्वअन्तर्गत नानाविध जीवनका समस्याहरूको समाधान निर्देश गर्ने तत्त्वहरूको वर्णन गरिएको छ। त्यस्तै उद्योगपर्वअन्तर्गतको प्रस्तुत विदुरनीति ग्रन्थ पनि नीति साहित्यमध्ये अग्रणी स्थान ओगट्ने ग्रन्थका रूपमा लिइन्छ।

नीतिशास्त्रको प्रथम प्रवक्ताका रूपमा आएका बृहस्पतिको उल्लेख वैदिक साहित्यमा पुरोहित र देवताका रूपमा भएको पाइन्छ।[१५] ब्राह्मणग्रन्थहरूमा यिनलाई वाणीका अधिष्ठाता र अपूर्व मेधावी भनेको पाइन्छ। बृहस्पति पनि प्राचीन ऋषिमहर्षिमध्ये एक हुन्। यिनी धर्मशास्त्र, अर्थशास्त्र र नीतिशास्त्रका प्रणेताका रूपमा चिनिन्छन्। मिताक्षरा तथा अन्य भाष्यहरूमा यिनका व्यवहार विषयक करिब सात सय श्लोक प्राप्त

---

१५. वैदिक इन्डेक्स, भाग २, पृ. ७२।

हुन्छन्। कौटिल्यले यिनलाई प्राचीन अर्थशास्त्रीका रूपमा वर्णन गरेका छन्। उनले आफ्नो अर्थशास्त्रको प्रारम्भमा बृहस्पति र शुक्रलाई आफूभन्दा पूर्वका अर्थशास्त्रीका रूपमा नमनसमेत गरेका छन्।[१६] त्यस्तै उनले भारद्वाज, विशालाक्ष, पराशर, पिशुन, कौणपदन्त, वातव्याधि र बहुदन्तीपुत्रको पनि उल्लेख गरेका छन्।[१७] यी नाममध्ये विशालाक्ष र बहुदन्तीपुत्रको महाभारतको शान्तिपर्वमा आएका वैशालाक्ष र बाहुदन्तक प्रतीत हुन्छन्। यी दुवै अर्थशास्त्रको कुनै शाखाका प्रणेता थिए। त्यसका अतिरिक्त मनु रचित मानवशास्त्र धर्मशास्त्रका रूपमा, बृहस्पति रचित बार्हस्पत्य र शुक्राचार्य रचित औशनस अर्थशास्त्रका रूपमा विकसित भएको प्रतीत हुन्छ। महाभारतको वनपर्वमा पनि बृहस्पतिको नीति उल्लेख गरेको पाइन्छ। याज्ञवल्क्यस्मृतिमा बृहस्पतिलाई धर्मका प्रवक्ता भनिएको छ। बृहस्पतिस्मृति सम्पूर्ण रूपमा प्राप्त छैन। डा. जोलीले ७११ श्लोकमा सङ्कलित उक्त स्मृति प्रकाशित गरेका छन्। यसमा व्यवहार विषयक सिद्धान्त र परिभाषाहरूको वर्णन गरिएको छ। उपलब्ध बृहस्पतिस्मृतिमा मनुस्मृतिको प्रभाव देखिन्छ। स्मृतिचन्द्रिका, मिताक्षरा, पराशरमाधवीय, निर्णयसिन्धु, संस्कारकौस्तुभ आदि ग्रन्थमा बृहस्पतिका अनेक उद्धरणहरू उपलब्ध हुन्छन्। अपरार्क र हेमाद्रिले त वृद्धबृहस्पति र ज्योतिर्बृहस्पतिको पनि उल्लेख गरेका छन्। बृहस्पतिले धर्मशास्त्रज्ञका रूपमा धन र हिंसाको भेद प्रकट गरेका छन्।

प्रस्तुत ग्रन्थको स्रोतका रूपमा रहेको महाभारत भारतवर्षको इतिहास, संस्कृति, नैतिक एवम् धार्मिक परम्पराको प्रमुखतम स्रोतग्रन्थ हो। यो ग्रन्थ जनमानसलाई अत्यधिक प्रभावित गरेकै कारण कलात्मक ढङ्गले जीवनलाई प्रतिबिम्बित गर्ने महान् काव्यकृतिका रूपमा समादृत छ। महाभारत

---

१६. नमः शुक्रबृहस्पतिभ्याम्। (अर्थशास्त्र, पृ. १)

१७. अर्थशास्त्र १/८, पृ. १३–१४। ५/५, पृ. २५३। ८/१, पृ. २२–२४, ८/३, पृ. ३२७–३३०। (अर्थशास्त्र, मैसुर संस्करण।)

युगधर्मलाई चित्रित गर्ने अपूर्व काव्य हो भन्दा अत्युक्ति हुने छैन। यसमा जीवनका अनेक पक्षहरूको चित्रण गरिएको छ। तिनमा अनेक प्रकारका अन्तर्विरोध र बाह्य द्वन्दको विस्तारका साथै त्यसको तीव्र मार्मिक अभिव्यक्ति पनि रहेको छ। यसको प्रधान विषय सङ्घर्ष हो र त्यो सङ्घर्ष अर्थ र कामसँग सम्बद्ध हुनुका साथै धर्मका आधारमा प्रभावित रहेको छ। यसमा अनेक स्थानमा नैतिक उपदेश, आध्यात्मिक तथ्य र राजधर्मसम्बन्धी विचार व्यक्त गरिएका छन्। यो ग्रन्थ तत्कालीन सम्पूर्ण विचारधारा र युगचेतनालाई समेट्न सफल कृतिका रूपमा रहेको छ। इतिहास, धर्म, राजनीति तथा साहित्य सबै दृष्टिबाट यो भारतवर्षीय मनीषाको महान् उपलब्धि पनि हो। यसलाई सनातन धर्मको समस्त स्वरूपलाई निरूपण गर्ने पञ्चम वेद पनि भनिन्छ। स्वयम् यसका रचयिताको सगर्व कथन छ– धर्म, अर्थ, काम र मोक्षका सम्बन्धमा यहाँ जेजति छ त्यो अन्यत्र पनि छ र जुन कुरा यहाँ छैन त्यो अन्यत्र पनि छैन।[१८]

महाभारतका करिब तीन दर्जन संस्कृत टीका रहेका छन् जसममध्ये सबैभन्दा पुरानो टीका देवबोधको ज्ञानदीप टीका मानिन्छ। यो टीका आदि, सभा, भीष्म र उद्योगपर्वमा लेखिएको छ। त्यसपछिको महत्त्वपूर्ण टीकामध्ये विमलबोधको विषमश्लोकी या दुर्घटनार्थप्रकाशिनी रहेको छ। यो टीका समग्र महाभारतमाथि लेखिएको टीका हो। यिनको समय सन् १०५० मानिन्छ। नारायण सर्वज्ञको पनि टीका विराट् र उद्योगपर्वमाथि प्रकाशित छ। यिनको समय सन् ११५०–१२०० बीचको मानिन्छ। यसपछिको अर्को महत्त्वपूर्ण संस्कृत टीका हो नीलकण्ठको भारतभावदीप जुन सम्पूर्ण महाभारतमाथि लेखिएको छ। उनको समय सन् १६५०–१७०० बीच मानिन्छ।

---

१८. धर्मे ह्यर्थे च कामे च मोक्षे च भरतर्षभ।
यदिहास्ति तदन्यत्र यन्नेहास्ति न तत्क्वचित्।। (महाभारत)

अन्त्यमा महाभारतकै एउटा अंशका रूपमा रहेको **विदुरनीति** ग्रन्थ डा. वासुदेव खनालद्वारा नेपाली भाषामा अनुवाद गरी प्रकाशित हुन लागेकोमा अत्यन्त खुसी लाग्यो। संस्कृत भाषामा निबद्ध ज्ञानभण्डारलाई सरल नेपाली भाषामा अनुवाद गरी संस्कृत भाषामा सहज पहुँच नभएका पाठकका लागि अति उपयोगी सामग्री डा. खनालले पस्कनुभएको छ। यस्तो नीतिग्रन्थ नेपाली भाषामा प्रकाशित गरी नेपाली वाङ्मयको क्षेत्रलाई समेत डा. वासुदेव खनालले ठूलो योगदान पुऱ्याउनुभएको छ। यस्तो सत्कर्म गर्ने डा. खनाल धन्यवादका पात्र हुनुहुन्छ। आगामी दिनमा पनि यस्तै महत्त्वपूर्ण कृतिहरू उहाँबाट सृजित हुँदै जाने आकाङ्क्षाका साथ उहाँको उत्तरोत्तर प्रगति र समृद्धिको मङ्गलमय कामनाका साथ आफ्नो भनाइलाई यहीँ विराम दिन्छु।

सद्भिः सङ्गः प्रकुर्वीत सिद्धिकामः सदा नरः। (नीतिवचन)

२०७४ फाल्गुन १७
चाबहिल, काठमाडौँ

# भूमिका

मानवजीवनमा नीतिशास्त्रको महत्त्वपूर्ण स्थान रहेको छ। भारतवर्षमा रहेका अन्य साहित्यजस्तै नीतिशास्त्रको उद्भव पनि वेदबाटै भएको हो। पूर्वीय मान्यताअनुसार वेदबाट नै सम्पूर्ण ज्ञानको उत्पत्ति भएको हो। ऋषिमहर्षिहरूले ऋतम्भरा प्रज्ञाको माध्यमबाट जुनजुन मन्त्रका स्वरूपको दर्शन गरे त्यही आर्षवाणी नै वेद हो। कुनै पुरुषद्वारा यिनको रचना नभएका कारण वेदलाई अपौरुषेय मानिएको छ। संहितात्मक समग्र वेदलाई व्यासले चार भागमा विभाजन गरेपछि ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेद नामले लोकमा प्रसिद्ध छन्। संहिताका साथ ब्राह्मण भाग पनि रहेको छ, यसैले 'मन्त्रब्राह्मणयोर्वेदनामधेयम्' भनेर ऋषिमहर्षिहरूले वेदको लक्षण गर्ने गरेको पाइन्छ। वैदिक साहित्य यत्तिकैमा सीमित रहँदैन, यो अत्यन्त विशाल रहेको छ। यसैअन्तर्गत संहिता, ब्राह्मण, आरण्यक र उपनिषद् पनि पर्छन्। वेदार्थको सम्यक् ज्ञानका लागि शिक्षा, कल्प, व्याकरण, निरुक्त, छन्द र ज्योतिष गरी छ वटा अङ्गको ज्ञान पनि उत्तिकै आवश्यक पर्छ। यसैले यिनीहरूलाई वेदाङ्ग भनिन्छ। मुख्यतः वेदमा ज्ञान, विज्ञान एवम् उपासनासम्बन्धी सबै कुराको निरूपण गरिएको छ। लौकिक एवम् पारलौकिक कल्याणका उपायहरूको वर्णन पनि वेदमा गरिएको छ।

नीतिविद्याको मूल सूत्र पनि वेदमै पाइन्छ। वेदका अनेकौँ आख्यानमा नीतिविद्याको सुन्दर वर्णन गरिएको छ। **नीतिमञ्जरी** वेदमा रहेका नीतिकथाहरूको सँगालो हो जसमा रहेका नीतिकथाहरू अत्यन्त रोचक र शिक्षाप्रद छन्। नीतिमा सत् परामर्श रहन्छ। उदाहरणका लागि राम्रो मित्रले कर्तव्याकर्तव्यको कुरा बताइदिन्छ, तर कर्तव्याकर्तव्यमा कर्ता स्वतन्त्र

रहन्छ। तर वैदिक नीति यसभन्दा अलि भिन्न आज्ञापरक रहेको छ सत्य बोल (सत्यं वद), धर्मको आचरण गर (धर्मं चर), आमालाई देवतासमान मान (मातृदेवो भव), पितालाई देवतासमान मान (पितृदेवो भव), अतिथिलाई देवतासमान मान (अतिथिदेवो भव) आदि। उल्लिखित नीतिवचनहरू आज्ञापरक छन्। वेदोक्त यी नीतिवचनहरू अवश्यकरणीय रहेका छन्। यी नीतिवचनहरूको उल्लङ्घन गरेको अवस्थामा दण्डको भागी बन्नुपर्ने शास्त्रीय व्यवस्था रहेको छ। यसरी सामान्य नीतिवचन र वैदिक नीतिवचनमा यही नै अन्तर रहेको छ। यस्तैयस्तै नीतिवचन र नीतिशिक्षा वेदमा पनि पाइने भएकाले नीतिशास्त्रको आदिस्रोत वेद नै हो।

वैदिक वाङ्मयपछि स्मृति वाङ्मय आउँछ। वेदलाई श्रुति भनिन्छ (श्रुतिस्तु वेदो विज्ञेयो – मनु) भने स्मृतिलाई धर्मशास्त्र भनिन्छ (धर्मशास्त्रस्तु वै स्मृति – मनु)। धर्मशास्त्रमा मानवको जन्मदेखि मृत्युसम्म, प्रातः जागरणदेखि राति नसुत्दासम्म मात्र होइन, सुषुप्ति एवम् स्वप्नावस्थासम्मका विधान निर्दिष्ट छन्। यति मात्र होइन, जन्मान्तरीय स्वरूपको परिज्ञान पनि स्मृतिशास्त्रको अध्ययनबाट हुन्छ। स्मृति निर्देशित जीवनपद्धतिलाई अँगाल्ने हो भने यो लोक मात्र होइन, मानवको परलोक पनि उज्ज्वल हुने धर्मशास्त्रीय विश्वास रहेको छ। स्मृतिशास्त्रमा मानवको आदर्श जीवनशैली कस्तो हुनुपर्छ भन्ने कुराको पनि वर्णन गरिएको छ। मनु, याज्ञवल्क्य, अत्रि, गौतम, हारीत, नारद आदि ऋषिहरूद्वारा मानवजीवनशैली कस्तो हुनुपर्छ र कर्तव्याकर्तव्य के हो भन्ने सम्बन्धमा वर्णन गरिएका पाँच दर्जनभन्दा बढी स्मृतिहरू अहिले पनि उपलब्ध छन्। यी स्मृतिशास्त्रमा पनि नीतिका सबै कुराको वर्णन गरिएको छ। स्मृतिहरूले वेदार्थको अनुगमन गर्छन्। अतः स्मृतिहरूमा निर्दिष्ट नीतिहरू पनि हाम्रा लागि आज्ञारूपी नै रहेका छन्।

स्मृतिपछि पुराणहरू पर्छन्। पुराणहरूको रचना वेदव्यासले गरेका हुन्। एउटा वेदलाई चार भागमा विभाजन गरेर व्यासले लोकप्रति महान्

अनुग्रह गरेका छन्। पुराणहरूमा पनि वेदार्थको उपबृंहण गरिएको छ। वेदमा जुन कुरा सूत्ररूपमा पाइन्छ त्यही कुराको विस्तृत रूप आख्यानशैलीमा पुराणहरूमा पाइन्छ। उदाहरणका लागि वेदमा उल्लिखित 'सत्यं चर', 'धर्मं चर'-जस्ता कुराहरूलाई सत्यवादी हरिश्चन्द्र, धर्मराज युधिष्ठिर आदिको आख्यानको माध्यमबाट रोचक शैलीमा वर्णन गरिएको छ। भागवत, विष्णु, पद्म, अग्नि आदि १८ महापुराणहरू रहेका छन्। त्यस्तै अठारै उपपुराण र औपपुराण पनि रहेका छन्। यसरी पुराणहरू पनि अनेक रहेका छन्। पुराणको आफ्नै शैली र व्याख्यानपद्धति रहेको छ। सर्ग, प्रतिसर्ग, वंश, वंशानुचरित एवम् मन्वन्तर पुराणका मुख्य प्रतिपाद्य विषयहरू हुन्। यसरी पुराणहरूमा पनि समस्त विद्याको भण्डार रहेको छ। यी सबै पुराण नीतिशास्त्रका भण्डार नै हुन्। अग्नि पुराणमा भगवान् श्रीरामद्वारा बताइएको नीतिको वर्णन छ। यस्तै गरुड पुराणमा बृहस्पति र महात्मा शौनकद्वारा प्रतिपादित नीति सुरक्षित रहेको छ। मत्स्य पुराणमा मत्स्यावतार भगवान्द्वारा प्रतिपादित राजधर्मनीतिको वर्णन छ। यस्तै कालिका पुराण र मार्कण्डेय पुराणमा पनि नीतिको भण्डार नै रहेको छ। श्रीमद्भागवत पुराण र विष्णु पुराणमा त आध्यात्मिक नीतिको खजाना नै रहेको छ। यस्तै रामायण पनि नीतिशास्त्रकै भण्डार हो। नीतिशास्त्रका आचार्य शुक्रको भनाइ छ– 'न रामसदृशो राजा पृथ्वीव्यां नीतिमानभूत्' अर्थात् यो पृथ्वीमा रामजस्ता नीतिमान् राजा भएनन्। यही नीतिको मर्यादा प्रतिष्ठापित गर्ने श्रीरामको पावन चरित्र वाल्मीकि रामायणमा गुम्फित छ जसको रचना ब्रह्माको आज्ञाबाट वाल्मीकिले गरेका हुन्। भगवान् रामले नीतिकलाको ज्ञान आफ्नो चरित्रको माध्यमबाट संसारलाई देखाएका थिए। यो आदर्श संसारका सबै मानवजातिका लागि अनुकरणीय रहेको छ। वाल्मीकि रामायणका एकएक श्लोकहरू नीतिशास्त्रका मूल मन्त्र नै हुन् भन्दा अत्युक्ति हुने छैन। रामले मात्र होइन, 'एतद्देश प्रसूतस्य सकाशाद् अग्रजन्मनः स्वं स्वं चरित्रं शिक्षेरन्

पृथ्वीव्या सर्वमानवा:' अर्थात् भारतवर्षमा जन्मेका हाम्रा ती पूर्वजहरू जसले आआफ्नो चरित्रको माध्यमबाट पृथ्वीका सम्पूर्ण मानवसमुदायलाई शिक्षा दिएका थिए भन्ने मनुवचन प्रसिद्ध रहेको छ।

महाभारत भारतवर्षको संस्कृति र संस्कृत साहित्यको विश्वकोश मात्र होइन, नीतिशास्त्रको भण्डार पनि हो। महाभारतमा वर्णित एक प्रसङ्गअनुसार देवताहरूले प्रार्थना गरेपछि सृष्टिको रक्षा र मर्यादाको प्रतिष्ठाका लागि सर्वप्रथम ब्रह्माले एक विशाल ग्रन्थको निर्माण गर्नुभयो जुन नीतिशास्त्र नामले परिचित भयो जसमा एक लाख अध्याय रहेका थिए। यही नै आदिनीतिशास्त्र थियो। केही समयपछि भगवान् शङ्करले त्यो नीतिशास्त्रलाई सङ्क्षिप्त गरिदिनुभयो। पछि मानिसको स्मरणशक्ति, सामर्थ्य आदिलाई दृष्टिगत गरी त्यही नीतिशास्त्रलाई इन्द्र, बृहस्पति, शुक्राचार्य आदिले सङ्क्षिप्त बनाए। शुक्राचार्यको नीतिशास्त्रमा एक हजार अध्याय थिए। यसरी नीतिशास्त्रको लोकमा प्रचारप्रसार भएको हो भन्ने आख्यान पाइन्छ। महर्षि वेदव्यासद्वारा रचित सम्पूर्ण महाभारतमा एक लाख श्लोक रहेका छन्। यसमा पाण्डव-कौरवको युद्धको वर्णनका साथ भारतवर्षको सर्वस्व नष्ट भएको कथाको वर्णन गरिएको छ। महाभारतलाई संस्कृत वाङ्मयको अजस्र स्रोत तथा उपजीव्य आधारस्तम्भ मानिन्छ। त्यसैले महाभारतमा भनिएको छ– 'यदिहास्ति तदन्यत्र यन्नेहास्ति न तत्क्वचित्' अर्थात् जुन कुरा यहाँ वर्णन गरिएको छ त्यो सर्वत्र छ र जुन कुरा यहाँ पाइँदैन त्यो अन्यत्र कहीँ पनि पाइँदैन। महाभारतको अनुशासनपर्व र शान्तिपर्वमा सम्पूर्ण राजधर्म, राजशास्त्र र नीतिशास्त्रको वर्णन गरिएको छ। कतै भगवान् श्रीकृष्णद्वारा, कतै भीष्मद्वारा, कहीँ ऋषिमहर्षिहरूद्वारा त कहीँ धर्मराज युधिष्ठिरको माध्यमद्वारा समस्त नीति उपन्यस्त छ। कूटनीतिको आदिस्रोत पनि महाभारत नै हो। यसमा कूटनीतिका दुई आचार्यको नीतिको वर्णन पाइन्छ। ती दुईमध्ये धृतराष्ट्रका अमात्य कणिक र सौवीरनरेश शत्रुञ्जयका मन्त्री भारद्वाज कणिक हुन्।

राष्ट्ररक्षाका लागि कूटनीतिको प्रयोग गर्न सकिन्छ, तर यहाँ यो पनि सावधान गराइएको छ कि साधारण स्थितिमा र साधनसम्पन्नताको स्थितिमा कूटनीतिको प्रयोग कदापि गर्नु हुँदैन।

यही महाभारतको उद्योगपर्वअन्तर्गतको प्रजागरपर्वमा विदुरनीति रहेको छ। यो महात्मा विदुरले जन्मना अन्धा तथा पुत्रमोहका कारण कर्मणा पनि अन्धा आफ्ना दाजु धृतराष्ट्रलाई दिएको उपदेश हो। '...मोहान्धा नैव पश्यन्ति' भनेअनुसार धृतराष्ट्रले पुत्रमोहका कारण तद्वत् आचरण गरे जसले गर्दा भारतवर्षको सर्वस्व गुम्यो। विदुर धृतराष्ट्र एवम् पाण्डुका कान्छा भाइ थिए। दासीपुत्र भएका कारण उनी राज्यका अधिकारी थिएनन्। पाण्डु वनवास गएपछि धृतराष्ट्र राजा बने र विदुर उनका मन्त्री बनेका थिए। राजा अन्धा भएका कारण पनि सम्पूर्ण राज्यको देखभाल उनले नै गरेका थिए। उनको विद्वत्ता, सदाचार र धर्मप्रियताबाट सबै परिचित थिए। राजा धृतराष्ट्रले आफ्नो छोरो दुर्योधनको कुरा सुनेर पाण्डवहरूलाई कष्ट दिन थालेपछि विदुरले उनको विरोध गर्दै सभामै भने– "पाण्डुका पुत्र पनि हजुरकै पुत्र हुन्। तपाईंका पुत्रहरू र पाण्डवबीच भेदभावको व्यवहार गर्नु हुँदैन।" धृतराष्ट्र विदुरको सामु पाण्डवका विरुद्ध केही भन्दैनथे।

महाभारतअन्तर्गत रहेको विदुरनीति सार्वदेशिक एवम् सर्वमान्य रहेको छ भन्ने कुरामा कसैको द्विमत छैन। यसमा धर्म, व्यवहार, सदाचार, नीति, सुखदु:खप्राप्तिका साधन, त्याज्य एवम् ग्राह्य गुण तथा कर्मको निर्णय, त्यागको महिमा, न्यायको स्वरूप, सत्य, परोपकार, क्षमा, अहिंसा, मित्रको लक्षण, कृतघ्नको दुर्दशा, निर्लोभता आदिको विशद वर्णन गर्दै राजधर्मको निरूपण गरिएको छ। विदुरनीति विद्वान्, मूर्ख, तरुण, वृद्ध, बालक, स्त्रीपुरुष, शासक, प्रजा, धनी, गरिब, विद्यार्थी, शिक्षक, सेवक, योद्धा तथा सुखी जीवन निर्वाह गर्न चाहने प्रत्येक व्यक्तिका लागि त्यत्तिकै उपयोगी रहेको छ।

अन्त्यमा नेपाल संस्कृत विश्वविद्यालयका पूर्व उपकुलपति प्रा. माधवराज गौतमले नीतिशास्त्र र विदुरनीतिका सम्बन्धमा लेख्नुभएको अनुसन्धानात्मक मन्तव्यले यस ग्रन्थको गरिमालाई अझ उचाइमा पुऱ्याएको छ। विदुरनीतिको नेपाली भावार्थसहित तयार भएको टङ्कित प्रति लिएर उहाँसमक्ष जाँदा अनुसन्धानात्मक मन्तव्य लेख्नका लागि उहाँले देखाउनुभएको अग्रसरताबाट म अत्यन्त प्रभावित भएको छु जसले गर्दा म उहाँप्रति सदासदाका लागि नतमस्तक छु। यसै गरी रत्न पुस्तक भण्डारमा यसको प्रकाशनका लागि जाँदा प्रकाशकले देखाएको अग्रसरता मेरा लागि प्रेरणाको स्रोत बनेको छ। यसका लागि रत्न पुस्तक भण्डारलाई हार्दिक धन्यवाद दिन चाहन्छु।

# प्रथमोऽध्यायः

वैशम्पायन उवाच

**द्वाःस्थं प्राह महाप्राज्ञो धृतराष्ट्रो महीपतिः।**
**विदुरं द्रष्टुमिच्छामि तमिहानय मा चिरम्।।१।।**

वैशम्पायनले भने– (सञ्जय गइसकेपछि) महाबुद्धिमान् राजा धृतराष्ट्रले द्वारपालसँग भने– म विदुरलाई भेट्न चाहन्छु। उनलाई बोलाएर छिट्टै यहाँ ल्याऊ।।१।।

**प्रहितो धृतराष्ट्रेण दूतः क्षत्तारमब्रवीत्।**
**ईश्वरस्त्वां महाराजो महाप्राज्ञ दिदृक्षति।।२।।**

धृतराष्ट्रद्वारा पठाइएको दूतले विदुरसामु गएर भन्यो– महामते ! स्वामी धृतराष्ट्रले तपाईंलाई भेट्न चाहनुभएको छ।।२।।

**एवमुक्तस्तु विदुरः प्राप्य राजनिवेशनम्।**
**अब्रवीत् धृतराष्ट्राय द्वाःस्थं मां प्रतिवेदय।।४।।**

यसरी बोलाइएका विदुरले राजदरबारमा गएर द्वारपाललाई भने– धृतराष्ट्रलाई म यहाँ आइपुगेको सूचना देऊ।।३।।

द्वाःस्थ उवाच

**विदुरोऽयमनुप्राप्तो राजेन्द्र तव शासनात्।**
**द्रष्टुमिच्छति ते पादौ किं करोतु प्रशाधि माम्।।४।।**

द्वारपालले भन्यो– महाराज! तपाईंको आज्ञाले विदुर यहाँ आइपुग्नुभएको छ। उहाँ तपाईंका चरणको दर्शन गर्न चाहनुहुन्छ। मलाई आज्ञा दिनुहोस्, म उहाँलाई के भनूँ?।।४।।

धृतराष्ट्र उवाच

**प्रवेशय महाप्राज्ञं विदुरं दीर्घदर्शिनम्।**
**अहं हि विदुरस्यास्य नाकल्पो जातु दर्शने।।५।।**

धृतराष्ट्रले भने– महाबुद्धिमान् दूरदर्शी विदुरलाई छिट्टै लिएर आऊ, मलाई विदुरसँग भेट्न कुनै आपत्ति छैन।।५।।

द्वास्थ उवाच

**प्रविशान्तःपुरं क्षत्तर्महाराजस्य धीमतः।**
**न हि ते दर्शनेऽकल्पो जातु राजाऽब्रवीद्धि माम्।।६।।**

द्वारपालले विदुरसँग आएर भन्यो– विदुरजी! हजुर बुद्धिमान् महाराज धृतराष्ट्रको अन्तःपुरमा प्रवेश गर्नुहोस्। महाराजले मलाई भन्नुभएको छ– विदुरसँग भेट्न मलाई कुनै आपत्ति छैन।।६।।

वैशम्पायन उवाच

**ततः प्रविश्य विदुरो धृतराष्ट्रनिवेशनम्।**
**अब्रवीत् प्राञ्जलिर्वाक्यं चिन्तमानं नराधिपम्।।७।।**

वैशम्पायन भन्छन्– त्यसपछि विदुर धृतराष्ट्रको महलमा गएर चिन्तामा डुबेका राजासँग हात जोडेर भन्न थाले।।७।।

**विदुरोऽहं महाप्राज्ञ सम्प्राप्तस्तव शासनात्।**
**यदि किञ्चिन कर्तव्यमयमस्मि प्रशाधि माम्।।८।।**

महाप्राज्ञ! महाराज, म विदुर हजुरको आज्ञाले यहाँ उपस्थित भएको छु। यदि मैले गर्न योग्य कुनै कार्य छ भने म मलाई आज्ञा दिनुहोस्।।८।।

धृतराष्ट्र उवाच

**सञ्जयो विदुर! प्राज्ञो गर्हयित्वा च मां गतः।**
**अजातशत्रो श्वो वाक्यं सभामध्ये च वक्ष्यति।।९।।**

धृतराष्ट्रले भने– विदुर! बुद्धिमान् सञ्जय आएका थिए, मलाई भन्नु-नभन्नु भनेर गए। भोलि सभामा अजातशत्रु युधिष्ठिरको वचन सुनाउने छन्।।९।।

**तस्याद्य कुरुवीरस्य न विज्ञातं वचो मया।**
**तन्मे दहति गात्राणि तदकार्षीत् प्रजागरम्।।१०।।**

मैले कुरुवीर युधिष्ठिरको वचन जान्न नसकेका कारण आज मेरा अङ्ग जलिरहेका छन्। यसैले मलाई अहिलेसम्म निद्रा पनि लागेको छैन।।१०।।

**जाग्रतो दह्यमानस्य श्रेयो यदनुपश्यसि।**
**तद् ब्रूहि त्वं हि नस्तात धर्मार्थकुशलो ह्यसि।।११।।**

तात! म चिन्ताले जलिरहेका कारण अहिलेसम्म जागै छु। मेरा लागि जुन कल्याणकारी कुरा छ त्यो बताऊ, किनभने हामीमध्ये तिमी नै धर्म र अर्थको ज्ञानमा कुशल छौ।।११।।

**यतः प्राप्तः सञ्जयः पाण्डवेभ्यो**
**न मे यथावन्मनसः प्रशान्तिः।**
**सर्वेन्द्रियाण्यप्रकृतिं गतानि**
**किं वक्ष्यतीत्येव मेऽद्य प्रचिन्ता।।१२।।**

सञ्जय जब पाण्डवहरूसँग भेटेर आए त्यही समयदेखि मेरो मनमा शान्ति छैन। सबै इन्द्रियहरू विकल भइरहेका छन्। भोलि त्यसले के भन्छ भन्ने कुराले मेरो मन व्याकुल बनाइरहेको छ।।१२।।

विदुर उवाच

**अभियुक्तं बलवता दुर्बलं हीनसाधनम्।**
**हृतस्वं कामिनं चौरमाविशन्ति प्रजागराः।।१३।।**

विदुरले भने– हे राजन्! जसको बलवान्का साथ विरोध हुन्छ, जो साधनहीन तथा दुर्बल छ, जसको सर्वस्व हरण गरिएको छ, जो कामी छ र जसले चोरी गर्छ त्यस्तो व्यक्तिलाई रातमा जाग्ने रोग लाग्छ।।१३।।

**कच्चिदेतैर्महादोषैर्न स्पृष्टोऽसि नराधिप।**
**कच्चिच्च परवित्तेषु गृध्यन्न परितप्यसे।।१४।।**

हे नराधिप! कतै हजुर पनि यी महादोषको सम्पर्कमा त हुनुहुन्न? कहीँ अर्काको धनको लोभका कारण हजुरले कष्ट त पाइरहनुभएको छैन?।।१४।।

धृतराष्ट्र उवाच

**श्रोतुमिच्छामि ते धर्म्यं परं नैःश्रेयसं वचः।**
**अस्मिन् राजर्षिवंशे हि त्वमेकः प्राज्ञसम्मतः।।१५।।**

धृतराष्ट्रले भने– म तिम्रा धर्मयुक्त एवम् कल्याणकारी वचन सुन्न चाहन्छु, किनभने यो राजर्षि वंशमा तिमी नै विद्वान्हरूद्वारा पनि माननीय रहेका छौ।।१५।।

विदुर उवाच

**राजलक्षणसम्पन्नस्त्रैलोक्यस्याधिपो भवेत्।**
**प्रेष्यस्ते प्रेषितश्चैव धृतराष्ट्र! युधिष्ठिरः।।१६।।**

विदुरले भने– महाराज धृतराष्ट्र! श्रेष्ठ लक्षणले सम्पन्न राजा युधिष्ठिर तीनै लोकका स्वामी बन्न सक्छन्। उनी हजुरका आज्ञाकारी पनि छन्, तर उनलाई हजुरले वनमा पठाइदिनुभयो।।१६।।

**विपरीततरश्च त्वं भागधेये न सम्मतः।**
**अर्चिषां प्रक्षयाच्चैव धर्मात्मा धर्मकोविदः।।१७।।**

हजुर धर्मात्मा एवम् धर्मका जानकार हुँदाहुँदै पनि अन्धो भएका कारण उनलाई चिन्न असक्षम हुनुभयो जसको परिणामस्वरूप उनीहरूको विपरीत हुनुभयो र उनीहरूलाई राज्यको भाग दिने कुरामा हजुर सहमत हुनुभएन।।१७।।

**आनृशंस्यादनुक्रोशाद् धर्मात् सत्यात् पराक्रमात्।**
**गुरुत्वात् त्वयि सम्प्रेक्ष्य बहून् क्लेशांस्तितिक्षते।।१८।।**

युधिष्ठिरमा क्रूरताको अभाव, दया, धर्म, सत्य एवम् पराक्रम छ। उनले हजुरलाई सम्मान पनि गर्छन्। यिनै सद्गुणका कारण उनले सोचविचार गरेर धेरै दुःख सहिरहेका छन्।।१८।।

**दुर्योधने सौबले च कर्णे दुःशासने तथा।**
**एतेष्वैश्वर्यमाधाय कथं त्वं भूतिमिच्छसि।।१९।।**

हजुर दुर्योधन, शकुनि, कर्ण तथा दुःशासनजस्ता अयोग्य व्यक्तिहरूलाई राज्यको भार सुम्पेर कसरी ऐश्वर्यको कामना गर्नुहुन्छ?।।१९।।

## पण्डितस्य लक्षणानि

**आत्मज्ञानं समारम्भस्तितिक्षा धर्मनित्यता।**
**यमर्था नापकर्षन्ति स वै पण्डित उच्यते।।२०।।**

आफ्नो वास्तविक स्वरूपको ज्ञान, उद्योग, दुःख सहने शक्ति र धर्ममा स्थिरताजस्ता गुणहरू जसमा रहन्छन् त्यो मनुष्य पुरुषार्थबाट च्युत हुँदैन र त्यही नै पण्डित हो।।२०।।

**निषेवते प्रशस्तानि निन्दितानि न सेवते।**
**अनास्तिकः श्रद्दधान एतत् पण्डितलक्षणम्।।२१।।**

जसले राम्रा कर्म गर्छ, जो नराम्रा कर्मबाट टाढा रहन्छ र जसमा आस्तिक एवम् श्रद्धायुक्त बुद्धि छ उसका यी सद्गुण पण्डित हुनुका लक्षण हुन्।।२१।।

**क्रोधो हर्षश्च दर्पश्च ह्रीः स्तम्भो मान्यमानिता।**
**यमर्थान् नापकर्षन्ति स वै पण्डित उच्यते।।२२।।**

क्रोध, हर्ष, गर्व, लज्जा, उद्दण्डता एवम् आफूलाई पूज्य मान्नेजस्ता भावले जसलाई आकर्षित गर्न सक्दैनन् त्यस्ता व्यक्ति पण्डितको कोटिमा आउँछन्।।२२।।

**यस्य कृत्यं न जानन्ति मन्त्रं वा मन्त्रितं परे।**
**कृतमेवास्य जानन्ति स वै पण्डित उच्यते।।२३।।**

जुन कार्यको परिणाम आउनुपहिलेको गोप्य कुरा र गोपनीय कार्य अन्य कसैले जान्दैनन्, परिणाम आएपछि मात्र जान्दछन् ती व्यक्ति नै पण्डितको कोटिमा आउँछन्।।२३।।

**यस्य कृत्यं न विघ्नन्ति शीतमुष्णं भयं रतिः।**
**समृद्धिरसमृद्धिर्वा स वै पण्डित उच्यते।।२४।।**

ठन्डी-गर्मी, भय-अनुराग, सम्पत्ति-विपत्ति आदिले जसको कार्यमा विघ्न पार्न सक्दैनन् तिनै व्यक्ति नै पण्डितको कोटिमा आउँछन्।।२४।।

**यस्य संसारिणी प्रज्ञा धर्मार्थावनुवर्तते।**
**कामादर्थं वृणीते यः स वै पण्डित उच्यते।।२५।।**

जसको लौकिक बुद्धिले धर्म र अर्थको अनुसरण गर्छ, जसले भोग (काम) लाई छाडेर धर्मार्थरूप पुरुषार्थलाई नै वरण गर्छ त्यही नै पण्डित कहलाउँछ।।२५।।

**यथाशक्ति चिकीर्षन्ति यथाशक्ति च कुर्वते।**
**न किञ्चिदवमन्यन्ते नराः पण्डितबुद्धयः।।२६।।**

विवेकपूर्ण बुद्धिमान् व्यक्ति शक्तिअनुसार काम गर्ने इच्छा राख्छन् र गर्छन् पनि र कुनै पनि वस्तुलाई तुच्छ सम्झेर अवहेलना पनि गर्दैनन्।।२६।।

**क्षिप्रं विजानाति चिरं शृणोति**
**विज्ञाय चार्थं भजते न कामात्।**
**नासम्पृष्टो व्युपयुङ्क्ते परार्थे**
**तत् प्रज्ञानं प्रथमं पण्डितस्य।।२७।।**

विद्वान् व्यक्तिले कुनै पनि विषयलाई लामो समयसम्म सुन्छन्, तर छिटै सम्झेर कर्तव्यबुद्धिका साथ पुरुषार्थमा प्रवृत्त हुन्छन्, कामनाले होइन। नसोधीकन अर्काका विषयमा कुनै कुरा गर्दैनन्। उनको यो स्वभाव नै पण्डितको मुख्य पहिचान हो।।२७।।

**नाप्राप्यमभिवाञ्छन्ति नष्टं नेच्छन्ति शोचितुम्।**
**आपत्सु च न मुह्यन्ति नराः पण्डितबुद्धयः।।२८।।**

पण्डितको जस्तो बुद्धि राख्ने मनुष्यले दुर्लभ वस्तुको कामना पनि गर्दैनन्, नष्ट तथा हराएको वस्तुका विषयमा पनि चिन्ता तथा शोक गर्दैनन् र विपत्ति परेको अवस्थामा पनि हडबडाउँदैनन्।।२८।।

**निश्चित्य यः प्रक्रमते नान्तर्वसति कर्मणः।**
**अवन्ध्यकालो वश्यात्मा स वै पण्डित उच्यते।।२९।।**

जसले पहिले निश्चय गरेर कार्यको आरम्भ गर्छन्, कार्यको बीचमा रोकिँदैनन्, समयलाई व्यर्थ खर्च गर्दैनन् र चित्तलाई वशमा राख्न सक्छन् तिनै व्यक्ति पण्डितको कोटिमा आउँछन्।।२९।।

**आर्यकर्मणि रज्यन्ते भूतिकर्माणि कुर्वते।**
**हितं च नाभ्यसूयन्ति पण्डिता भरतर्षभ!।।३०।।**

हे भरतकुलभूषण! जसले श्रेष्ठ कर्ममा रुचि राख्छन्, उन्नति गर्छन्, राम्रो गर्नेको दोष खोज्दैनन् त्यस्तालाई पण्डित भनिन्छ।।३०।।

**न हृष्यत्यात्मसम्माने नावमानेन तप्यते।**
**गाङ्गो ह्रद इवाक्षोभ्यो यः स पण्डित उच्यते।।३१।।**

जो कसैले सम्मान गर्दा अति हर्षित पनि हुँदैनन् र अनादर हुँदा पनि दुःखित हुँदैनन् तथा गङ्गाको कुण्ड मानसरोवर समान जसको चित्त शान्त र क्षोभयुक्त हुँदैन त्यो व्यक्ति पण्डित मानिन्छ।।३१।।

**तत्त्वज्ञः सर्वभूतानां योगज्ञः सर्वकर्मणाम्।**
**उपायज्ञो मनुष्याणां नरः पण्डित उच्यते।।३२।।**

जसले सम्पूर्ण भौतिक पदार्थको वास्तविकताका सम्बन्धमा ज्ञान राख्छ, सम्पूर्ण कर्म गर्ने ज्ञान राख्छ, कर्म गर्ने उपायको जानकार मनुष्यलाई पण्डित मानिन्छ।।३२।।

**प्रवृत्तवाक् विचित्रकथ ऊहवान् प्रतिभानवान्।**
**आशु ग्रन्थस्य वक्ता च यः स पण्डित उच्यते।।३३।।**

जसको वाणी कहीँ रोकिँदैन, जसले विचित्र ढङ्गले कुरा गर्छ, जो तर्कमा निपुण र प्रतिभाशाली छ तथा जसले ग्रन्थको तात्पर्य छिटै बताउन सक्छ त्यसलाई पण्डित भनिन्छ।।३३।।

**श्रुतं प्रज्ञानुगं यस्य प्रज्ञा चैव श्रुतानुगा।**
**असम्भिन्नयम्मर्यादः पण्डिताख्यां लभेत सः।।३४।।**

जसको विद्याले बुद्धिको अनुसरण गर्छ र बुद्धिले विद्याको अनुसरण गर्छ, जसले शिष्ट व्यक्तिहरूको मर्यादा उल्लङ्घन गर्दैन त्यही नै पण्डित हो।।३४।।

**अश्रूतश्च समुन्नद्धो दरिद्रश्च महामनाः।**
**अर्थांश्चाकर्मणा प्रेप्सुर्मूढ इत्युच्यते बुधैः।।३५।।**

जसले पढेको छैन तर गर्व (घमन्ड) गर्छ, दरिद्र छ तर ठूलठूला चाहना राख्छ र बिना कर्म धनको अभिलाषा राख्छ त्यस्तो व्यक्तिलाई विद्वान्हरू मूर्ख भन्छन्।।३५।।

**स्वमर्थं यः परित्यज्य परार्थमनुतिष्ठति।**
**मिथ्या चरति मित्रार्थे यश्च मूढः स उच्यते।।३६।।**

जसले आफ्नो कर्तव्यलाई छाडेर अर्काको कर्तव्य पालन गर्छ तथा मित्रका साथ असद् आचरण गर्छ त्यस्तो व्यक्तिलाई मूर्ख भनिन्छ।।३६।।

**अकामान् कामयति यः कामयानान् परित्यजेत्।**
**बलवन्तं च यो द्वेष्टि तमाहुर्मूढचेतसम्।।३७।।**

जसले नचाहने कुराको चाहना गर्छ र चाहनुपर्ने कुरालाई त्याग्छ तथा आफूभन्दा बलवान्का साथ द्वेष गर्छ त्यसलाई मूढ विचारले युक्त मनुष्य भनिन्छ।।३७।।

**अमित्रं कुरुते मित्रं मित्रं द्वेष्टि हिनस्ति च।**
**कर्म चारभते दुष्टं तमाहुर्मूढचेतसम्।।३८।।**

जसले शत्रुलाई मित्र बनाउँछ र मित्रसँग द्वेष गर्दै मित्रलाई कष्ट पुऱ्याउँछ तथा सधै नराम्रो कर्म गर्छ त्यस्तो व्यक्तिलाई मूढ चित्तले युक्त मनुष्य भनिन्छ।।३८।।

**संसारयति कृत्यानि सर्वत्र विचिकित्सते।**
**चिरं करोति क्षिप्रार्थे स मूढो भरतर्षभ:।।३९।।**

हे भरतश्रेष्ठ! जसले आफ्नो कार्यलाई व्यर्थमा फैलाउँछ र सर्वत्र सन्देह गर्छ तथा छिटै हुने कार्यलाई लामो समयसम्म लगाउँछ त्यो मूर्ख हो।।३९।।

**श्राद्धं पितृभ्यो न ददाति दैवतानि च नार्चति।**
**सुहृन्मित्रं न लभते तमाहुर्मूढचेतसम्।।४०।।**

जसले पितृका लागि श्राद्ध गर्दैन, देवताको पूजा पनि गर्दैन, जसका सच्चा मित्र पनि हुँदैनन् त्यो मूढ चित्तले युक्त मानिस हो।।४०।।

**अनाहुत: प्रविशति अपृष्टो बहु भाषते।**
**अविश्वस्ते विश्वसिति मूढचेता नराधम:।।४१।।**

जो नबोलाएको ठाउँमा जान्छ, जो नसोध्दानसोध्दै पनि अनेक कुरा गर्छ, जो अविश्वस्त व्यक्तिहरूलाई विश्वास गर्छ त्यो मूढ चित्तले युक्त नराधम हो।।४१।।

**परं क्षिपति दोषेण वर्तमानः स्वयं तथा।**
**यश्च क्रुध्यत्यनीशानः स च मूढतमो नरः।।४२।।**

जो स्वयम् दोषयुक्त हुँदाहुँदै पनि अर्कालाई दोष लगाउँछ र आफू असमर्थ हुँदाहुँदै पनि व्यर्थ क्रोध गर्छ त्यस्तो व्यक्तिलाई महामूर्ख भनिन्छ।।४२।।

**आत्मनो बलमज्ञाय धर्मार्थपरिवर्जितम्।**
**अलभ्यमिच्छन्नैष्कर्म्यान्मूढबुद्धिरिहोच्यते।।४३।।**

जसले आफ्नो क्षमतालाई नसम्झिएर कर्म नगरी धर्मार्थ विरुद्ध तथा नपाउने वस्तु प्राप्त गर्ने इच्छा गर्छ त्यस्तो व्यक्तिलाई संसारमा मूढबुद्धि भनिन्छ।।४३।।

**अशिष्यं शास्ति यो राजन् यश्च शून्यमुपासते।**
**कदर्यं भजते यश्च तमाहुर्मूढचेतसम्।।४४।।**

हे राजन्! जसले अनधिकारीलाई उपदेश दिन्छ र शून्यको उपासना गर्छ तथा जसले कृपणको आश्रय लिन्छ त्यसलाई मूढ चित्तले युक्त भनिन्छ।।४४।।

**अर्थं महान्तमासाद्य विद्यामैश्वर्यमेव वा।**
**विचरत्यसमुन्नद्धो यः स पण्डित उच्यते।।४५।।**

जो धन, विद्या एवम् ऐश्वर्ययुक्त हुँदाहुँदै पनि उन्मत्त हुँदैन त्यसलाई पण्डित भनिन्छ।।४५।।

**एकः सम्पन्नमश्नाति वस्ते वासश्च शोभनम्।**
**योऽसंविभज्य भृत्येभ्यः को नृशंसतरस्ततः।।४६।।**

जसले भरणपोषण गर्नुपर्ने व्यक्तिलाई भरणपोषण नगरी एक्लै मीठो खान्छ र राम्रा कपडा लगाउँछ त्योभन्दा ठूलो क्रूर व्यक्ति अरू हुन सक्दैन।।४६।।

**एकः पापानि कुरुते फलं भुङ्क्ते महाजनः।**
**भोक्तारो विप्रमुच्यन्ते कर्ता दोषेण लिप्यते।।४७।।**

मनुष्यले पाप एक्लै गर्छ, तर त्यसको फलको भोग धेरैले गर्छन्, त्यसको भोग गर्नेहरू त छुट्छन्, त्यो दोषको भागी कर्ता हुन्छ।।४७।।

**एकं हन्यान्न वा हन्यादिषुर्मुक्तो धनुष्मता।**
**बुद्धिर्बुद्धिमतोत्सृष्टा हन्याद् राष्ट्रं सराजकम्।।४८।।**

कुनै धनुर्धर वीर व्यक्तिद्वारा छाडिएको बाणले सम्भवतः एकलाई मार्ला या नमार्ला, तर बुद्धिमान्द्वारा प्रयुक्त बुद्धिले राजाका साथसाथै सम्पूर्ण राष्ट्रको विनाश गर्न सक्छ।।४८।।

**एकया द्वे विनिश्चित्य त्रींश्चतुर्भिर्वशे कुरु।**
**पञ्च जित्वा विदित्वा षट् सप्त हित्वा सुखी भव।।४९।।**

एक (बुद्धि)-बाट, दुई (कर्तव्याकर्तव्य), तीन (शत्रु, मित्र र उदासीन)-लाई जानेर, चार (साम, दान, दण्ड र भेद)-लाई विचार गरेर, पाँच (इन्द्रियहरू)-लाई जितेर, छ (सन्धि, विग्रह, यान, आसन, द्वैधीभाव र समाश्रयरूप) गुणलाई जानेर तथा सात (स्त्री, जुवा, मृगया, मद्य, कठोर वचन, कठोर दण्ड र अन्यायबाट धनार्जन)-लाई छाडेर सुखी बन्नुहोस्।।४९।।

**एकं विषरसो हन्ति शस्त्रेणैकश्च वध्यते।**
**सराष्ट्रं सप्रजं हन्ति राजानं मन्त्रविप्लवः॥५०॥**

विष पिउँदा एउटा पिउने मात्र मर्छ, शस्त्रबाट एउटाको मात्र हत्या हुन्छ, तर मन्त्रणा बाहिर आयो भने राष्ट्र र प्रजाका साथै राजाको पनि विनाश हुन्छ॥५०॥

**एकः स्वादु न भुञ्जीत एकश्चार्थान्न चिन्तयेत्।**
**एको न गच्छेदध्वानं नैकः सुप्तेषु जागृयात्॥५१॥**

स्वादिष्ट भोजन एक्लै नगरोस्, कुनै विषयमा पनि एक्लै निश्चय नगरोस्, एक्लै नहिँडोस्, एक्लै सुतेको मानिसलाई नजगाओस्॥५१॥

**एकमेवाद्वितीयं तद् यद् राजन् नावबुद्ध्यसे।**
**सत्यं स्वर्गस्य सोपानं पारावारस्य नौरिव॥५२॥**

हे राजन्! जसरी समुद्र पार गर्नका लागि डुङ्गा एकमात्र साधन हो त्यसै गरी स्वर्गका लागि एकमात्र सोपान सत्य हो, हजुरले यो कुरा बुझ्नुभएको छैन॥५२॥

**एकः क्षमावतां दोषो द्वितीयो नोपपद्यते।**
**यदेनं क्षमया युक्तमशक्तं मन्यते जनः॥५३॥**

क्षमाशील व्यक्तिको एउटा मात्र दोष क्षमा हो, अर्को कुनै दोष पाइँदैन। मानिसहरूले क्षमाशील मनुष्यलाई असमर्थ भनी दोष लगाउँछन्॥५३॥

**सोऽस्य दोषो न मन्तव्यः क्षमा किं परमं बलम्।**
**क्षमा गुणो ह्यशक्तानां शक्तानां भूषणं क्षमा॥५४॥**

क्षमाशील मनुष्यको त्यो दोषलाई दोष मान्नु हुँदैन, किनभने क्षमा ठूलो बल हो। क्षमा असमर्थ व्यक्तिको गुण हो भने समर्थ व्यक्तिको भूषण हो।।५४।।

**क्षमा वशीकृतिर्लोके क्षमया किं न साध्यते।**
**शान्तिखड्गः करे यस्य किं करिष्यति दुर्जनः।।५५।।**

यो जगत्मा क्षमा वशीकरणको रूप हो। क्षमाबाट के नै सिद्ध हुँदैन र? जसको हातमा शान्तिरूपी तरबार (क्षमा) छ त्यसलाई दुष्ट पुरुषले के नै गर्न सक्छन् र?।।५५।।

**अतृणे पतितो वह्निः स्वयमेवोपशाम्यति।**
**अक्षमावान् परं दोषैरात्मानं चैव योजयेत्।।५६।।**

सुकेको घाँस नभएको स्थानमा खसेको आगो आफैँ निभ्छ। क्षमाहीन पुरुषले आफू र अरूलाई पनि दोषको भागी बनाउँछ।।५६।।

**एको धर्मः परं श्रेयः क्षमैका शान्तिरुत्तमा।**
**विद्यैका परमा तृप्तिरहिंसैका सुखावहा।।५७।।**

केवल धर्म नै परम कल्याणकारी मानिएको छ। क्षमा नै शान्तिको एकमात्र सर्वश्रेष्ठ उपाय हो। एउटा विद्याले नै परम सन्तोष दिन्छ र एकमात्र अहिंसाबाट नै सुखप्राप्ति हुन्छ।।५७।।

**द्वाविमौ ग्रसते भूमिः सर्पो बिलशयानिव।**
**राजानं चाविरोद्धारं ब्राह्मणं चाप्रवासिनम्।।५८।।**

दुलोमा रहेका भ्यागुता आदि जीवलाई जसरी सर्पले खान्छ त्यसै गरी शत्रुबाट विरोध नगरिने राजा र परदेश नगएको ब्राह्मण यी दुवै नाश हुन्छन्।।५८।।

**द्वे कर्मणी नरः कुर्वन्नस्मिंल्लोके विरोचते।**
**अब्रुवन् परुषं किञ्चदसतोऽनर्चयंस्तथा।।५९।।**

थोरै पनि कठोर नबोल्ने र दुष्ट व्यक्तिलाई आदर नगर्ने यी दुई कर्म गर्ने पुरुषले यस लोकमा शोभा पाउँछन्।।५९।।

**द्वाविमौ पुरुषव्याघ्र परप्रत्ययकारिणौ।**
**स्त्रियः कामितकामिन्यो लोकः पूजितपूजकः।।६०।।**

कुनै अर्को नारीद्वारा चाहना गरिएको पुरुषलाई चाहने नारी र अरूद्वारा पूजित व्यक्तिलाई आदर गर्ने पुरुष गरी यी दुई प्रकारका मानिस अरूको विश्वास गरेर चल्नेवाला हुन्छन्।।६०।।

**द्वाविमौ कण्टकौ तीक्ष्णौ शरीरपरिशोषिणौ।**
**यश्चाधनः कामयते यश्च कुप्यत्यनीश्वरः।।६१।।**

जो निर्धन भएर पनि बहुमूल्य वस्तुको कामना गर्छन् र असमर्थ हुँदाहुँदै पनि क्रोध गर्छन् त्यस्ता दुई प्रकारका व्यक्ति आफ्नै शरीरलाई सुकाउने तीखा काँडासमान हुन्।।६१।।

**द्वाविमौ न विराजेते विपरीतेन कर्मणा।**
**गृहस्थश्च निरारम्भः कार्यवांश्चैव भिक्षुकः।।६२।।**

अकर्मण्य गृहस्थ र प्रपञ्चमा लागेको सन्न्यासी आफ्नो विपरीत कर्मका कारण यी दुईले शोभा पाउँदैनन्।।६२।।

**द्वाविमौ पुरुषौ राजन् स्वर्गस्योपरि तिष्ठतः।**
**प्रभुश्च क्षमया युक्तो दरिद्रश्च प्रदानवान्।।६३।।**

शक्तिशाली हुँदाहुँदै क्षमाशील व्यक्ति र दरिद्र हुँदाहुँदै दानशील व्यक्ति गरी यी दुई प्रकारका व्यक्तिले स्वर्गभन्दा पनि माथिल्लो स्थान प्राप्त गर्छन्।।६३।।

**न्यायार्जितस्य द्रव्यस्य बोद्धव्यौ द्वावतिक्रमौ।**
**अपात्रे प्रतिपत्तिश्च पात्रे चाप्रतिपादनम्।।६४।।**

न्यायपूर्वक उपार्जित धनको दुरुपयोग अपात्रलाई दिनु र सत्पात्रलाई नदिनुबाट हुन्छ।।६४।।

**द्वावम्भसि निवेष्टव्यौ गले बद्ध्वा दृढां शिलाम्।**
**धनवन्तमदातारं दरिद्रं चातपस्विनम्।।६५।।**

धनी भएर पनि दान नगर्ने र गरिब भएर पनि कष्ट सहन नसक्ने यी दुई प्रकारका व्यक्तिलाई गलामा ढुङ्गा बाँधेर डुबाइदिनुपर्छ।।६५।।

**द्वाविमौ पुरुषव्याघ्र सूर्यमण्डलभेदिनौ।**
**परिव्राड्योगयुक्तश्च रणे चाभिमुखो हतः।।६६।।**

योगयुक्त सन्न्यासी र सङ्ग्राममा मारिने योद्धाले सूर्यमण्डललाई पनि भेदन गरी ऊर्ध्व गति प्राप्त गर्छन्।।६६।।

**त्रयोपाया मनुष्याणां श्रूयन्ते भरतर्षभ।**
**कनीयान्मध्यमः श्रेष्ठ इति वेदविदो विदुः।।६७।।**

हे भरतश्रेष्ठ! मनुष्यको कार्यसिद्धिका लागि उत्तम, मध्यम र अधम गरी तीन प्रकारका न्यायानुकूल उपाय रहेका छन् जुन वेदवेत्ता विद्वान्हरूले जान्दछन्।।६७।।

**त्रिविधाः पुरुषां राजन्नुत्तमाधममध्यमाः।**
**नियोजयेद् यथावत् तांस्त्रिविधेष्वेन कर्मसु।।६८।।**

हे राजन्! उत्तम, मध्यम र अधम गरी तीन प्रकारका मानिसहरू हुन्छन् र यी तीन प्रकारका मानिसलाई यथायोग्य तीन प्रकारकै काममा लगाउनुपर्छ।।६८।।

**त्रय एवाधना राजन् भार्या दासस्तथा सुतः।**
**यत्ते समधिगच्छन्ति यस्य ते तस्य तद्धनम्।।६९।।**

हे राजन्! भार्या, पुत्र र दास गरी यी तीन प्रकारका व्यक्ति धनका अधिकारी मानिँदैनन्। यिनीहरू जसको अधीनमा हुन्छन्, यिनीहरूले कमाएको धन पनि त्यसैको अधीनमा हुन्छ।।६९।।

**हरणं च परस्वानां परदाराभिमर्शनम्।**
**सुहृदश्च परित्यागस्त्रयो दोषाः क्षयावहाः।।७०।।**

परस्वहरण, परस्त्रीगमन र सुहृद् मित्रको परित्याग गरी यी तीन प्रकारका मानिसले आफूलाई अधोगतिमा लैजान्छन्।।७०।।

**त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः।**
**कामः क्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत्।।७१।।**

आत्मालाई नाश गर्ने काम, क्रोध र लोभ गरी यी तीन नरकका द्वार हुन्। अतः यी तीन वटै कुरालाई परित्याग गर्नु उपयुक्त हुन्छ।।७१।।

**वरप्रदानं राज्यं च पुत्रजन्म च भारत।**
**शत्रोश्च मोक्षणं कृच्छ्रात् त्रीणि चैकं च तत्समम्।।७२।।**

हे भारत! वरदान, राज्यप्राप्ति र पुत्रजन्म गरी यी तीन र शत्रुबाट छुटकारा पाउनु एक बराबर मानिन्छन्।।७२।।

**भक्तं च भजमानं च तवास्मीति च वादिनम्।**
**त्रीनेतांश्छरणं प्राप्तान् विषमेऽपि न सन्त्यजेत्।।७३।।**

भक्त, सेवक र म हजुरकै हुँ यस्तो भन्ने गरी यी तीन प्रकारका शरणागत मनुष्यलाई सङ्कट परेको अवस्थामा पनि त्याग्नु हुँदैन।।७३।।

**चत्वारि राज्ञा तु महाबलेन वर्ज्यान्याहुः पण्डितस्तानि विद्यात्।**
**अल्पप्रज्ञैः सह मन्त्रं न कुर्यान्न दीर्घसूत्रैरभसैश्चारणैश्च।।७४।।**

अल्प बुद्धियुक्त व्यक्ति, दीर्घसूत्री, जल्दबाज र स्तुति गर्ने व्यक्तिहरूसँग सल्लाह गर्नु हुँदैन। यी चार प्रकारका व्यक्तिहरू महाबलि राजाले त्याग्न योग्य हुन्छन्। विद्वान् व्यक्तिले यस्ता व्यक्तिहरूको पहिचान गर्नु उपयुक्त हुन्छ।।७४।।

**चत्वारि ते तात गृहे वसन्तु श्रियाभिजुष्टस्य गृहस्थधर्मे।**
**वृद्धो ज्ञातिरवसन्नः कुलीनः सखा दरिद्रो भगिनी चानपत्या।।७५।।**

हे तात! कुटुम्बको बूढो व्यक्ति, सङ्कटमा परेको उच्च कुलको मनुष्य, धनहीन मित्र र बिना सन्तानका दिदीबहिनी गरी यी चार प्रकारका मनुष्य गृहस्थ धर्ममा रहेका मनुष्यका लागि उपयोगी मानिन्छन्।।७५।।

**चत्वारि हि महाराज साद्यस्कानि बृहस्पतिः।**
**पृच्छते त्रिदशेन्द्राय तानीमानि निबोध मे।।७६।।**

हे महाराज! इन्द्रले सोधेको अवस्थामा बृहस्पतिले यी जुन चार कुरा बताएका छन् ती तत्काल फल दिनेवाला भनेका छन्।।७६।।

**देवतानां च सङ्कल्पमनुभावं च धीमताम्।**
**विनयं कृतविद्यानां विनाशं पापकर्मणाम्।।७७।।**

देवताको सङ्कल्प, बुद्धिमान्को प्रभाव, विद्वान्को नम्रता र पापीको विनाश गरी यी चार कर्म निश्चय पनि तत्काल फलदायी हुन्छन्।।७७।।

**चत्वारि कर्माण्यभयङ्कराणि भयं प्रयच्छन्त्ययथाकृतानि।**
**मानाग्निहोत्रमुत मानमौनं मानेनाधीतमुत मानयज्ञः।।७८।।**

आदरका साथ अग्निहोत्र, आदरका साथ मौनको पालन, आदरपूर्वक स्वाध्याय र आदरका साथ यज्ञानुष्ठान गरी यी चार कर्म भयलाई भगाउने खालका हुन्छन्, तर यी चार कर्म ठीक ढङ्गले नगरेको अवस्थामा भय प्रदान गर्नेवाला पनि हुन्छन्।।७८।।

**पञ्चाग्नयो मनुष्येण परिचर्याः प्रयत्नतः।**
**पिता मातग्निरात्मा च गुरुश्च भरतर्षभ।।७९।।**

हे भरतश्रेष्ठ! पिता, माता, अग्नि, आत्मा र गुरु गरी यी पाँच अग्निको यत्नपूर्वक सेवा गर्नुपर्छ।।७९।।

**पञ्चैव पूजयंल्लोके यशः प्राप्नोति केवलम्।**
**देवान् पितृन् मनुष्यांश्च भिक्षूनतिथिपञ्चमान्।।८०।।**

देवता, पितृ, मनुष्य, सन्न्यासी र अतिथि गरी यी पाँचको पूजा गर्ने मनुष्यले यश प्राप्त गर्छ।।८०।।

**पञ्च त्वानुगमिष्यन्ति यत्र यत्र गमिष्यसि।**
**मित्राण्यमित्रा मध्यस्था उपजीव्योपजीविनः।।८१।।**

हे राजन्! मित्र, शत्रु, उदासीन, आश्रय दिने तथा आश्रय पाउने गरी यी पाँच प्रकारका व्यक्ति हजुर जहाँजहाँ जानुहुन्छ त्यहाँत्यहाँ प्राप्त हुन्छन्।।८१।।

**पञ्चेन्द्रियस्य मर्त्यस्य छिद्रं चेदेकमिन्द्रियम्।**
**ततोऽस्य स्रवति प्रज्ञा दृतेः पात्रादिवोदकम्।।८२।।**

पाँच ज्ञानेन्द्रियले युक्त पुरुषको यदि कुनै एक इन्द्रियमा दोष देखियो भने अर्थात् कुनै एक इन्द्रियलाई संयममा राख्न सकेन भने उसको बुद्धि पनि यसरी नाश हुन्छ जसरी प्वाल भएको भाँडाबाट पानी बाहिर निस्किएर भाँडो रित्तिन्छ।।८२।।

**षड् दोषाः पुरुषेणेह हातव्या भूतिमिच्छता।**
**निद्रा तन्द्रा भयं क्रोधं आलस्यं दीर्घसूत्रता।।८३।।**

कल्याण चाहने व्यक्तिले निद्रा, तन्द्रा, डर, क्रोध, आलस्य र दीर्घसूत्रता गरी यी छ दुर्गुणको परित्याग गर्नुपर्छ।।८३।।

**षडिमान् पुरुषो जह्याद् भिन्नां नावमिवार्णवे।**
**अप्रवक्तारमाचार्यमनधीयानमृत्विजम्।।८४।।**
**अरक्षितारं राजानं भार्यां चाप्रियवादिनीम्।**
**ग्रामकामं च गोपालं वनकामं च नापितम्।।८५।।**

उपदेश नदिने आचार्य, मन्त्रोच्चारण नगर्ने होता, रक्षा गर्न असमर्थ राजा, कटु वचन बोल्ने नारी, गाउँमा रहने इच्छा गर्ने ग्वाला र वनमा रहने इच्छा गर्ने नाउ गरी यी छ प्रकारका व्यक्तिलाई त्यसरी परित्याग गर्नुपर्छ जसरी समुद्रयात्रा गर्नेहरूले प्वाल परेको डुङ्गाको परित्याग गर्छन्।।८४–८५।।

**षडेव तु गुणाः पुंसां न हातव्याः कदाचन।**
**सत्यं दानमनालस्यमनसूया क्षमा धृतिः।।८६।।**

मनुष्यले सत्य, दान, अनसूया, अनालस्य, क्षमा र धृति गरी छ प्रकारका गुणहरू कहिल्यै पनि परित्याग गर्नु हुँदैन।।८६।।

**अर्थागमो नित्यमरोगिता च**
**प्रिया च भार्या प्रियवादिनी च।**
**वश्यश्च पुत्रोऽर्थकरी च विद्या**
**षड् जीवलोकस्य सुखानि राजन्।।८७।।**

हे राजन्! अर्थागम, नित्य निरोग, आफ्नो अनुकूल नारी तथा प्रियवादिनी नारी, आफ्नो वशमा रहेको छोरो र अर्थकरी विद्या गरी यी छ प्रकारका कुरा मनुष्यलोकमा सुखदायी मानिन्छन्।।८७।।

**षण्णामात्मनि नित्यानामैश्वर्यं योऽधिगच्छति।**
**न स पापैः कुतोऽनर्थैर्युज्यते विजितेन्द्रियः।।८८।।**

मनमा नित्य रहने यी छ प्रकारका शत्रुहरू काम, क्रोध, लोभ, मोह, मद र मात्सर्यलाई जसले वशमा पार्न सक्छ त्यो जितेन्द्रिय पुरुष पापबाट लिप्त हुँदैन भने त्यसबाट उत्पन्न हुने अनर्थको के नै कुरा भयो र?।।८८।।

**षडिमे षट्सु जीवन्ति सप्तमो नोपलभ्यते।**
**चौराः प्रमत्ते जीवन्ति व्याधितेषु चिकित्सकाः।।८९।।**
**प्रमदाः कामयानेषु यजमानेषु याजकाः।**
**राजा विवदमानेषु नित्यं मुर्खेषु पण्डिताः।।९०।।**

उल्लिखित छ प्रकारका मनुष्यले छ प्रकारका मनुष्यबाट आफ्नो जीविका चलाउँछन्, सातौँको उपलब्धि हुँदैन। असावधान पुरुषबाट चोरले, रोगीबाट वैद्यले, कामिनीले कामी पुरुषबाट, पुरोहितले यजमानबाट, राजाले झगडियाहरूबाट र विद्वान्ले मूर्खबाट आफ्नो जीविका चलाउँछन्।।८९-९०।।

**षडिमानि विनश्यन्ति मुहूर्तमनवेक्षणात्।**
**गावः सेवा कृषिर्भार्या विद्या वृषलसङ्गतिः।।९१।।**

गाई, सेवा, खेती, स्त्री, विद्या र नीच व्यक्तिसँगको सम्बन्ध क्षणभर पनि रेखदेख नगर्नाले नाश हुन्छन्।।९१।।

**षडेते ह्यवमन्यन्ते नित्यं पूर्वोपकारिणम्।**
**आचार्यं शिक्षिताः शिष्याः कृतदाराश्च मातरम्।।९२।।**
**नारीं विगतकामास्तु कृतार्थाश्च प्रयोजकम्।**
**नावं निस्तीर्णकान्तारा आतुराश्च चिकित्सितम्।।९३।।**

यी छ प्रकारका व्यक्ति उपकारपछि अनादृत र तिरस्कृत हुन्छन्– शिक्षा प्राप्त गरिसकेपछि शिष्यले गुरुको, विवाहित छोराले आमाको, कामवासना शान्त भइसकेपछि पुरुषले नारीलाई, काम पूर्ण भइसकेपछि सहायकलाई, नदी पार गरिसकेपछि डुङ्गालाई र रोग निको भइसकेपछि वैद्य।।९२–९३।।

**आरोग्यमानृण्यमविप्रवासः सद्भिर्मनुष्यैः सह सम्प्रयोगः।**
**स्वप्रत्ययावृत्तिरभीतवासः षड् जीवलोकस्य सुखानि राजन्।।९४।।**

हे राजन्! निरोग रहनु, ऋण नहुनु, परदेशमा नरहनु, राम्रा व्यक्तिहरूका साथ सङ्गत हुनु, आफ्नो वृत्तिबाट जीविका चल्नु र निडर भएर रहनु गरी यी छ वटा मनुष्यलोकका सुख हुन्।।९४।।

**ईर्ष्यी घृणी न सन्तुष्टः क्रोधनो नित्यशङ्कितः।**
**परभाग्योपजीवी च षडेते नित्यदुःखिताः।।९५।।**

ईर्ष्या गर्ने, घृणा गर्ने, असन्तोषी, क्रोधी, सदा सशङ्कित रहने र अर्काको भाग्यमा जीवन निर्वाह गर्ने गरी यी छ वटा सदा दुःखी रहन्छन्।।९५।।

**सप्त दोषाः सदा राजा हातव्या व्यसनोदयाः।**
**प्रायशो यैर्विनश्यन्ति कृतमूला अपीश्वराः।।९६।।**
**स्त्रियोऽक्षा मृगया पानं वाक्पारुष्यं च पञ्चमम्।**
**महच्च दण्डपारुष्यमर्थदूषणमेव च।।९७।।**

स्त्री विषयक आसक्ति, जुवा, सिकार, मद्यपान, कठोर वचन, कठोर दण्ड र धनको दुरुपयोग गरी यी सात प्रकारका दोषबाट राजा सदा टाढा रहनुपर्छ। यी सात प्रकारका दोषमा दृढमूल राजा पनि प्रायः नष्ट हुन्छन्।।९६–९७।।

**अष्टौ पूर्वनिमित्तानि नरस्य विनशिष्यतः।**
**ब्राह्मणान् प्रथमं द्वेष्टि ब्राह्मणैश्च विरुध्यते।।९८।।**
**ब्राह्मणस्वानि चादत्ते ब्राह्मणांश्च जिघांसति।**
**रमते निन्दया चैषां प्रशंसा नाभिनन्दति।।९९।।**
**नैनान् स्मरति कृत्येषु याचितश्चाभ्यसूयति।**
**एतान् दोषान्नरः प्राज्ञो बुद्ध्येद् बुद्ध्वा विवर्जयेत्।।१००।।**

ब्राह्मणसँग द्वेष गर्ने, ब्राह्मणलाई विरोधको पात्र बनाउने, ब्राह्मणको धन हडप्ने, ब्राह्मणलाई मार्न चाहने, ब्राह्मणको निन्दा हुँदा आनन्द मान्ने, ब्राह्मणको प्रशंसा सुन्न नचाहने, यज्ञयागादिमा ब्राह्मणलाई नसम्झने तथा केही मागेको अवस्थामा दोष निकाल्ने गरी यी आठ

दोष मनुष्यलाई विनाशतर्फ उन्मुख गराउने पूर्वचिह्न भएकाले बुद्धिमान् व्यक्तिले यी दोषहरूलाई त्यागिदिनुपर्छ।।९८–१००।।

**अष्टाविमानि हर्षस्य नवनीतानि भारत।**
**वर्तमानानि दृश्यन्ते तान्येव स्वसुखान्यपि।।१०१।।**
**समागमश्च सखिभिर्महांश्चैव धनागमः।**
**पुत्रेण च परिष्वङ्गः सन्निपातश्च मैथुने।।१०२।।**
**समये च प्रियालापः स्वयूथ्येषु समुन्नतिः।**
**अभिप्रेतस्य लाभश्च पूजा च जनसंसदि।।१०३।।**

हे भारत! मित्रहरूका साथको समागम, अधिक धनप्राप्ति, पुत्रको आलिङ्गन, मैथुनमा प्रवृत्ति, समयमा प्रिय वचन बोल्नु, आफ्नो वर्गका व्यक्तिहरूको उन्नति, अभीष्ट वस्तुको प्राप्ति र जनसमाजमा सम्मान यी आठ हर्षका सार रहेका छन् र यिनै लौकिक सुखका साधन पनि हुन्।।१०१–१०३।।

**अष्टौ गुणाः पुरुषं दीपयन्ति**
**प्रज्ञा च कौल्यं च दमः श्रुतं च।**
**पराक्रमश्चाबहुभाषिता च**
**दानं यथाशक्ति कृतज्ञता च।।१०४।।**

बुद्धि, कुलीनता, इन्द्रियनिग्रह, शास्त्रज्ञान, पराक्रम, धेरै नबोल्नु, शक्तिअनुसार दान र कृतज्ञता गरी यी आठ गुणले पुरुषको ख्याति बढाउँछन्।।१०४।।

**नवद्वारमिदं वेशम त्रिस्थूणं पञ्चसाक्षिकम्।**
**क्षेत्रज्ञाधिष्ठितं विद्वान् यो वेद स परः कविः।।१०५।।**

जुन विद्वान्ले नाक, कान आदि नवद्वार, वात, पित्त र कफयुक्त त्रिस्थूण शरीर, पाँच वटा ज्ञानेन्द्रियको साक्षीका रूपमा रहेको आत्माको निवासस्थानका रूपमा रहेको शरीररूपी गृहलाई जान्दछ त्यही नै सबैभन्दा ठूलो ज्ञानी हो।।१०५।।

**दश धर्मं न जानन्ति धृतराष्ट्र! निबोध तान्।**
**मत्तः प्रमत्तः उन्मत्तः श्रान्तः क्रूद्धो बुभुक्षितः।।१०६।।**
**त्वरमाणश्च लुब्धश्च भीतः कामी च ते दश।**
**तस्मादेतेषु सर्वेषु न प्रसज्जेत पण्डितः।।१०७।।**

हे महाराज धृतराष्ट्र! १० प्रकारका यी व्यक्तिले धर्मलाई जान्दैनन्। ती १० प्रकारका व्यक्तिमा नसामा रहने मतवाला, असावधान, पागल, थाकेको, क्रोधी, भोकाएको, जल्दबाज, लोभी, डराएको र कामी रहेका छन्। अतः यी व्यक्तिहरूमा विद्वान्ले आसक्ति नबढाउनू।।१०६–१०७।।

**अत्रैवोदाहरन्तीममितिहासं पुरातनम्।**
**पुत्रार्थमसुरेन्द्रेण गीतं चैव सुधन्वना।।१०८।।**

यसै विषयमा असुर राजा प्रह्लादले सुधन्वाका साथ आफ्नो पुत्रलाई केही उपदेश दिएका थिए। नीतिज्ञहरू त्यो पुरानो इतिहासको उदाहरण दिने गर्छन्।।१०८।।

**यः काममन्यू प्रजहाति राजा**
**पात्रे प्रतिष्ठापयते धनं च।**
**विशेषविच्छ्रुतवान् क्षिप्रकारी**
**तं सर्वलोकः कुरुते प्रणामम्।।१०९।।**

जुन राजाले काम र क्रोधलाई त्यागेको छ, सुपात्रलाई धन दिन्छ, विशेषज्ञ छ, शास्त्रलाई जानेको छ र आफ्नो कर्तव्य शीघ्र पूरा गर्छ त्यसलाई सबैले प्रणाम गर्छन्।।१०९।।

**जानाति विश्वासयितुं मनुष्यान्**
**विज्ञातदोषेषु दधाति दण्डम्।**
**जानाति मात्रां च तथा क्षमां च**
**तं तादृशं श्रीर्जुषते समग्रा।।११०।।**

जुन राजाले मनुष्यमा विश्वास उत्पन्न गराउन जानेको छ, अपराध प्रमाणित भएकालाई मात्र दण्ड दिन्छ, जसले दण्ड दिने न्यूनाधिक मात्रा तथा क्षमाको उपयोग जान्दछ त्यो राजाको सेवाका लागि सम्पूर्ण सम्पत्ति आउँछ अर्थात् लक्ष्मी नै आउँछिन्।।११०।।

**सुदुर्बलं नावजानाति कञ्चित्**
**युक्तो रिपुं सेवते बुद्धिपूर्वम्।**
**न विग्रहं रोचयते बलस्थैः**
**काले च यो विक्रमते स धीरः।।१११।।**

जसले दुर्बललाई अपमानित गर्दैन, सदा सावधान रहेर शत्रुका साथ बुद्धिपूर्वक व्यवहार गर्छ, बलवान्का साथ युद्ध गर्दैन र समय आउँदा पराक्रम देखाउन सक्छ त्यही नै धीर हो।।१११।।

**प्राप्यापदं न व्यथते कदाचिद्**
**उद्योगमन्विच्छति चाप्रमत्तः।**
**दुःखं च काले सहते महात्मा**
**धुरन्धरस्तस्य जिताः सपत्नाः।।११२।।**

जुन धुरन्धर महापुरुष आपत्ति आउँदा पनि कहिल्यै दुःखी हुँदैन, सावधानीका साथ आफ्नो कार्य गरिरहन्छ तथा समयमा दुःख सहने क्षमता पनि राख्छ त्यसका शत्रु त पराजित हुन्छन् नै।।११२।।

**अनर्थकं विप्रवासं गृहेभ्यः**
**पापैः सन्धिं परदाराभिमर्शम्।**
**दम्भं स्तैन्यं पैशुन्यं मद्यपानं**
**न सेवते यश्च सुखी सदैव।।११३।।**

जो निरर्थक घरबाहिर वास गर्दैन, पापीका साथ सम्बन्ध राख्दैन, परस्त्रीगमन गर्दैन, पाखण्डी छैन, चोरी गर्दैन, चुक्ली गर्दैन र मदिरापान गर्दैन त्यो सदा सुखी रहन्छ।।११३।।

**न संरम्भेणारभते त्रिवर्ग-**
**माकारितः शंसति तत्त्वमेव।**
**न मित्रार्थे रोचयते विवादं**
**नापूजितः कुप्यति चाप्यमूढः।।११४।।**
**न योऽभ्यसूयत्यनुकम्पते च**
**न दुर्बलः प्रातिभाव्यं करोति।**
**नात्याह किञ्चित् क्षमते विवादं**
**सर्वत्र तादृग् लभते प्रशंसाम्।।११५।।**

जो क्रोध तथा उत्ताउलोपनका साथ धर्म, अर्थ तथा कामको आरम्भ गर्दैन, सोधेको कुरा यथार्थ बताउँछ, मित्रका लागि झगडा गर्दैन, आदर नपाउँदा पनि क्रोधित हुँदैन, कसैको निन्दा गर्दैन, दुर्बल

हुँदाहुँदै पनि निन्दा गर्दैन, उच्च स्वरमा बोल्दैन र विवादलाई सहन्छ यस्तो मनुष्यले सबै स्थानमा प्रशंसा पाउँछ।।११४–११५।।

**यो नोद्धतं कुरुते जातु वेषं**
**न पौरुषेणापि विकत्थतेऽन्त्यान्।**
**न मूर्च्छितः कटुकान्याह किञ्चित्**
**प्रियं सदा तं कुरुते जनो हि।।११६।।**

जसले कहिल्यै उद्दण्डको वेश बनाउँदैन, बलवान् हुँदाहुँदै पनि अरूसामु आफ्नो पराक्रमको डिङ हाँक्दैन, क्रोधले व्याकुल र पीडित हुँदा पनि कटु वचन बोल्दैन त्यस्तो मनुष्य सबैको प्यारो बन्छ।।११६।।

**न वैरमुद्दीपयति प्रशान्तं**
**न दर्पमारोहति नास्तमेति।**
**न दुर्गतोऽस्मीति करोत्यकार्यं**
**तमार्यशीलं परमाहुरार्याः।।११७।।**

जसले शान्त भइसकेको वैरभावलाई पुनः प्रज्वलित गर्दैन, जसले गर्व गर्दैन, जसले हीनता देखाउँदैन तथा म विपत्तिमा परेको छु भन्ने सोचेर अनुचित काम गर्दैन त्यस्तो उत्तम आचरण गर्ने व्यक्तिलाई आर्यजनले श्रेष्ठ मानेका छन्।।११७।।

**न स्वे सुखे वै कुरुते प्रहर्षं**
**नान्यस्य दुःखे भवति प्रहृष्टः।**
**दत्वा न पश्चात्कुरुतेऽनुतापं**
**स कथ्यते सत्पुरुषार्यशीलः।।११८।।**

जो आफ्नो सुखमा अति प्रसन्न हुँदैन, अर्काको दु:खको समयमा हर्ष पनि मान्दैन र दान दिएर पश्चात्ताप गर्दैन त्यो व्यक्ति सज्जनहरूमध्ये सदाचारीका रूपमा चिनिन्छ।।११८।।

**देशाचारान् समयाञ्ज्ञातिधर्मान्**
**बुभूषते यः स परावरज्ञः।**
**स यत्र तत्राभिगतः सदैव**
**महाजनस्याधिपत्यं करोति।।११९।।**

जुन मनुष्यले देशको व्यवहार, लोकाचार तथा जातीय धर्मलाई जान्ने इच्छा गर्छ उसमा उत्तम र अधमको विवेक हुन्छ। त्यो जहाँ गए पनि सदा महान् समूहमा आफ्नो प्रभुता स्थापित गर्छ।।११९।।

**दम्भं मोहं मात्सर्यं पापकृत्यं**
**राजद्विष्टं पैशुनं पूगवैरम्।**
**मत्तोन्मत्तैर्दुर्जनैश्चापि वादं**
**यः प्रज्ञावान् वर्जयेत् स प्रधानः।।१२०।।**

जुन बुद्धिमान्ले दम्भ, मोह, मात्सर्य, पापकर्म, राजद्रोह, चुक्ली, समूहमा वैरता तथा मतवाल, पागल तथा दुर्जनहरूसँग विवाद छाडिदिन्छ त्यो श्रेष्ठ हो।।१२०।।

**दानं होमं दैवतं मङ्गलानि**
**प्रायश्चित्तान् विविधान् लोकवादान्।**
**एतानि यः कुरुते नैत्यकानि**
**तस्योत्थानं देवता राधयन्ति।।१२१।।**

जसले दान, होम, देवपूजन, माङ्गलिक कर्म, प्रायश्चित्त तथा अनेक प्रकारका लौकिक आचारलगायतका नित्य गर्नुपर्ने कर्महरू गर्छ त्यस्तो व्यक्तिको अभ्युदयको सिद्धि देवताले गरिदिन्छन्।।१२१।।

**समैर्विवाहः कुरुते न हीनैः**
**समैः सख्यं व्यवहारं कथां च।**
**गुणैर्विशिष्टांश्च पुरो दधाति**
**विपश्चितस्तस्य नयाः सुनीताः।।१२३।।**

जसले बराबरका साथ विवाह, मित्रता, व्यवहार तथा कुराकानी गर्छ, हीन पुरुषका साथ गर्दैन र गुणमा अगाडि रहेका पुरुषलाई सदा अगाडि राख्छ त्यो विद्वान्को नीति श्रेष्ठ मानिन्छ।।१२२।।

**मित्रं भुङ्क्ते संविभज्याश्रितेभ्यो**
**मितं स्वपित्यमितं कर्म कृत्वा।**
**ददात्यमित्रेष्वपि याचितः सं-**
**स्तमात्मवन्तं प्रजहत्यनर्थाः।।१२३।।**

जसले आफ्ना आश्रितजनका साथ बाँडेर थोरै भोजन गर्छ, धेरै काम गरेर पनि थोरै सुत्छ, जो मित्र होइनन् उनीहरूले माग्दा पनि धन दिन्छ त्यो मनस्वी मनुष्यका सबै अनर्थ भाग्छन्।।१२३।।

**चिकीर्षितं विप्रकृतं च यस्य**
**नान्ये जनाः कर्म जानन्ति किञ्चित्।**
**मन्त्रे गुप्ते सम्यगनुष्ठिते च**
**नाल्पोऽप्यस्य च्यवते कश्चिदर्थः।।१२४।।**

जसको आफ्नो इच्छाअनुकूल र अर्काको इच्छा विरुद्धको कार्य हो भन्ने कुरा अन्य व्यक्तिले थाहा पाउँदैनन्, मन्त्र गुप्त रहने र अभीष्ट कार्यको ठीकठीक सम्पादन भएका कारण त्यसको थोरै पनि काम बिग्रिन पाउँदैन।।१२४।।

**यः सर्वभूतप्रशमे निविष्टः**
**सत्यो मृदुर्मानकृच्छुद्धभावः।**
**अतीव स ज्ञायते ज्ञातिमध्ये**
**महामणिर्जात्य इव प्रसन्नः।।१२५।।**

जुन मनुष्य सम्पूर्ण भूतलाई शान्ति प्रदान गर्नमा तत्पर, सत्यवादी, कोमल, अर्कालाई आदर गर्ने तथा पवित्र विचार गर्नेवाला हुन्छ त्यसले राम्रो खानीबाट निस्किएको चम्किलो रत्नसमान आफ्नो जातिमा प्रसिद्धि पाउँछ।।१२५।।

**य आत्मनाऽपत्रपते भृशं नरः**
**स सर्वलोकस्य गुरुर्भवत्युत।**
**अनन्ततेजाः सुमनाः समाहितः**
**स तेजसा सूर्य इवावभासते।।१२६।।**

जो स्वयम् अधिक लज्जाशील छ त्यो श्रेष्ठ सम्भिन्छ। त्यो आफ्नो अनन्त तेज, शुद्ध हृदय एवम् एकाग्रताले युक्त भएका कारण कान्तिमा सूर्यसमान शोभा प्राप्त गर्छ।।१२६।।

**वने जाताः शापदग्धस्य राज्ञः**
**पाण्डोः पुत्रा पञ्च पञ्चेन्द्रकल्पाः।**
**त्वयैव बाला वर्धिताः शिक्षिताश्च**
**तवादेशं पालयन्त्याम्बिकेय।।१२७।।**

हे अम्बिकानन्दन ! शापले दग्ध राजा पाण्डुका जो पाँच पुत्र वनमा उत्पन्न भएका थिए ती पाँच इन्द्रहरूसमान शक्तिशाली रहेका छन्। उनीहरूलाई हजुरले बाल्यकालदेखि नै पाल्नुभएको हो र शिक्षादीक्षा दिनुभएको हो। उनीहरूले सदा हजुरको आज्ञा पालन पनि गरिरहेका छन्।।१२७।।

**प्रदायैतेषामुचितं तात राज्यं**
**सुखी पुत्रैः सहितो मोदमानः।**
**न देवानां नापि च मानुषाणां**
**भविष्यसि त्वं तर्कणीयो नरेन्द्र।।१२८।।**

तात ! तिनीहरूलाई न्यायोचित राज्यभाग दिएर हजुर आफ्ना पुत्रहरूका साथ आनन्द भोग गर्नुहोस्। हे नरेन्द्र ! यसो गरेको अवस्थामा हजुर देवता एवम् मनुष्यको टीकाटिप्पणीको विषय पनि बन्नुहुने छैन।।१२८।।

●

# द्वितीयोऽध्याय:

धृतराष्ट्र उवाच–

**जाग्रतो दह्यमानस्य यत्कार्यमनुपश्यसि।**
**तद् ब्रूहि त्वं हि नस्तात धर्मार्थकुशलो ह्यसि।।१।।**

धृतराष्ट्रले भने– तात! म चिन्ताले जलेर अहिलेसम्म जागिरहेको छु। तिमी मैले गर्न योग्य जुन कार्य सम्झिन्छौ बताऊ, किनभने हामीमध्ये तिमी नै धर्म र अर्थको ज्ञानमा निपुण छौ।।१।।

**त्वं मां यथावत् विदुर प्रशाधि**
**प्रज्ञापूर्वं सर्वमजातशत्रोः।**
**यन्मन्यसे पथ्यमदीनसत्त्वं**
**श्रेयस्करं ब्रूहि तद्वै कुरूणाम्।।२।।**

हे उदार चित्त भएका विदुर! तिमी आफ्नो बुद्धिले विचार गरेर मलाई ठीकठीक उपदेश देऊ। जुन कुरा युधिष्ठिरका लागि हितकर र कौरवका लागि पनि कल्याणकारी होस् त्यो सबै अवश्य पनि बताऊ।।२।।

**पापाशङ्की पापमेवानुपश्यन्**
**पृच्छामि त्वां व्याकुलेनात्मनाहम्।**
**कवे तन्मे ब्रूहि सर्वं यथाव-**
**न्मनीषितं सर्वमजातशत्रोः।।३।।**

विद्वन्! मेरो मनमा अनिष्टको आशङ्का रहेकाले म सर्वत्र अनिष्ट नै देखिरहेको छु। अतः व्याकुल हृदयले म तिमीलाई सोधिरहेको छु– अजातशत्रु युधिष्ठिर के चाहन्छन्? त्यो सबै ठीकठीक बताऊ।।३।।

विदुर उवाच

**शुभं वा यदि वा पापं द्वेष्यं वा यदि वा प्रियम्।**
**अपृष्टस्तस्य तद् ब्रूयाद् यस्य नेच्छेत्पराभवम्।।४।।**

विदुरले भने– जो पराजय चाहँदैन त्यो मनुष्यले नसोध्दानसोध्दै पनि कल्याणकारक या अनिष्टकारक, राम्रो या नराम्रो जे कुरा छ त्यो बताइदिनुपर्छ।।४।।

**तस्मात् वक्ष्यामि ते राजन् हितं यत्स्यात् कुरून्प्रति।**
**वचः श्रेयस्करं धर्म्यं ब्रुवतस्तन्निबोध मे।।५।।**

त्यस कारण हे राजन्! जसबाट सम्पूर्ण कौरवको हित हुन्छ त्यही कुरा म तपाईंलाई बताउँछु। म जुन कल्याणकारी एवम् धर्मयुक्त वचन भनिरहेको छु त्यो ध्यान दिएर सुन्नुहोस्।।५।।

**मिथ्योपेतानि कर्माणि सिध्येयुर्यानि भारत।**
**अनुपायप्रयुक्तानि मा स्म तेषु मनः कृथाः।।६।।**

हे भारत! असत् उपाय (जुवा आदि)-को प्रयोग गरेर जुन कपटपूर्ण कार्य सिद्ध हुन्छ त्यसमा हजुर मन नलगाऊनुहोस्।।६।।

**तथैव योगविहितं यत्तु कर्म न सिध्यति।**
**उपाययुक्तं मेधावी न तत्र ग्लपयेन्मनः।।७।।**

यसरी राम्रो उपायका साथ सावधानीपूर्वक गरिएको कुनै पनि कर्म सफल नभए पनि बुद्धिमान् पुरुषले त्यसका लागि मनमा ग्लानि गर्नु हुँदैन।।७।।

**अनुबन्धान् अपेक्षेत सानुबन्धेषु कर्मसु।**
**सम्प्रधार्य च कुर्वीत न वेगेन समाचरेत्।।८।।**

कुनै पनि कर्ममा त्यसको प्रयोजन पहिले सम्भिनुपर्छ। खुब सोचविचार गरेर काम गर्नुपर्छ। हडबडका साथ कुनै पनि कर्म आरम्भ गर्नु हुँदैन।।८।।

**अनुबन्धं च सम्प्रेक्ष्य विपाकं चैव कर्मणाम्।**
**उत्थानमात्मनश्चैव धीरः कुर्वीत वा न वा।।९।।**

धीर मनुष्यले प्रथमतः कर्मको प्रयोजन, त्यसको परिणाम तथा आफ्नो उन्नतिको विचार गरेर कामको आरम्भ गर्ने या नगर्ने निर्णय गर्नुपर्छ।।९।।

**यः प्रमाणं न जानाति स्थाने वृद्धौ तथा क्षये।**
**कोशे जनपदे दण्डे न स राज्येऽवतिष्ठते।।१०।।**

जसले स्थिति, लाभ, हानि, खजाना, देश, दण्ड आदिको मात्रालाई जान्दैन त्यो राज्यमा स्थिर रहन सक्दैन।।१०।।

**यस्त्वेतानि प्रमाणानि यथोक्तान्यनुपश्यति।**
**युक्तो धर्मार्थयोर्ज्ञाने स राज्यमधिगच्छति।।११।।**

जो यिनको मात्रा ठीकठीक ढङ्गले जान्दछ तथा धर्म र अर्थको ज्ञानमा दत्तचित्त रहन्छ त्यसले राज्य प्राप्त गर्छ।।११।।

**न राज्यं प्राप्तमित्येव वर्तितव्यमसाम्प्रतम्।**
**श्रियं ह्यविनयो हन्ति जरा रूपमिवोत्तमम्।।१२।।**

अब त राज्य प्राप्त भयो भनेर अनुचित क्रियाकलाप गर्नु हुँदैन। उद्दण्डताले सम्पत्तिलाई त्यसरी नष्ट गरिदिन्छ जसरी वृद्धावस्थाले सुन्दर रूपलाई नष्ट गरिदिन्छ।।१२।।

**भक्षोत्तमप्रतिच्छन्नं मत्स्यो वडिशमायसम्।**
**लोभाभिपाती ग्रसते नानुबन्धमवेक्षते।।१३।।**

जसरी माछाले बल्छीमा पर्नुभन्दा अगाडि कुनै पनि कुरा विचार नगरी बल्छीमा अड्काइएको चारो लोभका कारण निल्छ, तर त्यसबाट हुने परिणामबारे विचार गर्दैन।।१३।।

**यच्छक्यं ग्रसितुं ग्रस्यं ग्रस्तं परिणमेच्च यत्।**
**हितं च परिणामे स्यात् तदाद्यं भूतिमिच्छता।।१४।।**

अतः आफ्नो उन्नति चाहने व्यक्तिले त्यही वस्तु खानु (ग्रहण गर्नु)-पर्छ जुन खान योग्य होस् तथा खान सकियोस् एवम् खाइसकेपछि (ग्रहण गरिसकेपछि) पचोस् र पचिसकेपछि हितकारी होस्।।१४।।

**वनस्पतेरपक्वानि फलानि प्रचिनोति यः।**
**स नाप्नोति रसं तेभ्यो बीजं चास्य विनश्यति।।१५।।**

जसले रूखबाट काँचो फल टिप्छ त्यसले फलको रस त पाउँदैन नै, उल्टै त्यस वृक्षको बीज पनि नाश गर्छ।।१५।।

**यस्तु पक्वमुपादत्ते काले परिणतं फलम्।**
**फलान् रसं स लभते बीजाच्चैव फलं पुनः।।१६।।**

जसले समयमा पाकिसकेको फल ग्रहण गर्छ उसले फलबाट रस प्राप्त गर्नुका साथै त्यो बीजबाट पुनः फल पनि प्राप्त गर्छ।।१६।।

**यथा मधु समादत्ते रक्षन् पुष्पाणि षट्पदः।**
**तद्वदर्थान्मनुष्येभ्य आदधादविहिंसया।।१७।।**

जसरी भमराले फूललाई कुनै हानि नपुऱ्याई फूलको रसको आश्वादन गर्छ त्यसै गरी राजाले पनि प्रजालाई कष्ट नदिई कर ग्रहण गर्नुपर्छ।।१७।।

**पुष्पं पुष्पं विचिन्वीत मूलच्छेदं न कारयेत्।**
**मालाकार इवारामे न यथाङ्गारकारकः।।१८।।**

जसरी एउटा मालीले बगैँचामा रहेका एकएक फूल टिपेर माला बनाउँछ, कोइला बनाउनेले जस्तो रूखलाई जरैदेखि काट्दैन, त्यसै गरी राजाले पनि प्रजाको रक्षापूर्वक कर लिनुपर्छ।।१८।।

**किन्नु मे स्यादिदं कृत्वा किन्नु मे स्यादकुर्वतः।**
**इति कर्माणि सञ्चिन्त्य कुर्याद् वा पुरुषो न वा।।१९।।**

यो कार्य गर्नाले के लाभ हुन्छ र यो कार्य नगर्नाले के हानि हुन्छ भन्ने सम्बन्धमा विचार गरेर मनुष्यले कर्म गर्नुपर्छ या गर्नु हुँदैन।।१९।।

**अनारभ्या भवन्त्यर्थाः केचिन्नित्यं तथाऽगताः।**
**कृतः पुरुषकारो हि भवेद् येषु निरर्थकः।।२०।।**

कतिपय यस्ता व्यर्थ कार्यहरू पनि रहेका छन् जुन नित्य अप्राप्त भएका कारण आरम्भ गर्न योग्य हुँदैनन्, किनभने तिनीहरूका लागि गरिएको पुरुषार्थ पनि व्यर्थ हुन्छ।।२०।।

**प्रसादो निष्फलो यस्य क्रोधश्चापि निरर्थकः।**
**न तं भर्तारमिच्छन्ति षण्ढं पतिमिव स्त्रियः॥२१॥**

जो खुसी हुँदा र रिसाउँदा पनि (राम्रो-नराम्रो) कुनै फल प्राप्त हुँदैन त्यस्तालाई प्रजाले स्वामी बनाउन चाहँदैनन् जसरी नपुंसकलाई नारीले आफ्नो पति बनाउँन चाहन्नन्॥२१॥

**कांश्चिदर्थान्नरः प्राज्ञो लघुमूलान्महाफलान्।**
**क्षिप्रमारभते कर्तुं न विघ्नयति तादृशान्॥२२॥**

जसको मूल (साधन) सानो होस् र फल महान् होस्, बुद्धिमान् पुरुषले त्यसलाई शीघ्र प्रारम्भ गर्छन् र त्यस्तो काममा विघ्न आउन पनि दिँदैनन्॥२२॥

**ऋजुः पश्यति यः सर्वं चक्षुषानुपिबन्निव।**
**आसीनमपि तूष्णीकमनुरज्यति तं प्रजाः॥२३॥**

केही नगर्दानगर्दै पनि जुन राजाले प्रेमपूर्वक पिऊँ कि भनेझैँ गरेर सबै प्रजालाई समान दृष्टिले हेर्छ त्यस्तो राजाप्रति पनि प्रजाको अनुराग रहन्छ॥२३॥

**सुपुष्पितः स्यादफलः फलितः स्याद् दुरारुहः।**
**अपक्वः पक्वसङ्काशो न तु शीर्येत कर्हिचित्॥२४॥**

राजा वृक्षजस्तै राम्रोसँग फुल्दा (प्रसन्न रहँदा) पनि धेरै फलले युक्त नहोस् (धेरै दिनेवाला नहोस्), फलले युक्त (दिनेवाला) हुँदा पनि चढ्न नसकिने (पहुँचभन्दा बाहिर) भएर रहोस्। काँचो (कम शक्तियुक्त) हुँदा पनि पाकेको (शक्तिसम्पन्न)-ले जस्तै आफूलाई प्रकट गर्छ भने त्यो कहिल्यै नष्ट हुँदैन॥२४॥

**चक्षुषा मनसा वाचा कर्मणा च चतुर्विधम्।**
**प्रसादयति यो लोकं तं लोकोऽनुप्रसीदति।।२५।।**

जुन राजाले आँखा, मन, वाणी र कर्म गरी यी चार कुराबाट प्रजालाई प्रसन्न गराउँछ त्यसैसँग प्रजा पनि प्रसन्न हुन्छन्।।२५।।

**यस्मात् त्रस्यन्ति भूतानि मृगव्याधान्मृगा इव।**
**सागरान्तामपि महीं लब्ध्वा स परिहीयते।।२६।।**

जसरी व्याधादेखि हरिण आदि मृगहरू डराउँछन् त्यसै गरी राजाबाट प्रजाहरू डराउँछन् भने समुद्रपर्यन्तको राजा भए पनि त्यो राजा प्रजाजनबाट त्यागिन्छ।।२६।।

**पितृपैतामहं राज्यं प्राप्तवान् स्वेन कर्मणा।**
**वायुरभ्रमिवासाध्य भ्रंशयत्यनये स्थितः।।२७।।**

परम्परागत पितृपितामहबाट प्राप्त राज्य पनि राजाको कर्मका कारण यसरी नष्ट हुन्छ जसरी हवाबाट बादल छिन्नभिन्न हुन्छ।।२७।।

**धर्ममाचरतो राज्ञः सद्भिश्चरितमादितः।**
**वसुधा वसुसम्पूर्णा वर्धते भूतिवर्धिनी।।२८।।**

परम्परादेखि सज्जन पुरुषद्वारा गरिएको धर्मको आचरण गर्ने राजाको राज्यको पृथ्वी धनधान्यबाट परिपूर्ण हुनुका साथै राजाले उन्नतिका साथ ऐश्वर्यलाई पनि बढाउँछ।।२८।।

**अथ सन्त्यजतो धर्ममधर्मं चानुतिष्ठतः।**
**प्रतिसंवेष्टते भूमिरग्नौ चर्माहितं यथा।।२९।।**

जुन राजाले धर्मलाई छाडेर अधर्मको अनुसरण गर्छ त्यसको राज्यभूमि आगोमा राखिएको छालाजस्तै सङ्कुचित हुन्छ।।२९।।

**य एव यत्नः क्रियते परराष्ट्रविमर्दने।**
**स एव यत्नः कर्तव्यः स्वराष्ट्रपरिपालने।।३०।।**

राजाले अरू राष्ट्रको नाश गर्नका लागि गर्ने यत्न आफ्नो राष्ट्रको रक्षाका लागि गर्नु उचित हुन्छ।।३०।।

**धर्मेण राज्यं विन्देत धर्मेण परिपालयेत्।**
**धर्ममूलां श्रियं प्राप्य न जहाति न हीयते।।३१।।**

धर्मपूर्वक प्राप्त राज्यको रक्षा धर्मपूर्वक नै गर्नुपर्छ, किनभने धर्ममूलक राज्यलक्ष्मी पाएर न राजाले उनलाई छाड्छ न त राज्यलक्ष्मीले राजालाई छाड्छिन्।।३१।।

**अत्युन्मत्तात् प्रलपतो बालाच्च परिजल्पतः।**
**सर्वतः सारमादद्यात् अश्मभ्य इव काञ्चनम्।।३२।।**

उन्मत्त, निरर्थक बोल्ने तथा बकवाद गर्ने एवम् बालकबाट पनि तत्त्व कुरा ग्रहण गर्नुपर्छ जसरी ढुङ्गाबाट सुन ग्रहण गरिन्छ।।३२।।

**सुव्याहृतानि सूक्तानि सुकृतानि ततस्ततः।**
**सञ्चिन्वन् धीर आसीत् शिलाहारी शिलं यथा।।३३।।**

जसरी शिलावृत्तिबाट जीविका चलाउनेहरूले एकएक दाना ग्रहण गरेर जीविका चलाउँछन् त्यसै गरी धीर पुरुषले पनि जहाँकहीँबाट भावपूर्ण वचन, सूक्ति एवम् सत्कर्महरूको सङ्ग्रह गर्नुपर्छ।।३३।।

**गन्धेन गावः पश्यन्ति वेदैः पश्यन्ति ब्राह्मणाः।**
**चारैः पश्यन्ति राजानश्चक्षुर्भ्यामितरे जनाः।।३४।।**

गाईले गन्धबाट देख्छन्, ब्राह्मणले वेदबाट देख्छन्, राजाले गुप्तचरबाट देख्छन् भने अन्य मानिसले आँखाबाट देख्छन्।।३४।।

**भूयांसं लभते क्लेशं या गौर्भवति दुर्दुहा।**
**अथ या सुदुहा राजन् नैव तां वितुदन्त्यपि।।३५।।**

हे राजन्! जुन गाईले बडो कठिनाइपूर्वक दुहुन दिन्छ त्यसले धेरै क्लेश पनि सहनुपर्छ र जुन गाईले सजिलो गरी दूध दिन्छ उसलाई कसैले कष्ट पनि दिँदैन।।३५।।

**यदतप्तं प्रणमति न तत् सन्तापयन्त्यपि।**
**यच्च स्वयं नतं दारुं न तत् सन्नमयन्त्यपि।।३६।।**

जुन धातु न तताईकन पनि मोड्न सकिन्छ त्यसलाई तताइँदैन, जुन काठ स्वयम् झुकेको हुन्छ त्यसलाई कसैले झुकाउने प्रयत्न पनि गर्दैन।।३६।।

**एतयोपमया धीरः सन्नमेत बलीयसे।**
**इन्द्राय स प्रणमते नमते यो बलीयसे।।३७।।**

यो दृष्टान्तअनुसार बुद्धिमान् पुरुष अधिक बलवान्का सामु झुक्नुपर्छ। जो आफूभन्दा बलवान्का सामु झुक्छ त्यसले मानौँ इन्द्र देवतालाई प्रणाम गर्छ।।३७।।

**पर्जन्यनाथाः पशवो राजानो मन्त्रिबान्धवाः।**
**पतयो बान्धवाः स्त्रीणां ब्राह्मणा वेदबान्धवाः।।३८।।**

पशु आदिको रक्षक या बान्धव बादल हो, राजाको बान्धव मन्त्री हो, नारीको बान्धव (रक्षक) पति हो भने ब्राह्मणको बान्धव वेद हो।।३८।।

**सत्येन रक्ष्यते धर्मो विद्या योगेन रक्ष्यते।**
**मृजया रक्ष्यते रूपं कुलं वृत्तेन रक्ष्यते।।३९।।**

सत्यबाट धर्मको रक्षा हुन्छ, योगबाट विद्याको रक्षा हुन्छ, सरसफाइबाट सुन्दर रूपको रक्षा हुन्छ र सदाचारबाट कुलको रक्षा हुन्छ।।३९।।

**मानेन रक्ष्यते धान्यमश्वान् रक्षत्यनुक्रमः।**
**अभीक्ष्णदर्शनं गाश्च स्त्रियो रक्ष्याः कुचैलतः।।४०।।**

मान (तौल)–बाट अनाजको रक्षा हुन्छ, फेर्नाले घोडाको रक्षा हुन्छ, बारम्बार देखभाल गर्नाले गाईको रक्षा हुन्छ भने नारीको रक्षा नराम्रो वस्त्रबाट हुन्छ।।४०।।

**न कुलं वृत्तहीनस्य प्रमाणमिति मे मतिः।**
**अन्तेष्वपि हि जातानां वृत्तमेव विशिष्यते।।४१।।**

मेरो विचारमा सदाचारहीन मनुष्य उत्तम कुलको भए पनि मान्य हुँदैन, किनभने सदाचारयुक्त नीच कुलमा उत्पन्न मनुष्य पनि श्रेष्ठ मानिन्छ।।४१।।

**य ईर्षुः परवित्तेषु रूपे वीर्ये कुलान्वये।**
**सुखसौभाग्यसत्कारे तस्य व्याधिरनन्तकः।।४२।।**

जसले अर्काको धन, रूप, पराक्रम, कुलीनता, सुख, सौभाग्य र सम्मानमा डाह गर्छ यो उसको असाध्य रोग हो।।४२।।

**अकार्यकरणाद् भीतः कार्याणाञ्च विवर्जनात्।**
**अकाले मन्त्रभेदाच्च येन माद्येन्न तत् पिबेत्।।४३।।**

जुन गर्न नहुने काम हो त्यो गर्नाले र गर्न उपयुक्त हुने कर्म नगर्ने तथा कार्यसिद्धि हुनुभन्दा पहिले गोप्यता भङ्ग हुने कुरामा डराउनुपर्छ। जसमा नसा हुन्छ त्यस्तो पेय पदार्थ पिउनु हुँदैन।।४३।।

**विद्यामदो धनमदस्तृतीयोऽभिजनो मदः।**
**मदा एतेऽवलिप्तानामेत एव सतां दमाः।।४४।।**

विद्याको मद, धनको मद र उच्च कुलको मद घमन्डी पुरुषका लागि मद हुन्, तर सज्जनका लागि भने दमका साधन हुन्।।४४।।

**असन्तोऽभ्यर्थिताः सद्भिः क्वचित् कार्ये कदाचन।**
**मन्यन्ते सन्तमात्मानमसन्तमपि विश्रुतम्।।४५।।**

कुनै समयमा कुनै कार्यका लागि सज्जन व्यक्तिहरूद्वारा प्रार्थना गरिँदा दुष्टहरूले आफू दुष्ट हुँ भन्ने कुरा जान्दाजान्दै सज्जन मान्न थाल्छन्।।४५।।

**गतिरात्मवतां सन्तः सन्त एव सतां गतिः।**
**असतां च गतिः सन्तो न त्वसन्तः सतां गतिः।।४६।।**

मनस्वी पुरुषलाई सहारा दिने सन्त हुन्, सन्तका सहारा पनि सन्त नै हुन्, दुष्टलाई सहारा दिने पनि सन्त नै हुन्, तर दुष्टले सन्तलाई सहारा दिँदैनन्।।४६।।

**जिता सभा वस्त्रवता मिष्टाशा गोमता जिता।**
**अध्वा जितो यानवता सर्वं शीलवता जितम्।।४७।।**

राम्रो वस्त्र लगाउने व्यक्तिले सभालाई जित्छ (सभामा राम्रो प्रभाव जमाउन सक्छ)। जसले गाई पालेको छ त्यसले मीठो स्वादको आकाङ्क्षालाई जित्छ। सवारीमा चढेको व्यक्तिले बाटोलाई जितेजस्तै शीलवान् पुरुषले सबैमाथि विजय प्राप्त गर्छ।।४७।।

**शीलं प्रधानं पुरुषे तद् यस्येह प्रणस्यति।**
**न तस्य जीवितेनार्थो न धनेन न बन्धुभिः।।४८।।**

पुरुषमा शील नै प्रधान हो। जसको शील नै नष्ट भएको हुन्छ यो संसारमा उसको जीवन, धन र बन्धुहरूबाट कुनै प्रयोजन सिद्ध हुन सक्दैन।।४८।।

**आढ्यानां मांसपरमं मध्यानां गोरसोत्तरम्।**
**तैलोत्तरं दरिद्राणां भोजनं भरतर्षभ।।४९।।**

हे भरतश्रेष्ठ! धनी व्यक्तिहरूको भोजनमा मासुको, मध्यम श्रेणीका व्यक्तिको भोजनमा गोरसको र दरिद्रको भोजनमा तेलको प्रधानता रहन्छ।।४९।।

**सम्पन्नतरमेवान्नं दरिद्राः भुञ्जते सदा।**
**क्षुत्स्वादुतां जनयति सा चाढ्येषु सुदुर्लभा।।५०।।**

दरिद्र पुरुषले सदा स्वादिष्ट भोजन गर्छ, किनभने भोकले उसको भोजनमा स्वाद उत्पन्न गरिदिन्छ र त्यो भोक धनीका लागि सर्वथा दुर्लभ हुन्छ।।५०।।

**प्रायेण श्रीमतां लोके भोक्तुं शक्तिर्न विद्यते।**
**जीर्यन्त्यपि हि काष्ठानि दरिद्राणां महीपते।।५१।।**

हे राजन्! संसारमा धनीहरू प्रायः भोजन गर्ने क्षमता राख्दैनन्, तर दरिद्रको पेटमा काठ पनि पच्छ।।५१।।

**अवृत्तिर्भयमन्त्यानां मध्यानां मरणाद् भयम्।**
**उत्तमानां तु मर्त्यानामवमानात् परं भयम्।।५२।।**

अधम पुरुषका लागि जीविका नहुँदा डर लाग्छ, मध्यम श्रेणीका पुरुष मृत्युदेखि डराउँछन्, तर उत्तम पुरुष अपमानबाट डराउँछन्।।५२।।

**ऐश्वर्यमदपापिष्ठा मदाः पानमदादयः।**
**ऐश्वर्यमदमत्तो हि नापतित्वा विबुध्यते।।५३।।**

पिउनु आदि त नसा नै हो तर ऐश्वर्यको नसा अत्यन्त नराम्रो नसा हो, किनभने ऐश्वर्यको नसाले मात्तिएको पुरुष भ्रष्ट नहुँदासम्म होसमा आउँदैन।।५३।।

**इन्द्रियैरिन्द्रियार्थेषु वर्तमानैरनिग्रहैः।**
**तैरयं ताप्यते लोको नक्षत्राणि ग्रहैरिव।।५४।।**

वशमा नभएका कारण विषयहरूमा रम्ने इन्द्रियहरूबाट यो संसारले त्यसरी नै दुःख पाउँछ जसरी सूर्य आदि ग्रहबाट नक्षत्रहरू तिरस्कृत भएका छन्।।५४।।

**यो जितः पञ्चवर्गेण सहजेनात्मकर्षिणा।**
**आपदस्तस्य वर्धन्ते शुक्लपक्ष इवोडुराट्।।५५।।**

जुन मनुष्य जीवलाई वशमा गर्ने पाँच इन्द्रियद्वारा सहजै जितिएको छ त्यो मनुष्यका आपत्तिहरू शुक्ल पक्षको चन्द्रमा बढेजस्तै बढ्छन्।।५५।।

**अविजित्य य आत्मानममात्यान् विजिगीषते।**
**अमित्रान् वाऽजितामात्यः सोऽवशः परिहीयते।।५६।।**

इन्द्रियहरूसहित मनलाई नजिती जसले मन्त्रीहरूलाई जित्ने इच्छा राख्छ तथा मन्त्रीहरूलाई आफ्नो अधीनमा नराखी शत्रुलाई जित्ने इच्छा राख्छ त्यस्तो अजितेन्द्रिय पुरुषलाई सबैले त्यागिदिन्छन्।।५६।।

**आत्मानमेव प्रथमं द्वेष्यरूपेण यो जयेत्।**
**ततोऽमात्यानमित्रांश्च न मोघं विजिगीषते।।५७।।**

जुन राजाले इन्द्रियहरूसहित मनलाई शत्रु मानेर जितेको छ त्यसपछि उसले मन्त्रीहरू र शत्रुहरूलाई जित्ने इच्छा गर्छ भने उसलाई अवश्य पनि सफलता मिल्छ।।५७।।

**वश्येन्द्रियं जिताऽत्मानं धृतदण्डं विकारिषु।**
**परीक्ष्य कारिणं धीरमत्यन्तं श्रीर्निषेवते।।५८।।**

इन्द्रिय र मनलाई जित्ने, अपराधीलाई दण्ड दिने र जाँच गरेर काम गर्ने धीर पुरुषलाई लक्ष्मीले सेवा गर्छिन्।।५८।।

**रथः शरीरं पुरुषस्य राज-**
**न्नात्मा नियन्तेन्द्रियाण्यस्य चाश्वाः।**
**तैरप्रमत्तः कुशली सदश्वै-**
**र्दान्तैः सुखं याति रथीव धीरः।।५९।।**

हे राजन्! मनुष्यको शरीर रथ हो, बुद्धि सारथि हो, इन्द्रियहरू यसका घोडा हुन्। यिनलाई वशमा राखेर सावधान रहने चतुर एवम् धीर पुरुष काबूमा राखिएको घोडायुक्त रथमा सुखपूर्वक यात्रा गर्छ।।५९।।

**एतान्यनिगृहीतानि व्यापादयितुमप्यलम्।**
**अविधेया इवादान्ता हयाः पथि कुसारथिम्।।६०।।**

शिक्षा नपाएका र काबूमा नल्याइएका घोडाले जसरी मूर्ख सारथिलाई मार्गमै खसालिदिन्छन् त्यसै गरी इन्द्रियहरूलाई वशमा नगर्ने पुरुष इन्द्रियहरूद्वारा नै मारिन सक्छ।।६०।।

**अनर्थमर्थतः पश्यन्नर्थं चैवाप्यनर्थतः।**
**इन्द्रियैरजितैर्बालः सुदुःखं मन्यते सुखम्।।६१।।**

इन्द्रियहरू वशमा नभएका कारण अर्थलाई अनर्थ र अनर्थलाई अर्थ सम्झेर अज्ञानी पुरुषले ठूलो दुःखलाई पनि सुख सम्झन्छ।।६१।।

**धमार्थौ यः परित्यज्य स्यादिन्द्रियवशानुगः।**
**श्रीप्राणधनदारेभ्यः क्षिप्रं स परिहीयते।।६२।।**

जो धर्म र अर्थलाई परित्याग गरेर इन्द्रियहरूको वशमा पर्छ त्यो छिटै ऐश्वर्य, प्राण, धन र स्त्रीबाट हीन हुन्छ।।६२।।

**अर्थानामीश्वरो यः स्यादिन्द्रियाणामनीश्वरः।**
**इन्द्रियाणामनैश्वर्यादैश्वर्याद् भ्रश्यते हि सः।।६३।।**

जसले धनको स्वामी र धनी हुँदाहुँदै इन्द्रियहरूलाई आफ्नो वशमा राख्न सक्दैन त्यो व्यक्ति इन्द्रियहरूलाई वशमा राख्न नसकेका कारण ऐश्वर्यबाट पनि भ्रष्ट हुन्छ।।६३।।

**आत्मनाऽऽत्मानमन्विच्छेन्मनोबुद्धीन्द्रियैर्यतैः।**
**आत्मा ह्येवात्मनो बन्धुरात्मैव रिपुरात्मनः।।६४।।**

मन, बुद्धि र इन्द्रियहरूलाई आफ्नो अधीनमा राखेर आफैँले आफ्नो आत्मालाई जान्ने इच्छा गरोस्, किनभने आत्मा नै आफ्नो बन्धु र आत्मा नै आफ्नो शत्रु हो।।६४।।

**बन्धुरात्माऽऽत्मनस्तस्य येनैवात्माऽऽत्मना जितः।**
**स एव नियतो बन्धुः स एव नियतो रिपुः।।६५।।**

जसले स्वयम् आफ्नो आत्मालाई जितेको छ उसको आत्मा नै उसको बन्धु हो। त्यही सच्चा बन्धु र त्यही सच्चा शत्रु पनि हो।।६५।।

**क्षुद्राक्षेणेव जालेन झषावपिहितावुरू।**
**कामश्च राजन् क्रोधश्च तौ प्रज्ञानं विलुम्पतः।।६६।।**

हे राजन्! जसरी मसिनो प्वाल भएको जालमा फँसेका दुई ठूलठूला माछाले मिलेर जाललाई काट्छन् त्यसै गरी काम र क्रोधले विशिष्ट ज्ञानलाई लुप्त गरिदिन्छन्।।६६।।

**समवेक्ष्येह धर्मार्थौ सम्भारान् योऽधिगच्छति।**
**स वै सम्भृतसम्भारः सततं सुखमेधते।।६७।।**

जसले यो जगत्मा धर्म र अर्थलाई विचार गरेर विजयसाधनसामग्री सङ्ग्रह गर्छ त्यही सामग्रीयुक्त भएका कारण सदा सुखपूर्वक समृद्धिशाली भइरहन्छ।।६७।।

**यः पञ्चाभ्यन्तरान् शत्रूनविजित्य मनोमयान्।**
**जिगीषति रिपूनन्यान् रिपवोऽभिभवन्ति तम्।।६८।।**

जसले चित्तका विकारका रूपमा रहेका पाँच इन्द्रियरूपी भित्री शत्रुहरूलाई नजिती अन्य शत्रुलाई जित्ने इच्छा गर्छ त्यसलाई शत्रुले पराजित गरिदिन्छन्।।६८।।

**दृश्यन्ते हि महात्मानो वध्यमानाः स्वकर्मभिः।**
**इन्द्रियाणामनीशत्वात् राजानो राज्यविभ्रमैः।।६९।।**

इन्द्रिय वशमा नभएका कारण ठूलठूला साधुहरू आफ्नो कर्मबाट र राजाहरू राज्यको भोगविलासबाट वञ्चित हुनुपर्छ।।६९।।

**असन्त्यागात् पापकृतामपापां-**
**स्तुल्यो दण्डः स्पृशते मिश्रभावात्।**
**शुष्केणार्द्रं दह्यते मिश्रभावात्**
**तस्मात् पापैः सह सन्धिं न कुर्यात्।।७०।।**

पापाचारी दुष्टहरूलाई त्याग नगरेका कारण र उनीहरूका साथ मिलेका कारण निरपराध सज्जनहरूले पनि अपराधीले जस्तै दण्ड प्राप्त गर्छन् जसरी सुकेका दाउराका साथ काँचा दाउरा पनि जल्छन्। यसर्थ दुष्ट पुरुषका साथ कहिल्यै मेल गर्नु हुँदैन।।७०।।

**निजानुत्पततः शत्रून् पञ्च पञ्चप्रयोजनान्।**
**यो मोहान्न निगृह्णाति तमापद् ग्रसते नरम्।।७१।।**

जसले पाँच विषयतर्फ दौडने पाँच इन्द्रियरूपी शत्रुहरूलाई मोहका कारण वशमा गर्न सक्दैन त्यो मनुष्य विपत्तिमा पर्छ।।७१।।

**अनसूयाऽऽर्जवं शौचं सन्तोषः प्रियवादिता।**
**दमः सत्यमनायासो न भवन्ति दुरात्मनाम्।।७२।।**

गुणमा दोष नदेख्नु, सरलता, पवित्रता, सन्तोष, प्रिय वचन, इन्द्रियदमन, सत्य भाषण र अचञ्चलताजस्ता गुणहरू दुरात्मा पुरुषमा हुँदैनन्।।७२।।

**आत्मज्ञानमनायासस्तितिक्षा धर्मनित्यता।**
**वाक् चैव गुप्ता दानं च नैतान्यन्त्येषु भारत।।७३।।**

हे भारत! आत्मज्ञान, अक्रोध, सहनशीलता, धर्मपरायणता, वचनको रक्षा र दानजस्ता गुणहरू अधम पुरुषमा हुँदैनन्।।७३।।

**आक्रोशपरिवादाभ्यां विहिंसन्त्यबुधा बुधान्।**
**वक्ता पापमुपादत्ते क्षममाणो विमुच्यते।।७४।।**

मूर्ख मनुष्यले विद्वान्लाई गाली र निन्दाले कष्ट पुर्‍याउँछन्। गाली गर्ने पापको भागी हुन्छ भने क्षमा दिने पापबाट मुक्त हुन्छ।।७४।।

**हिंसाबलमसाधूनां राज्ञा दण्डविधिर्बलम्।**
**शुश्रूषा तु बलं स्त्रीणां क्षमा गुणवतां बलम्।।७५।।**

दुष्ट पुरुषको बल हिंसा हो, राजाको बल दण्ड हो, नारीको बल सेवा हो र गुणवान् पुरुषको बल क्षमा हो।।७५।।

**वाक्संयमो हि नृपते! सुदुष्करतमो मतः।**
**अर्थवच्च विचित्रञ्च न शक्यं बहु भाषितुम्।।७६।।**

राजन्! वाणीको संयमलाई धेरै कठिन मानिएको छ, तर विशेष अर्थयुक्त र चमत्कारपूर्ण वाणी धेरै बोलिँदैन।।७६।।

**अभ्यावहति कल्याणं विविधं वाक् सुभाषिता।**
**सैव दुर्भाषिता राजन्ननर्थायोपपद्यते।।७७।।**

राजन्! मधुर शब्दमा भनिएको कुरा अनेक प्रकारले कल्याणकारी हुन्छ, तर त्यही कुरा कटु शब्दमा भनियो भने त्यो महान् अनर्थको कारण पनि बन्छ।।७७।।

**रोहते सायकैर्विद्धं वनं परशुना हतम्।**
**वाता दुरुक्तं बीभत्सं न संरोहति वाक्क्षतम्।।७८।।**

बाणको चोट र बन्चराले काटिएको वन पनि फेरि पलाउँछ, तर कटु वचनबाट बनेको घाउ कहिल्यै निको हुँदैन।।७८।।

**कर्णिनालीकनाराचान्निर्हरन्ति शरीरतः।**
**वाक्शल्यस्तु न निर्हर्तुं शक्यो हृदिशयो हि सः।।७९।।**

कर्णि, नालीक र नाराच नामक बाण शरीरबाट निकाल्न सकिन्छ, तर हृदयमा बसेको वाणीरूपी बाणले छेड गरेको काँडालाई निकाल्न सकिँदैन, किनभने त्यो हृदयभित्र धसेको हुन्छ।।७९।।

**वाक्सायका वदनान्निष्पतन्ति**
**यैराहतः शोचति रात्र्यहानि।**
**परस्य नामर्मसु ते पतन्ति**
**तान् पण्डितो नावसृजेत् परेभ्यः।।८०।।**

वचनरूपी बाण मुखबाट निस्केर अर्काको मर्ममा लाग्छ, त्यसबाट आहत मनुष्य दिनरात पीडित हुन्छ। अतः विद्वान् पुरुषले वचनरूपी बाणको प्रयोग नगरोस्।।८०।।

**यस्मै देवाः प्रयच्छन्ति पुरुषाय पराभवम्।**
**बुद्धिं तस्यापकर्षन्ति सोऽवाचीनानि पश्यति।।८१।।**

देवताहरूले जसलाई पराजय दिन्छन् त्यसको बुद्धि पहिल्यैदेखि हरिदिन्छन्। यसर्थ उसले नीच कर्ममा नै धेरै दृष्टि दिन्छ।।८१।।

**बुद्धौ कलुषभूतायां विनाशे प्रत्युपस्थिते।**
**अनयो नयसङ्काशो हृदयान्नावसर्पति।।८२।।**

विनाशकाल आएपछि बुद्धि मलिन र कलुषित हुन्छ जसको परिणामस्वरूप न्यायसमान प्रतीत हुने अन्याय हृदयबाट निस्कन्छ।।८२।।

**सेयं बुद्धिः परीता ते पुत्राणां भरतर्षभ।**
**पाण्डवानां विरोधेन न चैनानवबुध्यसे।।८३।।**

हे भरतश्रेष्ठ! हजुरका पुत्रको बुद्धि पाण्डवहरूप्रति विरोधले व्याप्त भएका कारण हजुरले पहिचान गर्न नसक्नुभएको हो।।८३।।

**राजा लक्षणसम्पन्नस्त्रैलोक्यस्यापि यो भवेत्।**
**शिष्यस्ते शासिता सोऽस्तु धृतराष्ट्र युधिष्ठिरः।।८४।।**

महाराज धृतराष्ट्र! जुनसुकै राजा लक्षणसम्पन्न भएका कारण तीनै लोकको पनि राजा हुन सक्छ। हजुरको आज्ञाकारी युधिष्ठिर नै यो सम्पूर्ण पृथिवीको शासक हुन योग्य छन्।।८४।।

**अतीव सर्वान् पुत्रास्ते भागधेयपुरस्कृतः।**
**तेजसा प्रज्ञया चैव युक्तो धर्मार्थतत्त्ववित्।।८५।।**

यो राज्यांशबाट पुरस्कृत, धर्म र अर्थको तत्त्व जान्ने, तेज र बुद्धियुक्त, पूर्ण सौभाग्यशाली युधिष्ठिर हजुरका पुत्रहरूभन्दा पनि महत्त्वपूर्ण रहेका छन्।।८५।।

**अनुक्रोशादानृशंस्याद् योऽसौ धर्मभृतां वरः।**
**गौरवात् तव राजेन्द्र बहून् क्लेशांस्तितिक्षते।।८६।।**

हे राजेन्द्र! धर्मधारीहरूमध्ये श्रेष्ठ युधिष्ठिर दया, सौम्य भाव तथा हजुरप्रतिको गौरव बुद्धिका कारण धेरै कष्ट सहिरहेका छन्।।८६।।

●

# तृतीयोऽध्याय

धृतराष्ट्र उवाच

**ब्रूहि भूयो महाबुद्धे धर्मार्थसहितं वचः।**
**शृण्वतो नास्ति मे तृप्तिर्विचित्राणीह भाषसे।।१।।**

धृतराष्ट्रले भने– हे महाबुद्धे! तिमीले पुनः धर्म र अर्थयुक्त कुरा बताऊ। यी कुराहरू सुनेर म तृप्त हुने छैन जुन विषयमा तिमी अद्भुत भाषण गर्न सक्छौ।।१।।

विदुर उवाच

**सर्वतीर्थेषु वा स्नानं सर्वभूतेषु चार्जवम्।**
**उभे त्वेते समे स्यातामार्जवं वा विशिष्यते।।२।।**

विदुरले भने– सबै तीर्थमा स्नान र सबै प्राणीका साथ कोमल व्यवहार यी दुई एकसमान छन्। यीमध्ये कोमल व्यवहारको विशेष महत्त्व छ।।२।।

**आर्जवं प्रतिपद्यस्व पुत्रेषु सततं विभो।**
**इह कीर्तिं परां प्राप्य प्रेत्य स्वर्गमवाप्स्यसि।।३।।**

हे विभो! हजुर आफ्ना छोरा कौरव र पाण्डव दुवैका साथ समान रूपले कोमल व्यवहार गर्नुहोस्। यसो गर्नाले यस लोकमा महान् सुयश प्राप्त गर्नुका साथै मरेपछि हजुर स्वर्गलोकमा जानुहुने छ।।३।।

**यावत्कीर्तिर्मनुष्यस्य पुण्या लोके प्रगीयते।**
**तावत् स पुरुषव्याघ्र स्वर्गलोके महीयते।।४।।**

हे पुरुषश्रेष्ठ! यो लोकमा जबसम्म मनुष्यको पावन कीर्तिको गान गरिन्छ तबसम्म त्यो स्वर्गमा पनि प्रतिष्ठित हुन्छ।।४।।

**अत्राप्युदाहरन्तीममितिहासं पुरातनम्।**
**विरोचनस्य संवादं केशिन्यर्थे सुधन्वना।।५।।**

यो विषयमा प्राचीन इतिहासको उदाहरण दिने गरिन्छ जसमा केशिनीका लागि सुधन्वाका साथ विरोचनको विवादको वर्णन गरिएको पाइन्छ।।५।।

**स्वयंवरे स्थिता कन्या केशिनी नाम नामतः।।**
**रूपेणाप्रतिमा राजन् विशिष्टपतिकाम्यया।।६।।**

राजन्! कुनै समयको कुरा हो। केशिनी नामकी एक अनुपम सुन्दरी कन्या सर्वश्रेष्ठ पतिको वरण गर्ने इच्छाले स्वयंवर सभामा उपस्थित भइन्।।६।।

**विरोचनोऽथ दैतेयस्तदा तत्राजगाम ह।**
**प्राप्तुमिच्छंस्ततस्तत्र दैत्येन्द्रं प्राह केशिनी।।७।।**

त्यही समयमा दितिका छोरा विरोचन उसलाई पाउने इच्छाले त्यहाँ आए। त्यहाँ केशिनीले दैत्यराजसँग यस प्रकारको कुराकानी गरिन्।।७।।

केशिन्युवाच

**किं ब्राह्मणाः स्विच्छ्रेयांसो दितिजाः स्विद् विरोचन।**
**अथ केन स्म पर्यङ्कं सुधन्वा नाधिरोहति।।८।।**

केशिनीले भनिन्– विरोचन! ब्राह्मण श्रेष्ठ हुन्छन् या दैत्य? यदि ब्राह्मण श्रेष्ठ हुन्छन् भने सुधन्वा ब्राह्मण नै मेरो शय्यामा किन नबस्ने? (अर्थात् मैले सुधन्वालाई वरण किन नगर्ने?)।।८।।

विरोचन उवाच

**प्राजापत्यास्तु वै श्रेष्ठा वयं केशिनि सत्तमाः।**
**अस्माकं खल्विमे लोकाः के देवाः के द्विजातयः।।९।।**

विरोचनले भने– केशिनी! हामी प्रजापतिका श्रेष्ठ सन्तान हौँ, अतः सबैभन्दा उत्तम हामी नै हौँ। यो संसार हाम्रै हो। हाम्रो सामु देवता र ब्राह्मण के हुन् र?।।९।।

केशिन्युवाच

**इहैवावां प्रतीक्षाव उपस्थाने विरोचन।**
**सुधन्वा प्रातरागन्ता पश्येयं वा समागतौ।।१०।।**

केशिनीले भनिन्– विरोचन! यही ठाउँमा हामी प्रतीक्षा गरौँ। भोलि बिहान सुधन्वा यहाँ आउने छन्, फेरि मैले तपाईंहरू दुईलाई एकै ठाउँमा उपस्थित भएको देख्ने छु।।१०।।

विरोचन उवाच

**तथा भद्रे करिष्यामि यथा त्वं भीरु भाषसे।**
**सुधन्वानं च मां चैव प्रातर्द्रष्टासि सङ्गतौ।।११।।**

विरोचनले भने– कल्याणी! तिमी जे भन्छ्यौ त्यही गर्छु। भीरु! भोलि बिहान म र सुधन्वा एकसाथ उपस्थित भएको देख्ने छ्यौ।।११।।

विदुर उवाच

**अतीतायां च सर्वर्यामुदिते सूर्यमण्डले।**
**अथाजगाम तं देशं सुधन्वा राजसत्तम।।१२।।**

विदुरले भने– राजाहरूमध्ये श्रेष्ठ धृतराष्ट्र! यसपछि जब रात बित्यो र सूर्यमण्डलमा सूर्योदय भयो त्यो समयमा सुधन्वा त्यो स्थानमा आए।।१२।।

**विरोचनो यत्र विभो केशिन्या सहितः स्थितः।**
**सुधन्वा च समागच्छत् प्राह्लादिं केशिनीं तथा।।१३।।**
**समागतं द्विजं दृष्ट्वा केशिनी भरतर्षभ।**
**प्रत्युत्थायासनं तस्मै पाद्यमर्घ्यं ददौ पुनः।।१४।।**

जहाँ विरोचन केशिनीका साथ उपस्थित थिए त्यही ठाउँमा सुधन्वा आएपछि ब्राह्मण आएको देखेर केशिनी उठिन् र उनलाई आसन, पाद्य एवम् अर्घ्य दिइन्।।१३–१४।।

सुधन्वोवाच

**अन्वालभे हिरण्मयं प्राह्लादे ते वरासनम्।**
**एकत्वमुपसम्पन्नो न त्वासेऽहं त्वया सह।।१५।।**

सुधन्वाले भने– हे प्रह्लादनन्दन! म तिम्रो यो सुवर्णमय सिंहासन केवल छोइदिन्छु, तिम्रो साथ बस्न सक्दिनँ, किनभने एकसाथ बसेमा हामी दुई एकसमान हुन्छौँ।।१५।।

विरोचन उवाच

**तवार्हते तु पलकं कूर्चं वाप्यथवा बृसी।**
**सुधन्वन्न त्वमर्होऽसि मया सह समासनम्।।१६।।**

विरोचनले भने– सुधन्वन्! तिम्रा लागि पिर्का, चटाई र कुशको आसन उचित हुन्छ। तिमी मेरो समान र बराबरको आसनमा बस्न योग्य नै छैनौ।।१६।।

सुधन्वोवाच

**पितापुत्रौ सहासीतां द्वौ विप्रौ क्षत्रियावपि।**
**वृद्धौ वैश्यौ च शूद्रौ च न त्वन्यावितरेतरम्।।१७।।**

सुधन्वाले भने– बाबु र छोरा एकसाथ एउटा आसनमा बस्न सक्छन्; दुई ब्राह्मण, दुई क्षत्रिय, दुई वृद्ध, दुई वैश्य र दुई शूद्र पनि एकसाथ एउटा आसनमा बस्न सक्छन्; तर भिन्नभिन्न व्यक्ति परस्पर एकसाथ एउटा आसनमा बस्न सक्दैनन्।।१७।।

**पिता हि ते समासीनमुपासीतैव मामधः।**
**बालः सुखैधितो गेहे न त्वं किञ्चन बुद्ध्यसे।।१८।।**

तिम्रा पिता तलै बसेर मेरो सेवा गर्छन्। तिमी अझै बालक छौ, घरमा सुखपूर्वक पालिएका छौ, तसर्थ तिमीलाई यस्ता कुराका सम्बन्धमा कुनै ज्ञान छैन।।१८।।

विरोचन उवाच

**हिरण्यं च गवाश्वं च यद्वित्तमसुरेषु नः।**
**सुधन्वन् विपणे तेन प्रश्नं पृच्छाव ये विदुः।।१९।।**

विरोचनले भने– सुधन्वन्! हामी असुरहरूका साथ सुन, गाई, घोडा आदि धन छन्। ती सबैको बाजी लगाउँछु। यो विषयमा जानकार व्यक्तिलाई हामी दुईमध्ये को श्रेष्ठ हो भनेर सोधौँ।।१९।।

सुधन्वोवाच

**हिरण्यं च गवाश्वं च तवैवास्तु विरोचन।**
**प्राणयोस्तु पणं कृत्वा प्रश्नं पृच्छाव ये विदुः।।२०।।**

सुधन्वाले भने– विरोचन! सुवर्ण, गाई र घोडा तिम्रो साथमा रहून्। हामी दुई प्राणको बाजी लगाएर जो जानकार छ त्यसलाई सोधौँ।।२०।।

विरोचन उवाच

**आवां कुत्र गमिष्याव: प्राणयोर्विपणे कृते।**
**न तु देवेष्वहं स्थाता न मनुष्येषु कर्हिचित्।।२१।।**

विरोचनले भने– ठीक छ। हामी दुईले प्राणको बाजी लगाइसकेपछि कहाँ जाने? म न देवताहरूकहाँ जान सक्छु न त कहिल्यै मनुष्यहरूबाट निर्णय गराउन सक्छु।।२१।।

सुधन्वोवाच

**पितरं ते गमिष्याव: प्राणयोर्विपणे कृते।**
**पुत्रस्यापि स हेतोर्हि प्रह्लादो नानृतं वदेत्।।२२।।**

सुधन्वाले भने– प्राणको बाजी लगाएर हामी दुवै तिम्रा पिताकहाँ जाने छौँ। (मलाई विश्वास छ) प्रह्लादले आफ्ना छोराका लागि पनि झूटो बोल्ने छैनन्।।२२।।

विदुर उवाच

**एवं कृतपणौ क्रुद्धौ तत्राभिजग्मतुस्तदा।**
**विरोचनसुधन्वानौ प्रह्लादो यत्र तिष्ठति।।२३।।**

विदुरले भने– यसरी ज्यानको बाजी लगाएर परस्पर क्रुद्ध हुँदै विरोचन र सुधन्वा दुवै प्रह्लाद भएको ठाउँमा गए।।२३।।

प्रह्लाद उवाच

**इमौ तौ सम्प्रदृश्येते याभ्यां न चरितं सह।**
**आशीविषाविव क्रुद्धावेकमार्गाविहागतौ।।२४।।**

प्रह्लादले (मनमनै) भने– जो कहिल्यै एकसाथ हिँड्न सक्दैनन् ती दुई सुधन्वा र विरोचन आज सर्पजस्तै क्रुद्ध भएर एउटै बाटो आएको देखिन्छ।।२४।।

**किं वै सहैवं चरथो न पुरा चरथः सह।**
**विरोचनैतत् पृच्छामि किं ते सख्यं सुधन्वना।।२५।।**

(विरोचनलाई भने) हे विरोचन! म तिमीसँग सोध्छु– के सुधन्वाका साथ तिम्रो मित्रता भएको हो? फेरि कसरी एकसाथ आइरहेका छौ? यसभन्दा पहिले त तिमी दुई कहिल्यै एकसाथ हिँडेको देखिँदैनथ्यो।।२५।।

विरोचन उवाच

**न मे सुधन्वना सख्यं प्राणयोर्विपणावहे।**
**प्रह्लाद तत्त्वं पृच्छामि मा प्रश्नमनृतं वदेः।।२६।।**

विरोचनले भने– पिताजी! सुधन्वाका साथ मेरो मित्रता भएको होइन। हामी दुई प्राणको बाजी लगाएर आएका छौँ। म हजुरसँग यथार्थ कुरा सोध्छु, मेरो प्रश्नको झूटो उत्तर नदिनुहोला।।२६।।

प्रह्लाद उवाच

**उदकं मधुपर्कं वाऽप्यानयन्तु सुधन्वने।**
**ब्रह्मन्नभ्यर्चनीयोऽसि श्वेता गौः पीवरीकृता।।२७।।**

प्रह्लादले भने– सेवकहो! सुधन्वाका लागि जल र मधुपर्क ल्याओ। (फेरि सुधन्वालाई भने) ब्रह्मन्! हजुर मेरो पूजनीय अतिथि हुनुहुन्छ। म हजुरलाई सेतो मोटो गाई टक्र्याउँछु।।२७।।

सुधन्वोवाच

**उदकं मधुपर्कं च पथिष्वेवार्पितं मम।**
**प्रह्लाद त्वं तु मे तथ्यं प्रश्नं प्रब्रूहि पृच्छतः।**
**किं ब्राह्मणाः स्विच्छ्रेयांस उताहो स्विद्विरोचनः।।२८।।**

सुधन्वाले भने– प्रह्लाद! जल एवम् मधुपर्क त मलाई बाटोमै मिलिसक्यो। हजुर यो कुरा बताउनुहोस् र यसको सही उत्तर दिनुहोस्। ब्राह्मण श्रेष्ठ हुन् या विरोचन?।।२८।।

प्रह्लाद उवाच

**पुत्र एको मम ब्रह्मंस्त्वं च साक्षादिहास्थितः।**
**तयोर्विवदतोः प्रश्नं कथमस्मद्विधो वदेत्।।२९।।**

प्रह्लादले भने– ब्रह्मन्! मेरो एउटै पुत्र छ र अर्कातर्फ तिमी स्वयम् उपस्थित छौ। तिमीहरू दुईको विवादमा मैले कसरी निर्णय दिन सकुँला र?।।२९।।

सुधन्वोवाच

**गां प्रदद्यास्त्वौरसाय यद्वाऽन्यत् स्यात् प्रियं धनम्।**
**द्वयोर्विवदतोस्तथ्यं वाच्यं च मतिमंस्त्वया।।३०।।**

सुधन्वाले भने– मतिमन्! हजुरसँग गाई (पृथ्वी) र अन्य जेजस्तो प्रकारको प्रिय धन छ त्यो सबै तपाईंको औरस पुत्र विरोचनलाई दिनू, तर हामी दुईको विवादमा हजुरले ठीकठीक उत्तर दिनुपर्ने छ।।३०।।

प्रह्लाद उवाच

**अथ यो नैव प्रब्रूयात् सत्यं वा यदि वाऽनृतम्।**
**एतत् सुधन्वन् पृच्छामि दुर्विवक्ता स्म किं वसेत्।।३१।।**

प्रह्लादले भने– सुधन्वन्! अब म तिमीलाई यो कुरा सोध्छु, जो सत्य बोल्दैन र असत्य निर्णय दिन्छ यस्तो दुष्ट वक्ताको स्थिति के हुन्छ?।।३१।।

सुधन्वोवाच

**यां रात्रिमधिविन्ना स्त्री यां चैवाक्षपराजितः।**
**यां च भाराभितप्ताङ्गो दुर्विवक्ता स्म तां वसेत्।।३२।।**

सुधन्वाले भने– सौता भएकी नारी, जुवामा हारेको जुवाडे र भारी बोकेर थाकेको मनुष्यको रातमा जुन स्थिति हुन्छ त्यही स्थिति गलत निर्णय र न्याय दिने वक्ताको हुन्छ।।३२।।

**नगरे प्रतिरुद्धः सन् बहिर्द्वारि बुभुक्षितः।**
**अमित्रान् भूयसः पश्येत् यः साक्ष्यमनृतं वदेत्।।३३।।**

जसले झूटो निर्णय दिन्छ त्यो राजाले नगरमा कैदी बनेर भोकले व्याकुल बन्दै ढोकामा रहेका शत्रुहरूलाई हेर्नुपर्छ।।३३।।

**पञ्च पश्वनृते हन्ति दश हन्ति गवानृते।**
**शतमश्वानृते हन्ति सहस्रं पुरुषानृते।।३४।।**

पशुका लागि झूटो बोल्नेले पाँच पिँढी, गाईका लागि झूटो बोल्नेले १० पिँढी, घोडाका लागि झूटो बोल्नेले सय पिँढी र मनुष्यका लागि झूटो बोल्नेले एक हजार पिँढीसम्मका मनुष्यलाई नरकमा धकेल्छ।।३४।।

**हन्ति जाता न जातांश्च हिरण्यार्थेऽनृतं वदन्।**
**सर्वं भूम्यनृते हन्ति मा स्म भूम्यनृतं वदेः।।३५।।**

सुनका लागि झूटो बोल्नेले भूत र भविष्यका सबै पिँढीलाई नरकमा पार्छ। पृथिवीका लागि झूटो बोल्नेले आफ्नो सर्वनाश गर्छ। यसर्थ तिमी भूमिका लागि कहिल्यै पनि झूटो नबोल्नू।।३५।।

प्रह्लाद उवाच

**मत्तः श्रेयान् अङ्गिरा वै सुधन्वा त्वद् विरोचन।**
**माताऽस्य श्रेयसी मातुस्तस्मात्त्वं तेन वै जितः।।३६।।**

प्रह्लादले भने– विरोचन! सुधन्वाका पिता अङ्गिरा मभन्दा श्रेष्ठ छन्, सुधन्वा तिमीभन्दा श्रेष्ठ छन्, सुधन्वाकी आमा तिम्री आमाभन्दा श्रेष्ठ छिन्। अतः आज तिमी सुधन्वासँग हार्‍यौ।।३६।।

**विरोचन सुधन्वाऽयं प्राणानामीश्वरस्तव।**
**सुधन्वन् पुनरिच्छामि त्वया दत्तं विरोचनम्।।३७।।**

विरोचन! सुधन्वा अब तिम्रो प्राणका मालिक हुन्। सुधन्वन्! यदि तिमी विरोचन दिन्छौ भने म पाउन चाहन्छु।।३७।।

सुधन्वोवाच

**यद्धर्ममवृणीथास्त्वं न कामादनृतं वदीः।**
**पुनर्ददामि ते पुत्रं तस्मात् प्रह्लाद दुर्लभम्।।३८।।**

सुधन्वाले भने– प्रह्लाद! हजुरले धर्मलाई स्वीकार गर्नुभएको छ, स्वार्थका कारण झूटो बोल्नुभएको छैन। यसर्थ अब यो दुर्लभ तपाईंको पुत्र तपाईंलाई नै सुम्पन्छु।।३८।।

**एषः प्रह्लादपुत्रस्ते मया दत्तो विरोचनः।**
**पादप्रक्षालनं कुर्यात् कुमार्याः सन्निधौ मम।।३९।।**

प्रह्लाद! हजुरको यो पुत्र विरोचन मैले पुनः हजुरलाई नै दिएँ, तर विरोचनले अब कुमारी केशिनीको नजिक गएर मेरा पाऊ धुनुपर्छ।।३९।।

विदुर उवाच

**तस्माद्राजेन्द्र! भूम्यर्थे नानृतं वक्तुमर्हसि।**
**मा गमः ससुतामात्यो नाशं पुत्रार्थमब्रुवन्।।४०।।**

विदुरले भने– यसर्थ हे राजेन्द्र! हजुर पृथ्वीका लागि झूटो नबोल्नुहोस्। छोराहरूको स्वार्थका लागि साँचो कुरा नभनेर पुत्र र मन्त्रीहरूका साथ विनाशतर्फ नजानुहोस्।।४०।।

**न देवा दण्डमादाय रक्षन्ति पशुपालवत्।**
**यं तु रक्षितुमिच्छन्ति बुद्ध्या संविभजन्ति तम्।।४१।।**

देवताहरूले गोठालाले जस्तो लौरो लिएर पहरा दिँदैनन्, उनीहरूले जसको जसरी रक्षा गर्नुपर्ने हो त्यसरी त्यसलाई उत्तम बुद्धियुक्त बनाइदिन्छन्।।४१।।

**यथा यथा हि पुरुषः कल्याणे कुरुते मनः।**
**तथा तथाऽस्य सर्वार्थाः सिद्ध्यन्ते नात्र संशयः।।४२।।**

मनुष्यले जसरी कल्याणमा मन लगाउँछ त्यसरी नै उसका सारा अभीष्ट सिद्ध हुन्छन्। यसमा कुनै सन्देह छैन।।४२।।

**नैनं छन्दांसि वृजनात् तारयन्ति**
**मायाविनं मायया वर्तमानम्।**
**नीडं शकुन्ता इव जातपक्षा-**
**श्छन्दांस्येनं प्रजहत्यन्तकाले।।४३।।**

कपटपूर्ण व्यवहार गर्ने मायावीलाई वेदले पापमुक्त गर्न सक्दैनन्। जसरी प्वाँख निस्किएपछि चराहरूले गुँड छाड्छन् त्यसै गरी वेदले पनि अन्त्यकालमा उसलाई त्यागिदिन्छन्।।४३।।

**मद्यपानं कलहं पूगवैरं**
**भार्यापत्योरन्तरं ज्ञातिभेदम्।**
**राजद्विष्टं स्त्रीपुंसयोर्विवादं**
**वर्ज्यान्याहुर्यश्च पन्थाः प्रदुष्टः।।४४।।**

मद्यपान, कलह, समूहका साथ वैर, पतिपत्नीबीच भेद पैदा गर्नु, कुटुम्बहरूका बीच भेद उत्पन्न गर्नु, राजाका साथ द्वेष, नारी र पुरुषबीच विवाद र गलत बाटो त्यागिदिन योग्य हुन्छन्।।४४।।

**सामुद्रिकं वणिजं चोरपूर्वं**
**शलाकधूर्त्तं च चिकित्सकं च।**
**अरिं च मित्रं च कुशीलवं च**
**नैतान् साक्ष्ये त्वधिकुर्वीत सप्त।।४५।।**

हस्तरेखा देख्ने, चोरी गरेर व्यापार गर्ने, जुवाडे, वैद्य, शत्रु, मित्र एवम् नर्तक गरी यी सातलाई कहिल्यै साक्षी नबनाउनू।।४५।।

**मानाग्निहोत्रमुत मानमौनं**
**मानेनाधीमुत मानयज्ञः।**
**एतानि चत्वार्यभयङ्कराणि**
**भयं प्रयच्छन्त्ययथाकृतानि।।४६।।**

आदरका साथ अग्निहोत्र, आदरपूर्वक मौन व्रतको पालन, आदरपूर्वक स्वाध्याय र आदरका साथ यज्ञानुष्ठान गरी यी चार कर्म भयलाई भगाउनेवाला रहेका छन्; तर यिनै कुरा ठीकसँग सम्पादन नभएको अवस्थामा भय प्रदान गर्नेवाला पनि हुन्छन्।।४६।।

**अगारदाही गरदः कुण्डाशी सोमविक्रयी।**
**पर्वकारश्च सूची च मित्रध्रुक् पारदारिकः।।४७।।**
**भ्रूणहा गुरुतल्पी च यश्च स्यात् पानपो द्विजः।**
**अतितीक्ष्णश्च काकश्च नास्तिको वेदनिन्दकः।।४८।।**
**स्रुवप्रग्रहणो व्रात्यः कीनाशश्चात्मवानपि।**
**रक्षेत्युक्तश्च यो हिंस्यात् सर्वे ब्रह्महभिः समाः।।४९।।**

घरमा आगो लगाउने, विष दिने, जारज सन्तानको कमाइ खाने, सोमरस बेच्ने, शस्त्र बनाउने, चुक्ली लगाउने, मित्रद्रोही, परस्त्री-लम्पट, गर्भको हत्या गर्ने, गुरुस्त्रीगामी, ब्राह्मण भएर मदिरा पिउने, कडा स्वभावको, कागजस्तै कराउने, नास्तिक, वेदको निन्दक, सर्वत्र यज्ञ गराउने, व्रात्य, क्रूर र शक्ति हुँदाहुँदै आत्मरक्षाका लागि प्रार्थना गर्दागर्दै पनि जसले हिंसा गर्छ यी सबै ब्रह्महत्यासमान मानिन्छन्।।४९।।

**तृणोल्कया ज्ञायते जातरूपं**
**वृत्तेन भद्रो व्यवहारेण साधुः।**
**शूरो भयेष्वर्थकृच्छ्रेषु धीरः**
**कृच्छ्रेष्वापत्सु सुहृदश्चारयश्च।।५०।।**

आगोबाट सुनको, सदाचारबाट सत्पुरुषको, व्यवहारबाट साधुको, भयबाट शूरको, आर्थिक कठिनाइबाट धीरको र कठिन आपत्तिको अवस्थामा शत्रु एवम् मित्रको परीक्षा हुन्छ।।५०।।

**जरा रूपं हरति हि धैर्यमाशा**
**मृत्युः प्राणान् धर्मचर्यामसूया।**
**क्रोधः श्रियं शीलमनार्यसेवा**
**ह्रियं कामः सर्वमेवाभिमानः।।५१।।**

वृद्धावस्थाले रूपलाई, आशाले धीरतालाई, मृत्युले प्राणलाई, दोष मात्र देख्ने आदतले धर्मलाई, क्रोधले लक्ष्मीलाई, नीच पुरुषको सेवाले सत् स्वभावलाई, कामले लज्जालाई र अभिमानले सर्वस्व नष्ट गरिदिन्छ।।५१।।

**श्रीर्मङ्गलात् प्रभवति प्रागल्भ्यात् सम्प्रवर्धते।**
**दाक्ष्यात्तु कुरुते मूलं संयमात् प्रतितिष्ठति।।५२।।**

शुभ कर्मबाट लक्ष्मीको उत्पत्ति हुन्छ, प्रगल्भता (चातुर्य) बाट बढ्छ, दक्षताबाट लक्ष्मीले जरो गाड्छिन् भने संयमबाट लक्ष्मी सुरक्षित र चिरस्थायी हुन्छिन्।।५२।।

**अष्टौ गुणाः पुरुषं दीपयन्ति**
**प्रज्ञा च कौल्यं च दमः श्रुतं च।**
**पराक्रमाश्चाबहुभाषिता च**
**दानं यथाशक्ति कृतज्ञता च।।५३।।**

बुद्धि, कुलीनता, दम, शास्त्रज्ञान, पराक्रम, थोरै बोल्नु, यथाशक्ति दान दिनु र कृतज्ञ हुनु गरी यी आठ गुणले पुरुषको शोभा बढाउँछन्।।५३।।

**एतान् गुणांस्तात महानुभावा-**
**नेको गुणः संश्रयते प्रसह्य।**
**राजा यदा सत्कुरुते मनुष्यं**
**सर्वान्गुणानेष गुणो विभाति।।५४।।**

तात! एउटा गुण यस्तो पनि छ जसले यी सबै महत्त्वपूर्ण गुणमा हठात् अधिकार जमाउँछ। त्यो समय जुन समयमा राजाले कुनै मनुष्यको सत्कार गर्छ त्यो समय एउटै गुण (राजसम्मान) अन्य सबै गुणमा देखा पर्छन्।।५४।।

**अष्टौ नृपेमानि मनुष्यलोके**
**स्वर्गस्य लोकस्य निदर्शनानि।**
**चत्वार्येषामन्ववेतानि सद्भि-**
**श्चत्वारि चैषामनुयान्ति सन्तः।।५५।।**

हे राजन्! मनुष्यलोकमा यी आठ गुण स्वर्गलोकको दर्शन गराउनेवाला रहेका छन्। यीमध्ये चार सन्तका साथ नित्य सम्बद्ध छन्

तथा सन्तमा सदा विद्यमान रहन्छन् र अन्य चारको अनुसरण सज्जनहरूले गर्छन्।।५५।।

**यज्ञो दानमध्ययनं तपश्च**
**चत्वार्येतान्यन्वेतानि सद्भिः।**
**दमः सत्यमार्जवमानृशंस्यं**
**चत्वार्येतान्यनुयान्ति सन्तः।।५६।।**

यज्ञ, दान, अध्ययन र तप गरी यी चार कुराले सज्जनका साथ नित्य सम्बन्ध राख्छन् भने इन्द्रियनिग्रह, सत्य, सरलता तथा कोमलताको अनुसरण सन्तहरूले गर्छन्।।५६।।

**इज्याध्ययनदानानि तपः सत्यं क्षमा धृणा।**
**अलोभ इति मार्गोऽयं धर्मस्याष्टविधः स्मृतः।।५७।।**

यज्ञ, अध्ययन, दान, तप, सत्य, क्षमा, दया र अलोभ गरी धर्मका आठ प्रकारका मार्गहरू बताइएका छन्।।५७।।

**तत्र पूर्वचतुर्वर्गो दम्भार्थमपि सेव्यते।**
**उत्तरश्च चतुर्वर्गो नामहात्मसु तिष्ठति।।५८।।**

आठ प्रकारका मार्गमध्ये पहिलेका चार दम्भका लागि सेवन गर्न सकिन्छ र अन्तिम चार त जो महात्मा छैन उसमा रहन सक्दैनन्।।५८।।

**न सा सभा यत्र न सन्ति वृद्धा**
**न ते वृद्धा ये न वदन्ति धर्मम्।**
**नासौ धर्मो यत्र न सत्यमस्ति**
**न तत् सत्यं यच्छलेनाभ्युपेतम्।।५९।।**

जुन सभामा बूढा छैनन् त्यो सभा होइन, जसले धर्मको कुरा बोल्दैन त्यो बूढो होइन, जसमा सत्य छैन त्यो धर्म होइन र जुन कपटपूर्ण हुन्छ त्यो सत्य होइन।।५९।।

**सत्यं रूपं श्रुतं विद्या कौल्यं शीलं बलं धनम्।**
**शौर्यं च चित्रभाष्यं च दशेमे स्वर्गयोनयः।।६०।।**

सत्य, रूप, शास्त्रज्ञान, विद्या, कुलीनता, शील, बल, धन, शूरता र चमत्कार गरी यी १० स्वर्गका साधन हुन्।।६०।।

**पापं कुर्वन् पापकीर्तिः पापमेवाश्नुते फलम्।**
**पुण्यं कुर्वन् पुण्यकीर्तिः पुण्यमत्यन्तमश्नुते।।६१।।**

पाप गर्ने मनुष्यले पापाचरण गर्दै पापरूप फल प्राप्त गर्छ, पुण्यकर्मी मनुष्यले पुण्य गर्दै पुण्यफलको उपभोग गर्छ।।६१।।

**तस्मात् पापं न कुर्वीत पुरुषः शंसितव्रतः।**
**पापं प्रज्ञां नाशयति क्रियमाणं पुनः पुनः।।६२।।**

तसर्थ अनुशासित पुरुषले पाप गर्नु हुँदैन, किनभने पटकपटक गरिएको पापले बुद्धिलाई नष्ट गरिदिन्छ।।६२।।

**नष्टप्रज्ञः पापमेव नित्यमारभते नरः।**
**पुण्यं प्रज्ञां वर्धयति क्रियमाणं पुनः पुनः।।६३।।**

जसको बुद्धि नष्ट भएको छ त्यो मनुष्यले सदा पाप नै गर्छ। यसै गरी बारम्बार गरिएको पुण्यकर्मले बुद्धिलाई बढाउँछ।।६३।।

**वृद्धप्रज्ञः पुण्यमेव नित्यमारभते नरः।**
**पुण्यं कुर्वन् पुण्यकीर्तिः पुण्यं स्थानं स्म गच्छति।**
**तस्मात् पुण्यं निषेवेत पुरुषः सुसमाहितः।।६४।।**

जसको बुद्धि बढेको हुन्छ त्यो मनुष्यले सदा पुण्य नै गर्छ र यसरी पुण्यकर्मा मनुष्य पुण्य कमाउँदै पुण्यलोकमा जान्छ। यसर्थ मनुष्यले सदा एकाग्रचित्त भएर पुण्यकै सेवन गर्नुपर्छ।।६४।।

**असूयको दन्दशूको निष्ठुरो वैरकृच्छठः।**
**स कृच्छ्रं महदाप्नोति नचिरात् पापमाचरन्।।६५।।**

गुणमा दोष देख्नेवाला, मर्ममा आघात गर्नेवाला, निर्दयी, शत्रुता गर्नेवाला र शठ मनुष्यले पापाचरण गर्दै छिटै महाकष्ट प्राप्त गर्छ।।६५।।

**अनसूयुः कृतप्रज्ञः शोभनान्याचरन् सदा।**
**नकृच्छ्रं महदाप्नोति सर्वत्र च विरोचते।।६६।।**

दोषदृष्टिरहित शुद्ध बुद्धियुक्त पुरुषले सदा शुभ कर्मको अनुष्ठान गर्दै महान् सुख प्राप्त गर्छ र उसको सर्वत्र सम्मान पनि हुन्छ।।६६।।

**प्रज्ञामेवागमयति यः प्राज्ञेभ्यः स पण्डितः।**
**प्राज्ञो ह्यवाप्य धर्मार्थौ शक्नोति सुखमेधितुम्।।६७।।**

जसले बुद्धिमान् पुरुषबाट सद्बुद्धि प्राप्त गर्छन् तिनै पण्डित हुन्, किनभने बुद्धिमान् पुरुष नै धर्म र अर्थलाई प्राप्त गरेर अनायास नै आफ्नो उन्नति गर्न समर्थ हुन्छ।।६७।।

**दिवसेनैव तत् कुर्यात् येन रात्रौ सुखं वसेत्।**
**अष्टमासेन तत् कुर्याद् येन वर्षाः सुखं वसेत्।।६८।।**

दिनभर यस्तो कार्य गर्नू जसका कारण रात सुखपूर्वक बित्न सकोस्, वर्षमा आठ महिना यस्तो कार्य हुन सकोस् जसबाट वर्षाका चार महिना सुखपूर्वक व्यतीत गर्न सकियोस्।।६८।।

**पूर्वे वयसि तत्कुर्यात् येन वृद्धः सुखं वसेत्।**
**यावज्जीवेन तत्कुर्याद् येन प्रेत्य सुखं वसेत्।।६९।।**

जीवनको पहिलो अवस्थामा यस्तो काम गर्नू जसबाट वृद्धावस्थामा सुखपूर्वक रहन सकियोस् र जीवनभर त्यो कार्य गर्नू जसका कारण मरेपछि पनि सुखपूर्वक रहन सकियोस्।।६९।।

**जीर्णमन्नं प्रशंसन्ति भार्यां च गतयौवनाम्।**
**शूरं विजितसङ्ग्रामं गतपारं तपस्विनम्।।७०।।**

सज्जन पुरुषले पचिसकेपछि अन्नको, जवानी बितिसकेपछि नारीको, सङ्ग्राम जितेपछि शूरको र तत्त्वज्ञान प्राप्त गरेपछि तपस्वीको प्रशंसा गर्छन्।।७०।।

**धनेनाधर्मलब्धेन यच्छिद्रमपिधीयते।**
**असंवृतं तद् भवति ततोऽन्यदवदीर्यते।।७१।।**

अधर्मद्वारा आर्जन गरिएको धनको दोष लुकाउँछु भन्दा पनि लुक्दैन, बरु त्योभन्दा भिन्न नयाँ दोष प्रकट हुन्छ।।७१।।

**गुरुरात्मवतां शास्ता शास्ता राजा दुरात्मनाम्।**
**अथ प्रच्छन्नपापानां शास्ता वैवस्वतो यमः।।७२।।**

मन एवं इन्द्रियहरूलाई वशमा राख्ने शिष्यहरूको शासक गुरु, दुष्टको शासक राजा र लुकीलुकी पाप गर्नेको शासक सूर्यपुत्र यमराज हुन्।।७२।।

**ऋषीणां च नदीनां च कुलानां च महात्मनाम्।**
**प्रभवो नाधिगन्तव्यः स्त्रीणां दुश्चरितस्य च।।७३।।**

ऋषि, नदी, महात्माहरूको कुल तथा नारीको दुश्चरित्रको मूल जान्ने प्रयत्न गर्नु हुँदैन।।७३।।

**द्विजातिपूजाभिरतो दाता ज्ञातिषु चार्जवी।**
**क्षत्रियः शीलभाग् राजंश्चिरं पालयते महीम्।।७४।।**

राजन्! ब्राह्मणको सेवापूजामा संलग्न रहनेवाला, दाता, कुटुम्बजनका प्रति कोमलताको व्यवहार गर्नेवाला र शीलवान् राजाले चिरकालसम्म पृथ्वीको पालन गर्छ।।७४।।

**सुवर्णपुष्पां पृथिवीं चिन्वन्ति पुरुषास्त्रयः।**
**शूरश्च कृतविद्यश्च यश्च जानाति सेवितुम्।।७५।।**

शूर, विद्वान् र सेवाधर्ममा संलग्न गरी तीन प्रकारका मनुष्य पृथिवीबाट सुवर्णरूपी पुष्पको सञ्चय गर्छन्।।७५।।

**बुद्धिश्रेष्ठानि कर्माणि बाहुमध्यानि भारत।**
**तानि जङ्घाजघन्यानि भारप्रत्यवराणि च।।७६।।**

हे भारत! बुद्धिपूर्वक गरिएको कर्म श्रेष्ठ हुन्छ, बाहुबलको माध्यमद्वारा गरिएको कर्म मध्यम हुन्छ र जङ्घाबाट हुने कर्म (गोपनीय कर्म) अधम र निन्दनीय हुन्छ।।७६।।

**दुर्योधनेऽथ शकुनौ मूढे दुःशासने तथा।**
**कर्णे चैश्वर्यमाधाय कथं त्वं भूतिमिच्छसि।।७७।।**

हे राजन्! हजुर दुर्योधन, शकुनि, मूर्ख दुःशासन र कर्णमाथि राज्यको भार राखेर कस्तो उन्नति चाहनुहुन्छ?।।७७।।

**सर्वैर्गुणैरूपेतास्तु पाण्डवा भरतर्षभ।**
**पितृवत् त्वयि वर्तन्ते तेषु वर्तस्व पुत्रवत्।।७८।।**

हे भरतश्रेष्ठ! पाण्डवहरू त सबै उत्तम गुणले युक्त छन् र हजुरप्रति पितालाई जस्तो व्यवहार गर्छन् र हजुरले पनि उनीहरूप्रति पुत्रभावले व्यवहार गर्नु उचित हुन्छ।।७८।।

●

# चतुर्थोऽध्यायः

विदुर उवाच

**अत्रैवोदाहरन्तीममितिहासं पुरातनम्।**
**आत्रेयस्य च संवादं साध्यानां चेति नः श्रुतम्।।१।।**

विदुरले भने– यो विषयमा दत्तात्रेय र साध्य देवताहरूबीचको संवादरूप प्राचीन इतिहासको उदाहरण दिइन्छ जुन मैले पनि सुनेको हुँ।।१।।

**चरन्तं हंसरूपेण महर्षिं संशितव्रतम्।**
**साध्या देवा महाप्राज्ञं पर्यपृच्छन्त वै पुरा।।२।।**

प्राचीन कालको कुरा हो। उत्तम व्रत गर्ने महाबुद्धिमान् महर्षि दत्तात्रेय हंस (परंहस) रूपमा घुमिरहेका थिए। त्यो समयमा साध्य देवताहरूले उनलाई सोधे।।२।।

साध्या ऊचुः

**साध्या देवा वयमेते महर्षे**
**दृष्ट्वा भवन्तं न शक्नुमोऽनुमातुम्।**
**श्रुतेन धीरो बुद्धिमांस्त्वं मतो नः**
**काव्यां वाचं वक्तुमर्हस्युदाराम्।।३।।**

साध्यले भने– महर्षे! हामी सबै साध्य देवता हौँ। हजुरलाई देखेर हामी हजुरका विषयमा कुनै अनुमान लगाउन सक्दैनौँ। हामीले

हजुर शास्त्रज्ञ, धीर, बुद्धिमान् हुनुहुन्छ भन्ने ठानेका छौं। अतः हामीलाई विद्वत्तापूर्ण उदार वाणी सुनाउने कृपा गर्नुहोस्।।३।।

हंस उवाच

**एतत् कार्यमपराः संश्रुतं मे**
**धृतिः शमः सत्यधर्मानुवृत्तिः।**
**ग्रन्थिं विनीय हृदयस्य सर्वं**
**प्रियाप्रिये चात्मसमं नयीत।।४।।**

हंसले भने– देवताहरूहो! सुन। धैर्यधारण, मनोनिग्रह र सत्यधर्मको पालन नै कर्तव्य हो भन्ने मैले सुनको छु। यसको माध्यमद्वारा पुरुषले हृदयका सम्पूर्ण गाँठाहरू खोलेर प्रिय एवम् अप्रियलाई आफ्नो आत्मासमान सम्झिनुपर्छ।।४।।

**आक्रुश्यमानो नाक्रोशेन्मन्युरेव तितिक्षतः।**
**आक्रोष्टारं निर्दहति सुकृतं चास्य विन्दति।।५।।**

अर्कालें गाली गर्‍यो भन्दैमा गाली पनि नगरोस्। क्षमा गर्नेवालाले रोकेको क्रोधले नै गाली गर्नेवालालाई जलाउँछ र उसको पुण्य पनि लैजान्छ।।५।।

**नाक्रोशी स्यान्नावमानी परस्य**
**मित्रद्रोही नोत नीचोपसेवी।**
**न चाभिमानी न च हीनवृत्तो**
**रूक्षां वाचं रुषतीं वर्जयीत।।६।।**

कसैलाई गाली नगरोस्, कसैको अपमान पनि नगरोस्, मित्रद्रोह तथा नीच पुरुषको सेवा पनि नगरोस्, सदाचारहीन र अभिमानी न बनोस् तथा रूखो र कठोर वचन पनि नबोलोस्।।६।।

**मर्माण्यस्थीनि हृदयं तथासून्**
**रुक्षा वाचो निर्दहन्तीह पुंसाम्।**
**तस्माद् वाचमुषतीमुग्ररूपां**
**धर्मारामो नित्यशो वर्जयीत।।७।।**

यो जगत्मा रूखो वाणीले मनुष्यको मर्मस्थान, हाड, हृदय र प्राणलाई जलाउँछ। यसर्थ धर्मानुरागी पुरुष जलाउने रूखो वाणीलाई सदाका लागि परित्याग गरिदिनुपर्छ।।७।।

**अरुन्तुदं परुषं रुक्षवाचं**
**वाक्कण्टकैर्वितुदन्तं मनुष्यान्।**
**विद्यादलक्ष्मीकतमं जनानां**
**मुखे निबद्धां निर्ऋतिं वै वहन्तम्।।८।।**

जसको वचन रूखो र स्वभाव कठोर छ, जसले मर्ममा आघात पुऱ्याउँछ, जसको वाग्बाणले मनुष्यलाई पीडा पुऱ्याउँछ त्यस्तालाई यो सम्झनुपर्छ कि त्यो मनुष्य महादरिद्र हो र उसले मुखमा दरिद्रता र तथा मृत्युलाई बाँधेर बोकिरहेको छ।।८।।

**परश्चेदेनमभिविध्येत बाणै-**
**र्भृशं सुतीक्ष्णैरनलार्कदीप्तैः।**
**स विध्यमानोऽप्यतिदह्यमानो**
**विद्यात् कविः सुकृतं मे दधाति।।९।।**

अर्को कुनै मनुष्यलाई अग्नि र सूर्यसमान जलाउने तीखा वाग्बाणले धेरै चोट पुऱ्याएको छ भने त्यो विद्वान् पुरुषले चोट खाएर वेदना सहँदासहँदै यस्तो सम्झनुपर्छ कि त्यसले उसको पुण्यलाई पुष्ट गरिरहेको छ।।९।।

**यदि सन्तं सेवति यद्यसन्तं**
**तपस्विनं यदि वा स्तेनमेव।**
**वासो यथा रङ्गवशं प्रयाति**
**तथा स तेषां वशमभ्युपैति।।१०।।**

जस्तो वस्त्र जुन रङमा रङाइयो त्यस्तै बन्छ त्यस्तै कोही सज्जन, असज्जन, तपस्वी र चोरको सेवा गर्छ भने उनीहरूकै वशमा पर्छ र उनीहरूकै रङमा रङिन्छ।।१०।।

**अतिवादं न प्रवदेन्न वादयेद्**
**यो नाहतः प्रतिहन्यान्न घातयेत्।**
**हन्तुं च यो नेच्छति पातकं वै**
**तस्मै देवाः स्पृहयन्त्यागताय।।११।।**

जो स्वयं कसैप्रति नराम्रो बोल्दैन र अरूलाई पनि बोल्न लगाउँदैन, कसैले नपिटी न कसैलाई पिट्छ न त पिट्न लगाउँछ, कसैले पिटेमा पनि अपराधीलाई पिट्न चाहँदैन त्यस्तो व्यक्तिलाई देवताले पनि स्वागत गर्छन्।।११।।

**अव्याहृतं व्याहृताच्छ्रेय आहुः**
**सत्यं वदेद् व्याहृतं यद् द्वितीयम्।**
**प्रियं वदेद् व्याहृतं तत् तृतीयं**
**धर्मं वदेद् व्याहृतं तच्चतुर्थम्।।१२।।**

बोल्नुभन्दा नबोल्नु राम्रो मानिएको छ, तर सत्य बोल्नु वाणीको विशेषता हो अर्थात् मौन रहनुभन्दा उपयुक्त हो। सत्य पनि यदि प्रिय बोलियो भने त्यो अर्को विशेषतायुक्त हुन्छ र त्यो पनि धर्मयुक्त र धर्मसम्मत रह्यो भने वचनको चौथो विशेषता हुन जान्छ।।१२।।

**यादृशैः सन्निविशते यादृशांश्चोपसेवते।**
**यादृगिच्छेच्च भवितुं तादृग् भवति पूरुषः।।१३।।**

मनुष्यले जस्ताको सङ्गत गर्छ, जस्तो पुरुषको सेवा गर्छ र जस्तो हुन चाहन्छ त्यस्तो बन्न सक्छ।।१३।।

**यतो यतो निवर्तते ततस्ततो विमुच्यते।**
**निवर्तनाद्धि सर्वतो न वेत्ति दुःखमण्वपि।।१४।।**

मनुष्यले जुनजुन विषयबाट मनलाई हटाउँछ तीती विषयबाट उसले मुक्ति प्राप्त गर्छ। यसरी सबै क्षेत्रबाट निवृत्त भयो भने उसलाई थोरै पनि दुःखानुभूति हुँदैन।।१४।।

**न जीयते चानुजिगीषतेऽन्यान्**
**न वैरकृच्चाप्रतिघातकश्च।**
**निन्दाप्रशंसासु समस्वभावो**
**न शोचते हृष्यति नैव चायम्।।१५।।**

जो न कसैबाट जितिन्छ, न अर्कालाई जित्ने इच्छा गर्छ, न कसैको विरोध गर्छ, न कसैलाई चोट पुऱ्याउन चाहन्छ; जसले निन्दा एवम् प्रशंसामा समान भाव राख्छ त्यो हर्ष र शोकबाट टाढा हुन्छ।।१५।।

**भावमिच्छति सर्वस्य नाभावे कुरुते मनः।**
**सत्यवादी मृदुर्दान्तो यः स उत्तमपूरुषः।।१६।।**

जसले सबैको कल्याण चाहन्छ र कसैको अकल्याणको कुरा मनमा पनि ल्याउँदैन; जो सत्यवादी, जितेन्द्रिय र कोमल हृदययुक्त छ त्यो पुरुष उत्तम मानिन्छ।।१६।।

**नानर्थकं सान्त्वयति प्रतिज्ञाय ददाति च।**
**रन्ध्रं परस्य जानाति यः सः मध्यमपूरुषः।।१७।।**

जसले झूटो सान्त्वना दिँदैन, कुनै कुरा दिने प्रतिज्ञा गर्छ भने दिएरै छाड्छ र अर्काको दोष जान्दछ त्यो मध्यम श्रेणीको पुरुष हो।।१७।।

**दुःशासनस्तूपहतोऽभिशस्तो**
**नावर्तते मन्युवशात् कृतघ्नः।**
**न कस्यचिन्मित्रमथो दुरात्मा**
**कलाश्चैता अधमस्येह पुंसः।।१८।।**

जसको शासन अत्यन्त कठोर छ, जो अनेक दोषले दूषित छ, जो कलङ्कित छ, जो क्रोधका कारण कसैको नराम्रो गर्ने कार्यबाट पछि हट्दैन, अर्काले गरेको उपकारलाई मान्दैन, जसको कसैका साथ मित्रता छैन र जो दुरात्मा छ यस्तो पुरुषलाई अधम पुरुषको कोटिमा राखिन्छ।।१८।।

**न श्रद्दधाति कल्याणं परेभ्योऽप्यात्मशङ्कितः।**
**निराकरोति मित्राणि यो वै सोऽधमपूरुषः।।१९।।**

जसले आफूमाथि नै सन्देह भएका कारण अरूबाट पनि कल्याण हुने कुरामा विश्वास गर्दैन, मित्रहरूलाई पनि टाढा राख्छ त्यो अवश्य पनि अधम व्यक्ति हो।।१९।।

**उत्तमानेव सेवेत प्राप्तकाले तु मध्यमान्।**
**अधमांस्तु न सेवेत य इच्छेद् भूतिमात्मनः।।२०।।**

जसले आफ्नो उन्नति चाहन्छ त्यस्तो व्यक्तिले उत्तम पुरुषकै सेवा गर्नुपर्छ। समय आउँदा मध्यम पुरुषको पनि सेवा गरोस्, तर अधम पुरुषको कहिल्यै सेवा नगरोस्।।२०।।

**प्राप्नोति वै वित्तमसद्बलेन**
**नित्योत्त्थानात् प्रज्ञया पौरुषेण।**
**न त्वेन सम्यग् लभते प्रशंसां**
**न वृत्तमाप्नोति महाकुलानाम्।।२१।।**

मनुष्यले बलपूर्वक निरन्तर उद्योग गरेर बुद्धिपूर्वक तथा पुरुषार्थबाट धन आर्जन गर्न सक्ला, तर यसबाट उत्तम कुलीन पुरुषले प्राप्त गर्ने सम्मान र सदाचार उसले पूर्ण रूपले कहिल्यै प्राप्त गर्न सक्दैन।।२१।।

धृतराष्ट्र उवाच

**महाकुलेभ्यः स्पृहयन्ति देवा**
**धर्मार्थनित्याश्च बहुश्रुताश्च।**
**पृच्छामि त्वां विदुर प्रश्नमेतं**
**भवन्ति वै कानि महाकुलानि।।२२।।**

धृतराष्ट्रले भने– विदुर! धर्म र अर्थको नित्य ज्ञाता एवम् बहुश्रुत देवताले पनि उत्तम कुलमा उत्पन्न पुरुषको इच्छा गर्छन्। यसर्थ म तिमीबाट उत्तम कुल कुन हुन् भन्ने सुन्न चाहन्छु।।२२।।

विदुर उवाच

**तपो दमो ब्रह्मवित्तं वितानाः**
**पुण्या विवाहाः सततान्नदानम्।**
**येष्वेवैते सप्त गुणा वसन्ति**
**सम्यग्वृत्तास्तानि महाकुलानि।।२३।।**

विदुरले भने– जसमा तप, इन्द्रियसंयम, वेदको स्वाध्याय, यज्ञ, पवित्र विवाह, सदा अन्नदान र सदाचार यी सात गुण रहेका छन् त्यसलाई महान् र उत्तम कुल भनिन्छ।।२३।।

**येषां हि वृत्तं व्यथते न योनि-**
**श्चित्तप्रसादेन चरन्ति धर्मम्।**
**ये कीर्तिमिच्छन्ति कुले विशिष्टां**
**त्यक्तानृतास्तानि महाकुलानि।।२४।।**

जसको सदाचार शिथिल हुँदैन, जसले आफ्नो दोषका कारण मातापितालाई कष्ट पुऱ्याउँदैन, प्रसन्न चित्तयुक्त भएर धर्माचरण गर्छ र असत्यको परित्याग गरेर आफ्नो कुलको विशेष कीर्ति चाहन्छ त्यो नै महान् कुलीन हो।।२४।।

**अनिज्यया कुविवाहैर्वेदस्योत्सादनेन च।**
**कुलान्यकुलतां यान्ति धर्मस्यातिक्रमेण च।।२५।।**

यज्ञ नहुनाले, निन्दित कुलमा विवाह गर्नाले, वेदको त्याग र धर्मको उल्लङ्घन गर्नाले उत्तम कुल पनि अधम बन्छ।।२५।।

**देवद्रव्यविनाशेन ब्रह्मस्वहरणेन च।**
**कुलान्यकुलतां यान्ति ब्राह्मणातिक्रमेण च।।२६।।**

देवद्रव्यहरण, ब्राह्मणस्वहरण र ब्राह्मणमर्यादाको उल्लङ्घन गर्नाले उत्तम कुल पनि अधम बन्न जान्छ।।२६।।

**ब्राह्मणानां परिभवात् परिवादाच्च भारत।**
**कुलान्यकुलतां यान्ति न्यासापहरणेन च।।२७।।**

हे भारत! ब्राह्मणहरूको अनादर र निन्दा गर्नाले एवम् नासो राखेको वस्तु नदिनाले राम्रो कुल पनि निन्दनीय बन्छ।।२७।।

**कुलानि समुपेतानि गोभिः पुरुषतोऽर्थतः।**
**कुलसङ्ख्यां न गच्छन्ति यानि हीनानि वृत्ततः।।२८।।**

गाई, मनुष्य, धन आदिले सम्पन्न हुँदाहुँदै पनि जुन कुल सदाचारहीन छ त्यो राम्रो कुलको गणनामा आउन सक्दैन।।२८।।

**वृत्ततस्त्वविहीनानि कुलान्यल्पधनान्यपि।**
**कुलसङ्ख्यां च गच्छन्ति कर्षन्ति च महद् यशः।।२९।।**

धनहीन कुल पनि यदि सदाचारयुक्त छ भने राम्रो कुलको गणनामा आउँछ र महान् यश प्राप्त गर्छ।।२९।।

**वृत्तं यत्नेन संरक्षेद् वित्तमेति च याति च।**
**अक्षीणो वित्ततः क्षीणो वृत्ततस्तु हतो हतः।।३०।।**

सदाचारको रक्षा यत्नपूर्वक गर्नुपर्छ। धन त आउँछ र जान्छ। धन क्षीण हुँदा पनि सदाचारी मनुष्य क्षीण मानिँदैन, तर सदाचारबाट भ्रष्ट भयो भने त्यसलाई नष्ट नै सम्झनुपर्छ।।३०।।

**गोभिः पशुभिरश्वैश्च कृष्या च सुसमृद्धया।**
**कुलानि न प्ररोहन्ति यानि हीनानि वृत्ततः।।३१।।**

जुन कुल सदाचाररहित छ त्यो कुलले गाई, पशु, घोडा र हराभरा खेतीयुक्त हुँदाहुँदै पनि उन्नति गर्न सक्दैन।।३१।।

**मा नः कुले वैरकृत् कश्चिदस्तु**
**राजाऽमात्यो मा परस्वापहारी।**
**मित्रद्रोही नैकृतिकोऽनृती वा**
**पूर्वाशी वा पितृदेवातिथिभ्यः।।३२।।**

हाम्रो कुलमा कोही पनि वैर गर्नेवाला नहोस्, अर्काको धन अपहरण गर्ने राजा वा मन्त्री पनि नहोस् र मित्रद्रोही, कपटी एवम् असत्यवादी पनि कोही नहोस्। यही प्रकारले मातापिता, देवता एवम् अतिथिहरूलाई भोजन गराउनुभन्दा पहिले भोजन गर्नेवाला पनि नहोस्।।३२।।

**यश्च नो ब्राह्मणान् हन्याद् यश्च नो ब्राह्मणान् द्विषेत्।**
**न नः स समितिं गच्छेद् यश्च नो निर्वपेत् पितृन्।।३३।।**

हामीमध्ये जसले ब्रह्महत्या गरेको छ, ब्राह्मणका साथ द्वेष गरेको छ र पितृहरूलाई पिण्डदान एवम् तर्पण गरेको छैन त्यस्तो हाम्रो सभामा नजाओस्।।३३।।

**तृणानि भूमिरुदकं वाक् चतुर्थी च सूनृता।**
**सतामेतानि गेहेषु नोच्छिद्यन्ते कदाचन।।३४।।**

तृणासन, पृथिवी, जल र चौथो मीठो वाणी गरी यी चार चिजको कमी सज्जनको घरमा कहिल्यै हुँदैन।।३४।।

**श्रद्धया परया राजन्नुपनीतानि सत्कृतिम्।**
**प्रवृत्तानि महाप्राज्ञ धर्मिणां पुण्यकर्मिणाम्।।३५।।**

हे महाप्राज्ञ राजन्! पुण्यकर्मयुक्त धर्मात्मा पुरुषकहाँ यी तृण आदि वस्तुहरू बडो श्रद्धाका साथ सत्कारका लागि उपस्थित गरिन्छन्।।३५।।

**सूक्ष्मोऽपि भारं नृपते स्यन्दनो वै**
**शक्तो वोढुं न तथान्ये महीजाः।**
**एवं युक्ता भारसहा भवन्ति**
**महाकुलीना न तथान्ये मनुष्याः।।३६।।**

हे नृपवर! सानो रथले पनि भार वहन गर्न सक्छ, तर अरू काठ ठूलठूला भएको अवस्थामा सक्दैन। यसै गरी उत्तम कुलमा उत्पन्न उत्साही पुरुषले भार सहन सक्छ, अन्य मनुष्यले सक्दैनन्।।३६।।

**न तन्मित्रं यस्य कोपाद् बिभेति**
**यद्वा मित्रं शङ्कितेनोपचर्यम्।**
**यस्मिन् मित्रे पितरीवाश्वसीत**
**तद् वै मित्रं सङ्गतानीतराणि।।३७।।**

जसको क्रोधले गर्दा भयभीत हुनुपरोस् र शङ्कित भएर जसको सेवा गर्नुपरोस् त्यो मित्र होइन। मित्र त्यही हो जसलाई पितालाई जस्तै विश्वास गर्न सकियोस्, अन्य त सँगी मात्र हुन्।।३७।।

**यः कश्चिदप्यसम्बद्धो मित्रभावेन वर्तते।**
**स एव बन्धुस्तन्मित्रं सा गतिस्तत् परायणम्।।३८।।**

पहिलेदेखि कुनै सम्बन्ध नहुँदा पनि जसले मित्रताको व्यवहार गर्छ त्यही बन्धु, त्यही मित्र, त्यही सहारा र त्यही आश्रय हो।।३८।।

**चलचित्तस्य वै पुंसो वृद्धाननुपसेवतः।**
**पारिप्लवमतेर्नित्यमध्रुवो मित्रसङ्ग्रहः।।३९।।**

जसको चित्त चञ्चल छ, जसले वृद्धहरूको सेवा गर्दैन त्यो अनिश्चितमति पुरुषका लागि मित्रहरूको सङ्ग्रह स्थायी हुँदैन।।३९।।

**चलचित्तमनात्मानमिन्द्रियाणां वशानुगम्।**
**अर्थाः समभिवर्तन्ते हंसाः शुष्कं सरो यथा।।४०।।**

जसरी हाँसहरू सुकेको तलाउको आसपास नै घुमिरहन्छन्, भित्र पस्न चाहँदैनन् त्यसै गरी चित्त चञ्चल, अज्ञानी एवम् इन्द्रियहरूको गुलामलाई पनि अर्थप्राप्ति हुँदैन।।४०।।

**अकस्मादेव कुप्यन्ति प्रसीदन्त्यनिमित्ततः।**
**शीलमेतदसाधूनामभ्रं पारिप्लवं यथा।।४१।।**

दुष्ट पुरुषको स्वभाव मेघसमान चञ्चल हुन्छ, ऊ अकारण क्रोध गर्छ र अकारण प्रसन्न पनि हुन्छ।।४१।।

**सत्कृताश्च कृतार्थाश्च मित्राणां न भवन्ति ये।**
**तान् मृतानपि क्रव्यादाः कृतघ्नान्नोपभुञ्जते।।४२।।**

जो मित्रबाट सत्कार पाएर र उनीहरूको सहायताबाट कृतकार्य हुँदा पनि उनीहरूका हुँदैनन् यस्ता कृतघ्नहरूलाई मांसभोजी जन्तुले पनि खाँदैनन्।।४२।।

**अर्चयेदेव मित्राणि सति वाऽसति वा धने।**
**नानर्थयन् प्रजानाति मित्राणां सारफल्गुताम्।।४३।।**

धन होस् या नहोस्, मित्रहरूको सत्कार गर्नुपर्छ। मित्रले केही नमाग्दा पनि उनीहरूसँग सार-असारको परीक्षा पनि नगरोस्।।४३।।

**सन्तापात् भ्रश्यते रूपं सन्तापाद् भ्रश्यते बलम्।**
**सन्तापाद् भ्रश्यते ज्ञानं सन्तापाद् व्याधिमृच्छति।।४४।।**

सन्तापबाट रूप नष्ट हुन्छ, सन्तापबाट बल नष्ट हुन्छ, सन्तापबाट ज्ञान नष्ट हुन्छ र सन्तापबाटै मनुष्य रोगी हुन्छ।।४४।।

**अनवाप्यं च शोकेन शरीरं चोपतप्यते।**
**अमित्राश्च प्रहृष्यन्ति मा स्म शोके मनः कृथाः।।४५।।**

शोक गरेर अभीष्ट वस्तु प्राप्त हुँदैन, शोकबाट त केवल शरीर नष्ट हुन्छ र शत्रु प्रसन्न हुन्छन्। यसर्थ शोक कहिल्यै गर्नु हुँदैन।।४५।।

**पुनर्नरो म्रियते जायते च**
**पुनर्नरो हीयते वर्धते च।**
**पुनर्नरो याचति याच्यते च**
**पुनर्नरः शोचति शोच्यते च।।४६।।**

मनुष्य पटकपटक जन्मन्छ र मर्छ, क्षीण हुन्छ र बढ्छ पनि, अरूबाट याचना गरिन्छ र गर्छ पनि र उसले अरूका लागि शोक गर्छ र अरूले उसका लागि पनि शोक गर्छन्।।४६।।

**सुखं च दुःखं च भवाभवौ च**
**लाभालाभौ मरणं जीवितं च।**
**पर्यायशः सर्वमेते स्पृशन्ति**
**तस्माद् धीरो न हृष्येन्न शोचेत्।।४७।।**

सुख-दुःख, हुनु-नहुनु, लाभ-हानि, जीवन-मरण यी पटकपटक सबैलाई प्राप्त हुन्छन्। तथर्स धीर पुरुषले यिनीहरूका लागि हर्ष र शोक गर्नु हुँदैन।।४७।।

**चलानि हीनानि षडिन्द्रियाणि**
**तेषां यद् यद् वर्धते यत्र यत्र।**
**ततस्ततः स्रवते बुद्धिरस्य**
**छिद्रोदकुम्भादिव नित्यमम्भः।।४८।।**

मनसहित यी छ इन्द्रिय अत्यन्त चञ्चल छन्। यीमध्ये जुनजुन इन्द्रिय जुनजुन विषयतर्फ बढ्छन् त्यहाँत्यहाँ बुद्धि त्यसरी नै क्षीण हुन्छ जसरी फुटेको घैँटाबाट पानी चुहिन्छ।।४८।।

धृतराष्ट्र उवाच

**तनुरुद्धः शिखी राजा मिथ्योपचरितो मया।**
**मन्दानां मम पुत्राणां युद्धेनान्तं करिष्यति।।४९।।**

धृतराष्ट्रले भने– काठमा छिपेर रहेको आगोसमान सूक्ष्म धर्ममा बाँधिएका राजा युधिष्ठिरका साथ मैले मिथ्या व्यवहार गरेको छु। अतः उनले युद्ध गरेर मेरा मूर्ख पुत्रहरूको नाश गर्ने छन्।।४९।।

**नित्योद्विग्नमिदं सर्वं नित्योद्विग्नमिदं मनः।**
**यत् तत् पदमनुद्विग्नं तन्मे वद महामते।।५०।।**

हे महामते! यो सबै सदा भयले उद्विग्न छ, मेरो मन पनि भयले उद्विग्न छ। यसर्थ उद्वेगशून्य शान्त पद कसरी प्राप्त हुन्छ? मलाई बताऊ।।५०।।

विदुर उवाच

**नान्यत्र विद्यातपसोर्नान्यत्रेन्द्रियविग्रहात्।**
**नान्यत्र लोभसन्त्यागाच्छान्तिं पश्यामि तेऽनघ।।५१।।**

विदुरले भने– हे पापशून्य नरेश! विद्या, तप, इन्द्रियनिग्रह र लोभत्यागभन्दा अन्य कुनै शान्तिको उपाय हजुरका लागि देखिँदैन।।५१।।

**बुद्ध्या भयं प्रणुदति तपसा विन्दते महत्।**
**गुरुशुश्रूषया ज्ञानं शान्तिं योगेन विन्दति।।५२।।**

बुद्धिको माध्यमबाट आफूमा रहेको डर हटाउन सकिन्छ, तपस्याबाट महान् पद प्राप्त गर्न सकिन्छ। यस्तै गुरुशुश्रूषाबाट ज्ञान र योगको माध्यमबाट शान्ति प्राप्त हुन्छ।।५२।।

**अनाश्रिता दानपुण्यं वेदपुण्यमनाश्रिताः।**
**रागद्वेषविनिर्मुक्ता विचरन्तीह मोक्षिणः।।५३।।**

मोक्षको इच्छा राख्ने व्यक्तिले दानबाट प्राप्त हुने पुण्यको आश्रय लिँदैन, वेदको पुण्यको आश्रय पनि लिँदैन। त्यस्तो व्यक्तिले त निष्काम भावले रागद्वेषरहित भएर यस लोकमा विचरण गर्छ।।५३।।

**स्वधीतस्य सुयुद्धस्य सुकृतस्य च कर्मणः।**
**तपसश्च सुतप्तस्य तस्यान्ते सुखमेधते।।५४।।**

सम्यक् अध्ययन, न्यायोचित युद्ध, पुण्यकर्म र राम्रोसँग गरिएको तपस्याले अन्त्यमा सुख वृद्धि हुन्छ।।४५।।

**स्वास्तीर्णानि शयनानि प्रपन्ना**
**न वै भिन्ना जातु निद्रां लभन्ते।**
**न स्त्रीषु राजन् रतिमाप्नुवन्ति**
**न मागधैः स्तूयमाना न सूतैः।।५५।।**

हे राजन्! आपसमा फुट राख्ने व्यक्तिले राम्रो बिछ्यौनायुक्त पलङ प्राप्त गर्दा पनि राम्रो निद्रा प्राप्त गर्न सक्दैन, नारीका साथ रहँदा पनि रतिसुख प्राप्त गर्न सक्दैन र स्तुतिकर्ताहरूले गरेको स्तुति सुन्दा पनि उसलाई प्रसन्नता प्राप्त हुँदैन।।५५।।

**न वै भिन्ना जातु चरन्ति धर्मं**
**न वै सुखं प्राप्नुवन्तीह भिन्नाः।**
**न वै सुखं भिन्ना गौरवं प्राप्नुवन्ति**
**न वै भिन्ना प्रशमं रोचयन्ति।।५६।।**

जसले परस्पर भेदभाव राख्छन् उनीहरूले कहिल्यै धर्माचरण गर्दैनन् र सुख पनि प्राप्त गर्दैनन्। उनीहरूलाई गौरव पनि प्राप्त हुँदैन र शान्ति पनि कहिल्यै रुचिकर लाग्दैन।।५६।।

**न वै तेषां स्वदते पथ्यमुक्तं**
**योगक्षेमं कल्पते नैव तेषाम्।**
**भिन्नानां वै मनुजेन्द्रपरायणं**
**न विद्यते किञ्चिदन्यत् विनाशात्।।५७।।**

कहीँ गए पनि उनीहरूलाई राम्रो कुरा मन पर्दैन, उनीहरूलाई योगक्षेमको सिद्धि पनि प्राप्त हुन सक्दैन। हे राजन्! भेदभावले पुरुषलाई विनाशभन्दा अरू केही प्राप्त हुँदैन।।५७।।

**सम्पन्नं गोषु सम्भाव्यं सम्भाव्यं ब्राह्मणे तपः।**
**सम्भाव्यं चापलं स्त्रीषु सम्भाव्यं ज्ञातितो भयम्।।५८।।**

गाईमा दूध, ब्राह्मणमा तपस्या र युवती नारीमा चञ्चलता हुनु धेरै सम्भव भएजस्तै आफ्नो जातिका बन्धुहरूबाट भय पनि सम्भव नै छ।।५८।।

**तन्तवो प्यायिता नित्यं तनवो बहुलाः समाः।**
**बहून् बहुत्वादायासान् सहन्तीत्युपमा सताम्।।५९।।**

नित्य सिँचेर बढाएका पातला लहराहरूले धेरै भएका कारण धेरै वर्षसम्म पनि नाना प्रकारको हावाहुरी सहन सक्छन्। त्यस्तै सत्पुरुषका विषयमा पनि सम्झनुपर्छ (दुर्बल भए पनि सामुहिक शक्तिका कारण बलवान् बन्छन्)।।५९।।

**धूमायन्ते व्यपेतानि ज्वलन्ति सहितानि च।**
**धृतराष्ट्रोल्मुकानीव ज्ञातयो भरतर्षभ।।६०।।**

हे भरतश्रेष्ठ धृतराष्ट्र! बोलिरहेका दाउराले अलग–अलग भएको अवस्थामा धूवाँ निकाल्छन्, तर एकसाथ भएको अवस्थामा राम्रोसँग बल्छन्। यसै गरी भाइबन्धुहरूबीच पनि फुट भएको अवस्थामा दुःख झेल्छन् भने एकता भएको अवस्थामा सुखी हुन्छन्।।६०।।

**ब्राह्मणेषु च ये शूराः स्त्रीषु ज्ञातिषु गोषु च।**
**वृन्तादिव फलं पक्वं धृतराष्ट्र! पतन्ति ते।।६१।।**

हे धृतराष्ट्र! जसले ब्राह्मण, नारी, आफ्नो जातिका व्यक्तिसँग र गाईमाथि आफ्नो शूरता देखाउँछन् ती व्यक्तिहरू पाकेको फलजस्तै तल झर्छन्।।६१।।

**महानप्येकजो वृक्षो बलवान् सुप्रतिष्ठितः।**
**प्रसह्य एव वातेन सस्कन्धो मर्दितु क्षणात्।।६२।।**

वृक्ष ठूलो, बलवान् र दृढमूल नै किन नहोस्; त्यो एक्लै छ भने केही क्षणमै आँधीद्वारा बलपूर्वक शाखाहरूसहित धराशायी बन्न सक्छ।।६२।।

**अथ ये सहिता वृक्षाः सङ्घशः सुप्रतिष्ठिताः।**
**ते हि शीघ्रतमान् वातान् सहन्तेऽन्योन्यसंश्रयात्।।६३।।**

तर धेरै वृक्ष सँगै छन् भने एकअर्काको सहाराका कारण ठूलोभन्दा ठूलो आँधीलाई पनि सहन सक्छन्।।६३।।

**एवं मनुष्यमप्येकं गुणैरपि समन्वितम्।**
**शक्यं द्विषन्तो मन्यन्ते वायुर्द्रुममिवैकजम्।।६४।।**

यस्तै एउटा मात्र मनुष्य अनेक गुणयुक्त छ भने पनि शत्रुहरूले उसलाई आफ्नो शक्तिभित्रको ठान्छन् जसरी एक्लो वृक्षलाई वायुले सम्झिन्छ।।६४।।

**अन्योऽन्यसमुपष्टम्भादन्योऽन्यापाश्रयेण च।**
**ज्ञातयः सम्प्रवर्धन्ते सरसीवोत्पलान्युत।।६५।।**

परस्पर मेल भएको अवस्थामा एकअर्कालाई सहारा मिलेका कारण जाति र समूहबीच यसरी वृद्धि हुन्छ जसरी तलाउमा कमल।।६५।।

**अवध्या ब्राह्मणा गावो ज्ञातयः शिशवः स्त्रियः।**
**येषां चान्नानि भुञ्जीत ये च स्युः शरणागताः।।६६।।**

ब्राह्मण, गाई, बन्धु, बालक, नारी, अन्नदाता र शरणागतलाई अवध्य मानिएको छ।।६६।।

**न मनुष्ये गुणः कश्चिद् राजन् सधनतामृते।**
**अनातुरत्वाद् भद्रं ते मृतकल्पा हि रोगिणः।।६७।।**

राजन्! हजुरको कल्याण होस्। मनुष्यमा धन र आरोग्यलाई छाडेर अन्य कुनै गुण छैनन्, किनभने रोगी त मुर्दासमान नै हो।।६७।।

**अव्याधिजं कटुकं शीर्षरोगि**
**पापानुबन्धं परुषं तीक्ष्णमुष्णम्।**
**सतां पेयं यन्न पिबन्त्यसन्तो**
**मन्युं महाराज पिब प्रशाम्य॥६८॥**

महाराज! जुन बिना रोग उत्पन्न, तीतो, टाउको दुखाउने, पापयुक्त, कठोर, तीखो एवम् गरम छ; जुन सज्जनद्वारा पिउन योग्य छ र जसलाई दुर्जनले पिउन सक्दैनन् त्यो क्रोध हजुर पिउनुहोस् र शान्त बन्नुहोस्॥६८॥

**रोगार्दिता न फलान्याद्रियन्ते**
**न वै लभन्ते विषयेषु तत्त्वम्।**
**दुःखोपेता रोगिणो नित्यमेव**
**न बुध्यन्ते धनभोगान्न सौख्यम्॥६९॥**

रोगले पीडित व्यक्तिले मधुर फलको कुनै आदर गर्दैन, विषयसुख या विषयको सार पनि उसलाई मिल्दैन। रोगी सधैँ दुःखी रहन्छ। त्यसले न धनको उपभोग गर्न सक्छ न त सुखको अनुभव नै गर्न सक्छ॥६९॥

**पुरा ह्युक्तं नाकरोस्त्वं वचो मे**
**द्यूते जितां द्रौपदीं प्रेक्ष्य राजन्।**
**दुर्योधनं वारयेत्यक्षवत्यां**
**कितवत्वं पण्डिताः वर्जयन्ति॥७०॥**

राजन्! पहिले जुवामा द्रौपदीलाई जितेको देखेर मैले हजुरलाई द्यूत क्रीडामा आसक्त दुर्योधनलाई रोक्नुहोस्, विद्वान्हरूले यस्तो प्रवञ्चनालाई निषेध गर्छन् भनेको थिएँ; तर हजुरले मैले भनेको मान्नुभएन।।७०।।

**न तद् बलं यन्मृदुना विरुध्यते**
**सूक्ष्मो धर्मस्तरसा सेवितव्यः।**
**प्रध्वंसिनी क्रूरसमाहिता श्री-**
**र्मृदुप्रौढा गच्छति पुत्रपौत्रान्।।७१।।**

त्यो बल होइन जसको मृदुल स्वभावका साथ विरोध होस्, सूक्ष्म धर्म सबैको सेवनीय हुन्छ, क्रूरतापूर्वक उपार्जन गरिएकी लक्ष्मी नश्वर हुन्छिन्, यदि लक्ष्मी मृदुलतापूर्वक बढाइएकी हुन् भने पुत्रपौत्र आदिसम्म स्थिर रहन्छिन्।।७१।।

**धार्तराष्ट्राः पाण्डवान् पालयन्तु**
**पाण्डोः सुतास्तव पुत्रांश्च पान्तु।**
**एकारिमित्राः कुरवो ह्येककार्या**
**जीवन्तु राजन् सुखिनः समृद्धाः।।७२।।**

राजन्! हजुरका पुत्रहरूले पाण्डवहरूको रक्षा गरून् र पाण्डुका पुत्रले हजुरका पुत्रहरूको रक्षा गरून्। सबै कौरवले एकअर्काका शत्रुलाई शत्रु सम्झिऊन् र मित्रलाई मित्र सम्झिऊन्। सबैको एउटै कर्तव्य हो। सबै सुखी एवम् समृद्धिशाली भएर जीवन व्यतीत गरून्।।७२।।

**मेढीभूतः कौरवाणां त्वमद्य**
**त्वय्याधीनं कुरुकुलमाजमीढ।**
**पार्थान् बालान् वनवासप्रतप्तान्**
**गोपायस्व स्वं यशस्तात रक्षन्।।७३।।**

हे अजमीढ कुलनन्दन! यो समय हजुर कौरवको आधारस्तम्भ हुनुहुन्छ, कुरुवंश हजुरको अधीनमा छ। तात! कुन्तीपुत्र अहिलेसम्म बालकै छन् र वनवासबाट अनेक कष्ट पाएइसकेका छन्। यो समयमा हजुर आफ्नो यशको रक्षा गर्दै पाण्डवहरूको पालन गर्नुहोस्।।७३।।

**सन्धत्स्व त्वं कौरव पाण्डुपुत्रै-**
**र्मा तेऽन्तरं रिपवः पार्थयन्तु।**
**सत्ये स्थितास्ते नरदेव सर्वे**
**दुर्योधनं स्थापय त्वं नरेन्द्र।।७४।।**

कुरुराज! हजुर पाण्डवहरूसँग सन्धि गर्नुहोस्। जसबाट शत्रुहरूलाई हजुरको कमीकमजोरी देख्ने अवसर नमिलोस्। हे नरदेव! समस्त पाण्डव सत्यमा अडिग छन्, अब हजुर आफ्नो पुत्र दुर्योधनलाई रोक्नुहोस्।।७४।।

●

# पञ्चमोऽध्यायः

विदुर उवाच

सप्तदशेमान् राजेन्द्र मनुः स्वायम्भुवोऽब्रवीत्।
वैचित्रवीर्य पुरुषान् आकाशं मुष्टिभिर्घ्नतः।।१।।
दानवेन्द्रस्य च धनुरनाम्यं नमतोऽब्रवीत्।
अथ मरीचिनः पादान् अग्राह्यान् गृह्णतस्तथा।।२।।
यश्चाशिष्यं शास्ति वै यश्च तुष्येद्
यश्चातिवेलं भजते द्विषन्तम्।
स्त्रियश्च यो रक्षति भद्रमश्नुते
यश्चायाच्यं याच्यते कत्थते च।।३।।
यश्चाभिजातः प्रकरोत्यकार्यं
यश्चाबलो बलिना नित्यवैरी।
अश्रद्दधानाय च यो ब्रवीति
यश्चाकाम्यं कामयते नरेन्द्र।।४।।
वध्वावहासं श्वशुरो मन्यते यो
वध्वाऽवसन्नभयो मानकामः।
परक्षेत्रे निर्वपति यश्च बीजं
स्त्रियं च यः परिवदतेऽतिवेलम्।।५।।

यश्चापि लब्ध्वा न स्मरामीति वादी
दत्त्वा च यः कत्थति याच्यमानः।
यश्चासतः सत्त्वमुपानयीत
एतान् नयन्ति निरयं पाशहस्ताः।।६।।

विदुरले भने– हे राजेन्द्र! विचित्रवीर्यनन्दन! स्वायम्भुव मनुले भनेका छन्, निम्नलिखित १७ प्रकारका पुरुषलाई हातमा पाश लिएका यमराजका दूतले नरकमा लैजान्छन् – जसले आकाशमा मुठीले प्रहार गर्छ, जसले कहिल्यै झुकाउन नसकिने वर्षाकालीन इन्द्रधनुषलाई झुकाउन चाहन्छ, जसले छोप्न नसकिने सूर्यको किरणलाई छोप्ने प्रयास गर्छ, जसले शासनका लागि अयोग्य पुरुषलाई शिष्य बनाउन चाहन्छ, जो मर्यादा उल्लङ्घन गरेर सन्तुष्ट हुन्छ, जसले शत्रुको सेवा गर्छ, जसले रक्षा गर्नका लागि पनि अयोग्य नारीको रक्षा गर्ने प्रयत्न गर्छ र उसद्वारा आफ्नो कल्याणको अनुभव गर्छ, जसले याचना गर्न अयोग्य पुरुषका साथ याचना गर्छ एवम् आत्मप्रशंसा गर्छ, जो राम्रो कुलमा उत्पन्न भएर पनि नीच कर्म गर्छ, दुर्बल भएर पनि बलवान्सँग विरोध गर्छ, जो श्रद्धाहीनलाई उपदेश दिन्छ, नचाहनु योग्य (शास्त्रनिषिद्ध) वस्तु चाहन्छ, ससुरो भएर पनि बुहारीका साथ परिहास गर्नमा आनन्द मान्छ र पुत्रवधूका साथ एकान्तवास गरेर पनि निर्भयताका साथ समाजमा आफ्नो प्रतिष्ठा चाहन्छ, जसले परस्त्रीमा आफ्नो वीर्य आधान गर्छ, जसले आवश्यकताभन्दा बढी नारीको निन्दा गर्छ, जो कुनै वस्तु प्राप्त गरेर पनि 'मलाई थाहा छैन' भनी त्यसलाई दबाउन चाहन्छ, जो माग्नेलाई दान दिएर आफ्नो डिङ हाँक्छ र जो झूटलाई सही बनाउने प्रयास गर्छ।।१–६।।

**यस्मिन् यथा वर्तते यो मनुष्य-**
**स्तस्मिंस्तथा वर्तितव्यं स धर्मः।**
**मायाचारो मायया वर्तितव्यः**
**साध्वाचारः साधुना प्रत्युपेयः।।७।।**

जुन मनुष्यले आफ्ना साथ जस्तो व्यवहार गर्छ उसका साथ पनि त्यस्तै व्यवहार गर्नुपर्छ, यही नीतिधर्म हो। कपटपूर्ण व्यवहार गर्नेका साथ कपटपूर्ण व्यवहार गर्नुपर्छ र राम्रो व्यवहार गर्नेका साथ राम्रो व्यवहार गर्नुपर्छ।।७।।

**जरा रूपं हरति धैर्यमाशा**
**मृत्युः प्राणान् धर्मचर्यामसूया।**
**कामो ह्रियं वृत्तमनार्यसेवा**
**क्रोधः श्रियं सर्वमेवाभिमानः।।८।।**

वृद्धावस्थाबाट रूपको, आशाबाट धैर्यको, मृत्युबाट प्राणको, दोषारोपणबाट धर्माचरणको, कामबाट लज्जाको, नीच पुरुषको सेवाबाट सदाचारको, क्रोधबाट लक्ष्मीको र अभिमानबाट सर्वस्वको नाश गर्छ।।८।।

धृतराष्ट्र उवाच

**शतायुरुक्तः पुरुषः सर्ववेदेषु वै यदा।**
**नाप्नोत्यथ च तत् सर्वमायुः केनेह हेतुना।।९।।**

धृतराष्ट्रले भने– सबै वेदमा मानिसको परमायु सय वर्षको बताइएको छ। कुन कारणले मानिसले पूर्ण आयु प्राप्त गर्न सक्दैन?।।९।।

विदुर उवाच

**अतिमानोऽतिवादश्च तथाऽत्यागो नराधिप।**

**क्रोधश्चात्मविधित्सा च मित्रद्रोहश्च तानि षट्।।१०।।**

**एत एवासयस्तीक्ष्णाः कृन्तन्त्यायूंषि देहिनाम्।**

**एतानि मानवान् घ्नन्ति न मृत्युर्भद्रमस्तु ते।।११।।**

विदुरले भने– राजन्! हजुरको कल्याण होस्। अत्यन्त अभिमान, धेरै बोल्नु, त्यागको अभाव, क्रोध, आफ्नो मात्र पेट पाल्ने चिन्ता र मित्रद्रोह गरी यी छ धारिला तरबारले देहधारीको आयुलाई घटाउँछन्। यिनैबाट नै मनुष्यको वध हुन्छ, मृत्यु होइन।।१०–११।।

**विश्वस्तस्यैति यो दारान् यश्चापि गुरुतल्पगः।**

**वृषलीपतिर्द्विजो यश्च पानपश्चैव भारत।।१२।।**

**आदेशकृद् वृत्तिहन्ता द्विजानां प्रेषकश्च यः।**

**शरणागतहा चैव सर्वे ब्रह्महणः समाः।**

**एतैः समेत्य कर्तव्यं प्रायश्चित्तमिति श्रुतिः।।१३।।**

हे भारत! जसले आफूमाथि विश्वास गर्ने नारीका साथ गमन गर्छ, जो गुरुस्त्रीगामी छ, ब्राह्मण भएर पनि शूद्राका साथ सम्बन्ध राख्छ, मदिरा पिउँछ, आफूभन्दा ठूलामाथि हुकुम चलाउँछ, अर्काको जीविका हरण गर्छ, ब्राह्मणलाई सेवाकार्यका लागि यताउता पठाउँछ र शरणागतको हिंसा गर्छ; यी सबै ब्रह्महत्यासमान मानिन्छन्। यिनका साथ सङ्गत भएमा प्रायश्चित्त गर्नुपर्छ, यो वेदको आज्ञा हो।।१२–१३।।

**गृहीतवाक्यो नयविद् वदान्यः**
**शेषान्नभोक्ता ह्यविहिंसकश्च।**
**नानार्थकत्याकुलितः कृतज्ञः**
**सत्यो मृदुः स्वर्गमुपैति विद्वान्।।१४।।**

ठूलाको आज्ञा मान्ने, नीतिज्ञ, दाता, यज्ञशेष अन्न भोजन गर्ने, हिंसारहित, अनर्थकारी कार्यबाट टाढा रहने, कृतज्ञ, सत्यवादी र कोमल स्वभाववाला विद्वान् स्वर्गगामी हुन्छन्।।१४।।

**सुलभाः पुरुषा राजन् सततं प्रियवादितः।**
**अप्रियस्य तु पथ्यस्य वक्ता श्रोता च दुर्लभः।।१५।।**

हे राजन्! सधैँ प्रिय वचन बोल्ने मनुष्य सहज पाउन सकिन्छ, तर अप्रिय हितकारी वक्ता र श्रोता दुवै दुर्लभ हुन्छन्।।१५।।

**यो हि धर्मं समाश्रित्य हित्वा भर्तुः प्रियाप्रिये।**
**अप्रियाण्याह पथ्यानि तेन राजा सहायवान्।।१६।।**

जसले धर्मको आश्रय लिएर स्वामीलाई प्रिय लाग्छ या अप्रिय यो विचार नगरी अप्रिय हुँदाहुँदै पनि हितयुक्त कुरा बोल्छ त्यसैबाट राजालाई सच्चा सहायता मिल्छ।।१६।।

**त्यजेत् कुलार्थे पुरुषं ग्रामस्यार्थे कुलं त्यजेत्।**
**ग्रामं जनपदस्यार्थे आत्मार्थे पृथिवीं त्यजेत्।।१७।।**

कुलको रक्षाका लागि एउटा मनुष्यलाई, गाउँको रक्षाका लागि कुलको, देशको रक्षाका लागि गाउँको र आत्माको रक्षाका लागि सारा पृथिवी नै त्याग्नुपरे पनि त्यागिदिनुपर्छ।।१७।।

**आपदर्थे धनं रक्षेद् दारान् रक्षेद् धनैरपि।**
**आत्मानं सततं रक्षेद् दारैरपि धनैरपि।।१८।।**

आपत्का लागि धनको रक्षा गर्नुपर्छ, धनभन्दा नारीको रक्षा गर्नुपर्छ, धन र नारीभन्दा आत्माको रक्षा गर्नुपर्छ।।१८।।

**द्यूतमेतत् पुराकल्पे दृष्टं वैरकरं नृणाम्।**
**तस्माद् द्यूतं न सेवेत हास्यार्थमपि बुद्धिमान्।।१९।।**

प्राचीनकालदेखि नै जुवा खेल्नु मनुष्यमा झगडाको कारण मानिएको छ। अतः बुद्धिमान् मनुष्यले हँसीमजाकमा पनि जुवा नखेल्नू।।१९।।

**उक्तं मया द्यूतकालेऽपि राजन्**
**नेदं युक्तं वचनं प्रातिपेय।**
**तदौषधं पथ्यमिवातुरस्य**
**न रोचते तव वैचित्रवीर्य।।२०।।**

प्रतीपनन्दन! विचित्रवीर्यकुमार! राजन्! मैले जुवाको खेल प्रारम्भ हुँदा पनि यो ठीक होइन भनेको थिएँ, तर रोगीका लागि जसरी दबाई पथ्य लाग्दैन त्यसै गरी मेरो कुरा पनि हजुरलाई पथ्य लागेन।।२०।।

**काकैरिमांश्चित्रबर्हान् मयूरान्**
**पराजयेथाः पाण्डवान् धार्तराष्ट्रैः।**
**हित्वा सिंहान् क्रोष्टुकान् गूहमानः**
**प्राप्ते काले शोचिता त्वं नरेन्द्र।।२१।।**

नरेन्द्र! कागसमान आफ्ना पुत्रद्वारा विचित्र प्वाँखयुक्त मयूरसमान पाण्डवहरूलाई पराजित गर्ने प्रयत्न गरिरहनुभएको छ। सिंहलाई छाडेर स्यालको रक्षा गरिरहनुभएको छ। समय आउँदा हजुरले यसका लागि पश्चात्ताप गर्नुपर्ने छ।।२१।।

**यस्तात न क्रुध्यति सर्वकालं**
**भृत्यस्य भक्तस्य हिते रतस्य।**
**तस्मिन् भृत्या भर्तरि विश्वसन्ति**
**न चैनमापत्सु परित्यजन्ति।।२२।।**

तात! जुन स्वामीले सदा हितसाधनमा लागिरहेका आफ्ना भक्त सेवकमाथि कहिल्यै क्रोध गर्दैन त्यसमाथि भृत्यगणले विश्वास गर्छन् र त्यसलाई आपत्तिको समयमा पनि छाड्दैनन्।।२२।।

**न भृत्यानां वृत्तिसंरोधनेन**
**राज्यं धनं सञ्जिघृक्षेदपूर्वम्।**
**त्यजन्ति ह्येनं वञ्चिता वै विरुद्धाः**
**स्निग्धा ह्यमात्याः परिहीनभोगाः।।२३।।**

सेवकको जीविका हरण गरेर अर्काको राज्य एवम् धनको अपहरण गर्ने प्रयत्न गर्नु हुँदैन, किनभने जीविका खोसिएको अवस्थामा भोगबाट वञ्चित भएर पहिलेका प्रेमी मन्त्री पनि त्यो समय विरोधी बन्छन् र राज्य परित्याग गर्छन्।।२३।।

**कृत्यानि पूर्वं परिसङ्ख्याय सर्वा-**
**ण्यायव्यये चानुरूपां च वृत्तिम्।**
**सङ्गृह्णीयादनुरूपान् सहायान्**
**सहायसाध्यानि हि दुष्कराणि।।२४।।**

पहिले कर्तव्य, आयव्यय, उचित वेतन आदि निश्चय गरेर सुयोग्य सहायकको सङ्ग्रह गर्नुपर्छ, किनभने कठिनभन्दा कठिन कार्य पनि सहायकहरूद्वारा साध्य हुन्छन्।।२४।।

**अभिप्रायं यो विदित्वा तु भर्तुः**
**सर्वाणि कार्याणि करोत्यतन्द्री।**
**वक्ता हितानामनुरक्त आर्यः**
**शक्तिज्ञ आत्मेव हि सोऽनुकम्प्यः॥२५॥**

जुन सेवकले स्वामीको अभिप्राय सम्झेर आलस्यरहित भई समस्त कार्य पूरा गर्छ, जसले हितयुक्त कुरा गर्छ, स्वामीभक्त छ, सज्जन र राजाको शक्तिलाई जान्नेवाला छ उसलाई आफूसमान सम्झेर कृपा गर्नुपर्छ॥२५॥

**वाक्यं तु यो नाद्रियतेऽनुशिष्टः**
**प्रत्याह यश्चापि नियुज्यमानः।**
**प्रज्ञाभिमानी प्रतिकूलवादी**
**त्याज्यः स तादृक् त्वरयैव भृत्यः॥२६॥**

जुन सेवकले स्वामीले आज्ञा दिँदा पनि उसको कुराको आदर गर्दैन, कुनै काममा लगाउँदा पनि गर्दैन, आफ्नो बुद्धिमा गर्व गर्ने र प्रतिकूल बोल्ने त्यो भृत्यलाई छिटै त्यागिदिनु उपयुक्त हुन्छ॥२६॥

**अस्तब्धमक्लीबमदीर्घसूत्रं**
**सानुक्रोशं श्लक्ष्णमहार्यमन्यैः।**
**अरोगजातीयमुदारवाक्यं**
**दूतं वदन्त्यष्टगुणेपपन्नम्॥२७॥**

अहङ्काररहित, कायरताशून्य, शीघ्र काम पूरा गर्ने, दयालु, शुद्ध हृदययुक्त, अर्काको बहकाउमा नलाग्ने, निरोगी र उदार वचनवाला

गरी आठ गुणयुक्त मनुष्यलाई दूत बनाउनु उपयुक्त रहेको बताइएको छ।।२७।।

**न विश्वासाज्जातु परस्य गेहे**
**गच्छेन्नरश्चेतयानो विकाले।**
**न चत्वरे निशि तिष्ठेन्निगूढो**
**न राजकाम्यां योषितं प्रार्थयीत।।२८।।**

सावधान मनुष्य विश्वास गरेर असमयमा कहिल्यै अविश्वस्त मनुष्यको घरमा नजाओस्, रातमा चौबाटोमा पनि नउभियोस् र राजाले जुन नारीलाई चाहन्छ त्यो नारीको चाहना पनि नगरोस्।।२८।।

**न निह्नवं मन्त्रगतस्य गच्छेत्**
**संसृष्टमन्त्रस्य कुसङ्गतस्य।**
**न च ब्रूयान्नाश्वसिमित्वपीति**
**सकारणं व्यपदेशं तु कुर्यात्।।२९।।**

जुन राजाका सहायकहरू दुष्ट छन् त्यस्तो राजाले मन्त्रणा समितिमा बसेर सल्लाह लिइरहेको छ भने त्यो समय त्यो राजाका कुराको खण्डन नगरोस् र मैले तिमीलाई विश्वास गर्दिनँ भन्ने कुरा पनि नभनोस्, बरु कुनै बहाना बनाएर त्यहाँबाट बाहिरियोस्।।२९।।

**घृणी राजा पुंश्चली राजभृत्यः**
**पुत्रो भ्राता विधवा बालपुत्रा।**
**सेनाजीवी चोद्धृतभूतिरेव**
**व्यवहारेषु वर्जनीयाः स्युरेते।।३०।।**

अत्यधिक लजाउने राजा, व्यभिचारिणी नारी, राजकर्मचारी, पुत्र, दाजुभाइ, नाबालक बच्चा भएकी विधवा, सैनिक र जसको अधिकार खोसिएको छ त्यस्तो पुरुषका साथ लेनदेन व्यवहार गर्नु हुँदैन॥३०॥

**अष्टौ गुणाः पुरुषं दीपयन्ति**
**प्रज्ञा च कौल्यं च श्रुतं दमश्च।**
**पराक्रमश्चाबहुभाषिता च**
**दानं यथाशक्ति कृतज्ञता च॥३१॥**

बुद्धि, कुलीनता, शास्त्रज्ञान, इन्द्रियनिग्रह, पराक्रम, धेरै नबोल्ने स्वभाव, यथाशक्ति दान र कृतज्ञता गरी यी आठ गुणले पुरुषको शोभा बढाउँछन्॥३१॥

**एतान् गुणांस्तात महानुभावा-**
**नेको गुणः संश्रयते प्रसह्य।**
**राजा यदा सत्कुरुते मनुष्यं**
**सर्वान् गुणानेष गुणो बिभर्ति॥३२॥**

तात! एउटा गुण यस्तो छ जुन गुणले यी सबै महत्त्वपूर्ण गुणमाथि पनि अधिकार जमाउँछ। त्यो गुण राजसम्मान हो जुन अन्य सबै गुणभन्दा शोभा बढाउने खालको छ॥३२॥

**गुणा दश स्नानशीलं भजन्ते**
**बलं रूपं स्वरवर्णप्रशुद्धिः।**
**स्पर्शश्च गन्धश्च विशुद्धता च**
**श्रीः सौकुमार्यं प्रवराश्च नार्यः॥३३॥**

बल, रूप, मधुर स्वर, उज्ज्वल वर्ण, कोमलता, सुगन्ध, पवित्रता, शोभा, सुकुमारता र सुन्दर नारी गरी यी १० गुण नित्य स्नान गर्ने व्यक्तिले प्राप्त गर्छ।।३३।।

**गुणाश्च षण्मितभुक्तं भजन्ते**
**आरोग्यमायुश्च बलं सुखं च।**
**अनाविलं चास्य भवत्यपत्यं**
**न चैनमाद्यून इति क्षिपन्ति।।३४।।**

अल्पाहारी व्यक्ति आरोग्य, आयु, बल, सुख, सुन्दर सन्तानका साथै उसलाई धेरै खाने व्यक्ति भन्ने आरोप नलाग्ने गरी छ वटा गुणयुक्त बन्छ।।३४।।

**अकर्मशीलं च महाशनं च**
**लोकद्विष्टं बहुमायं नृशंसम्।**
**अदेशकालज्ञमनिष्टवेष-**
**मेतान् गृहे न प्रतिवासयेत।।३५।।**

अकर्मण्य, धेरै खाने, सबैको विरोध गर्ने, मायावी, क्रूर, देशकालको ख्याल नराख्ने र निन्दित वेश धारण गर्ने मनुष्यलाई कहिल्यै आफ्नो घरमा बस्न दिनु हुँदैन।।३५।।

**कदर्यमाक्रोशकमश्रुतं च**
**वनौकसं धूर्तममान्यमानिनम्।**
**निष्ठूरिणं कृतवैरं कृतघ्न-**
**मेतान् भृशार्तोऽपि न जातु याचेत्।।३६।।**

कृपण, गाली गर्ने, मूर्ख, जङ्गलमा रहने, धूर्त, नीचसेवी, निर्दयी, विरोधी र कृतघ्न व्यक्तिसँग कठिन अवस्थामा पनि सहायताका लागि याचना गर्नु हुँदैन।।३६।।

**सङ्क्लिष्टकर्माणमतिप्रमादं**
**नित्यानृतं चादृढभक्तिकं च।**
**विसृष्टरागं पटुमानिनं चा-**
**प्येतान् न सेवेत नराधमान् षट्।।३७।।**

क्लेशयुक्त कर्म गर्ने, अत्यन्त प्रमादी, सधैँ असत्य बोल्ने, अस्थिर भक्तियुक्त, स्नेहरहित र आफूलाई चतुर मान्ने गरी यी छ प्रकारका अधम पुरुषको कहिल्यै सेवा गर्नु हुँदैन।।३७।।

**सहायबन्धना ह्यर्थाः सहायाश्चार्थबन्धनाः।**
**अन्योऽन्यबन्धनावेतौ विनान्योऽन्यं न सिध्यतः।।३८।।**

धनको प्राप्तिका लागि सहायकको आवश्यकता पर्छ र सहायकले धनको अपेक्षा राखेका हुन्छन्। यी दुवै एकअर्कामा आश्रित हुने भएकाले परस्पर सहयोगबिना धन प्राप्त हुँदैन।।३८।।

**उत्पाद्य पुत्राननृणांश्च कृत्वा**
**वृत्तिं चेतेभ्योऽनुविधाय काञ्चित्।**
**स्थाने कुमारीः प्रतिपाद्य सर्वा**
**अरण्यसंस्थोऽथ मुनिर्बुभूषेत्।।३९।।**

पुत्रोत्पादन गरेर उनीहरूलाई ऋणबाट मुक्त गर्दै उनीहरूका लागि जीविकाको प्रबन्ध गरिदिनू। कन्याहरूलाई योग्य वरका साथ विवाह गरिदिएपछि मुनिवृत्तिका साथ वनमा रहने इच्छा गरोस्।।३९।।

**हितं यत् सर्वभूतानामात्मनश्च सुखावहम्।**
**तत् कुर्यादीश्वरे ह्येतन्मूलं सर्वार्थसिद्धये।।४०।।**

जुन कर्म सम्पूर्ण प्राणीका लागि हितकर र आफ्ना लागि पनि सुखद होस् त्यस्तो कर्म ईश्वरार्पणबुद्धिका साथ गर्नुपर्छ, यही नै सम्पूर्ण सिद्धिको मूल मन्त्र पनि हो।।४०।।

**वृद्धिः प्रभावस्तेजश्च सत्त्वमुत्थानमेव च।**
**व्यवसायश्च यस्य स्यात् तस्यावृत्तिभयं कुतः।।४१।।**

जसमा बढ्ने क्षमता, प्रभाव, तेज, पराक्रम, उद्योग एवम् निश्चयात्मक बुद्धि रहन्छ उसलाई आफ्नो जीविका नाशको डर पनि कसरी हुन सक्छ र?।।४१।।

**पश्य दोषान् पाण्डवैर्विग्रहे त्वं**
**यत्र व्यथेयुरपि देवाः सशक्राः।**
**पुत्रैर्वैरं नित्यमुद्विग्नवासो**
**यशः प्रणाशो द्विषतां च हर्षः।।४२।।**

पाण्डवहरूका साथ युद्ध गर्दा जुन किसिमका दोषहरू उत्पन्न हुन्छन् ती दोषहरूप्रति दृष्टि दिनुहोस् जसले गर्दा इन्द्र आदि देवताले पनि कष्ट भेल्नुपर्छ। यसको अतिरिक्त पुत्रहरूका साथ वैर, नित्य उद्वेगपूर्ण जीवन, कीर्तिको नाशका साथै शत्रुहरूलाई आनन्द दिने हुन्छ।।४२।।

**भीष्मस्य कोपस्तव चैवेन्द्रकल्प**
**द्रोणस्य राज्ञश्च युधिष्ठिरस्य।**
**उत्सादयेल्लोकमिमं प्रवृद्धः**
**श्वेतो ग्रहस्तिर्यगिवापतन् खे।।४३।।**

जसरी आकाशमा उदय भएको धूमकेतुले सारा संसारमा उपद्रव एवम् अशान्ति पैदा गर्छ त्यसै गरी हे इन्द्रसमान पराक्रमी महाराज! हजुर, भीष्म, द्रोणाचार्य र युधिष्ठिरमा बढेको क्रोधले पनि यो संसारकै संहार गर्न सक्छ।।४३।।

**तव पुत्रशतं चैव कर्णः पञ्च च पाण्डवाः।**
**पृथिवीमनुशासेयुरखिलं सागराम्बराम्।।४४।।**

हजुरका सय पुत्र, कर्ण र पाँच पाण्डव सबै मिल्ने हो भने समुद्रपर्यन्त सम्पूर्ण पृथिवीको शासन गर्न सक्छन्।।४४।।

**धार्तराष्ट्रा वनं राजन् व्याघ्राः पाण्डुसुता मताः।**
**मां वनं छिन्धि सव्याघ्रं मा व्याघ्रा नीनशन् वनात्।।४५।।**

राजन्! हजुरका छोराहरू वनसमान र पाण्डवहरू त्यो वनमा रहेका सिंहसमान रहेका छन्। हजुर सिंह भएको वनलाई नष्ट नगर्नुहोस् र वनमा रहेका ती सिंहलाई पनि नभगाउनुहोस्।।४५।।

**न स्याद् वनमृते व्याघ्रान् व्याघ्रा न स्युर्ऋते वनम्।**
**वनं हि रक्ष्यते व्याघ्रैर्व्याघ्रान् रक्षति काननम्।।४६।।**

बाघबिना वनको रक्षा हुन सक्दैन, त्यस्तै वनबिना बाघ रहन पनि सक्दैनन्; किनभने बाघले वनको रक्षा गर्छन् भने वनबाट बाघको रक्षा हुन्छ।।४६।।

**न तथेच्छन्ति कल्याणान् परेषां वेदितुं गुणान्।**
**यथैषां ज्ञातुमिच्छन्ति नैर्गुण्यं पापचेतसः।।४७।।**

जसको मन पापमा लागेको छ ती व्यक्तिले अर्काको कल्याणमय गुण जान्ने त्यस्तो इच्छा गर्दैनन् जस्तो उनीहरूको अवगुणलाई जान्ने इच्छा गर्छन्।।४७।।

**अर्थसिद्धिं परामिच्छन् धर्ममेवादितश्चरेत्।**
**न हि धर्मादपैत्यर्थः स्वर्गलोकादिवामृतम्।।४८।।**

जसले अर्थको पूर्ण सिद्धि चाहन्छ त्यसले प्रथमतः धर्मको आचरण गर्नुपर्छ। जसरी स्वर्गबाट अमृतलाई अलग गर्न सकिँदैन त्यसै गरी धर्मबाट अर्थलाई पनि अलग गर्न सकिँदैन।।४८।।

**यस्यात्मा विरतः पापात् कल्याणे च निवेशितः।**
**तेन सर्वमिदं बुद्धं प्रकृतिर्विकृतिश्च या।।४९।।**

जसले आफ्नो बुद्धिलाई पापबाट हटाएर कल्याणमा लगाइदिएको छ उसले संसारमा जति पनि प्रकृति र विकृतिहरू रहेका छन् ती सबैलाई जान्दछ।।४९।।

**यो धर्ममर्थं कामं च यथाकालं निषेवते।**
**धर्मार्थकामसंयोगं सोऽमुत्रेह च विन्दति।।५०।।**

जसले समयानुकूल धर्म, अर्थ र कामको सेवन गर्छ त्यसले यस लोकका साथै परलोकमा पनि धर्म, अर्थ र काम प्राप्त गर्छ।।५०।।

**सन्नियच्छति यो वेगमुत्थितं क्रोधहर्षयोः।**
**स श्रियो भाजनं राजन् यश्चापत्सु न मुह्यति।।५१।।**

राजन्! जसले क्रोध एवम् हर्षमा उठिरहेको वेगलाई रोक्न सक्छ र आपत्तिकालमा धैर्य गुमाउँदैन त्यही व्यक्ति राजलक्ष्मीको अधिकारी हुन्छ।।५१।।

**बलं पञ्चविधं नित्यं पुरुषाणां निबोध मे।**
**यत्तु बाहुबलं नाम कनिष्ठं बलमुच्यते।।५२।।**

**अमात्यलाभो भद्रं ते द्वितीयं बलमुच्यते।**
**तृतीयं धनलाभं तु बलमाहुर्मनीषिणः।।५३।।**
**यत्वस्य सहजं राजन् पितृपैतामहं बलम्।**
**अभिजातबलं नाम तच्चतुर्थं बलं स्मृतम्।।५४।।**
**येन त्वेतानि सर्वाणि सङ्गृहीतानि भारत।**
**यद् बलानां बलं श्रेष्ठं तत् प्रज्ञाबलमुच्यते।।५५।।**

राजन्! हजुरको कल्याण होस्। मनुष्यमा सदा पाँच प्रकारका बल हुन्छन् जसका बारेमा सुन्नुहोस्। जुन बाहुबल नामक बल रहेको छ त्यो बल कनिष्ठ बल हो, मन्त्री प्राप्त हुनु दोस्रो बल हो, विद्वान्हरू धन प्राप्त हुनुलाई तेस्रो बल मान्छन्। हे राजन्! जो आफ्ना पूर्वजबाट प्राप्त भएको (कुटुम्ब बल) चौथो बल हो जसलाई अभिजात बल पनि भनिन्छ। हे भारत! जसमा यी सबै बल सङ्गृहीत छन् र जुन बलहरूमध्ये पनि श्रेष्ठ मानिन्छ त्यो पाँचौ बल बुद्धिबल नामले चिनिन्छ।।५२–५५।।

**महते योऽपकाराय नरस्य प्रभवेन्नरः।**
**तेन वैरं समासज्य दूरस्थोऽस्मीति नाश्वसेत्।।५६।।**

जुन मानिसले ठूलो अपकार गर्न सक्छ भन्ने जानिसकेपछि त्यसको विरोधी भएको अवस्थामा म टाढा छु, उसले केही गर्न सक्दैन भनेर विश्वस्त हुनु हुँदैन।।५६।।

**स्त्रीषु राजसु सर्पेषु स्वाध्यायप्रभुशत्रुषु।**
**भोगेष्वायुषि विश्वासं कः प्राज्ञः कर्तुमर्हति।।५७।।**

यस्तो कुन बुद्धिमान् होला जसले नारी, राजा, सर्प, पढिएको पाठ, सामर्थ्यशाली व्यक्ति, शत्रु, भोग र आयुका सम्बन्धमा पूर्ण विश्वास गरेको होस्?॥५७॥

**प्रज्ञाशरेणाभिहतस्य जन्तो-**
**श्चिकित्सकाः सन्ति न चौषधानि।**
**न होममन्त्रा न च मङ्गलानि**
**नाथर्वणा नाप्यगदाः सुसिद्धाः॥५८॥**

जसलाई बुद्धिरूपी बाणले हानिएको छ त्यो जीवका लागि न वैद्य छ न त कुनै औषधी, न होमले हुन्छ न त कुनै मन्त्र, न कुनै माङ्गलिक कार्यबाट हुन्छ न त कुनै अर्थवेदोक्त प्रयोग र न कुनै सिद्ध जडीबुटीले नै काम गर्छ॥५८॥

**सर्पाश्चाग्निश्च सिंहश्च कुलपुत्रश्च भारत।**
**नावज्ञेया मनुष्येण सर्वे ह्येतेऽतितेजसः॥५९॥**

हे भारत! मनुष्यले सर्प, अग्नि, सिंह र कुलमा उत्पन्न व्यक्तिलाई कहिल्यै अनादर गर्नु हुँदैन, किनभने यी सबै व्यक्ति बडो तेजस्वी हुन्छन्॥५९॥

**अग्निस्तेजो महल्लोके गूढस्तिष्ठति दारुषु।**
**न चोपयुङ्क्ते तद्दारु यावन्नोद्दीप्यते परैः॥६०॥**

संसारमा रहेका महान् तेजहरूमध्ये अग्नि एक हो जुन काठमा लुकेर बसेको हुन्छ। जबसम्म कसैले त्यसलाई प्रज्वलित गर्दैन तबसम्म अग्निले काठलाई जलाउँदैन॥६०॥

**स एव खलु दारुभ्यो यदा निर्मथ्य दीप्यते।**
**तद्दारु च वनं चान्यन्निर्दहत्याशु तेजसा।।६१।।**

त्यही अग्निलाई काठ मथेर उद्दीप्त गरिदिने हो भने त्यसले आफ्नो तेजले त्यो काठ, जङ्गल र अन्य वस्तुहरूलाई पनि जलाएर भस्म गरिदिन्छ।।६१।।

**एवमेव कुले जाता पावकोपमतेजसः।**
**क्षमावन्तो निराकाराः काष्ठेऽग्निरिव शेरते।।६२।।**

यस्तै आफ्नै कुलमा उत्पन्न अग्निसमान तेजस्वी पाण्डव क्षमाभावयुक्त एवम् विकारशून्य भई काठमा लुकेर रहेको अग्निसमान शान्तभावले रहेका छन्।।६२।।

**लताधर्मा त्वं सपुत्रः शालाः पाण्डुसुता मताः।**
**न लता वर्धते जातू महाद्रुममनाश्रिता।।६३।।**

हजुर पुत्रसहित लतासमान हुनुहुन्छ भने पाण्डवहरू महान् शाल वृक्षसमान रहेका छन्। महान् वृक्षको आश्रय नलिईकन लता अगाडि बढ्न सक्दैन।।६३।।

**वनं राजंस्तव पुत्रोऽम्बिकेय**
**सिंहान् वने पाण्डवांस्तात विद्धि।**
**सिंहैर्विहीनं हि वनं विनश्येत्**
**सिंहाः विनश्येयुर्ऋते वनेन।।६४।।**

राजन्! अम्बिकानन्दन! हजुरका पुत्र वनसमान हुन् भने पाण्डवहरूलाई त्यही वनमा रहने सिंहसमान सम्झनुपर्छ। तात! सिंहविहीन वन नष्ट भएजस्तै वनबिना सिंह पनि नष्ट हुन्छन्।।६४।।

# षष्ठोऽध्यायः

विदुर उवाच

**ऊर्ध्वं प्राणा ह्युत्क्रामन्ति यूनः स्थविर आयति।**
**प्रत्युत्थानाभिवादाभ्यां पुनस्तान्प्रतिपद्यते।।१।।**

विदुर भन्छन्– मान्यजन वृद्ध नजिक आएको अवस्थामा त्यो समय नवयुवक व्यक्तिको प्राण माथि उठ्न लाग्छ, जब उसले वृद्धलाई उठेर स्वागत गर्दै प्रणाम गर्छ तब उसको प्राणले वास्तविक स्थिति प्राप्त गर्छ।।१।।

**पीठं दत्त्वा साधवेऽभ्यागताय**
**आनीयापः परिनिर्णिज्य पादौ।**
**सुखं पृष्ट्वा प्रतिवेद्यात्मसंस्थां**
**ततो दद्यादन्नमवेक्ष्य धीरः।।२।।**

कुनै साधु व्यक्ति अतिथिका रूपमा घरमा आएको अवस्थामा धीर पुरुषले प्रथमतः आसन दिएर जल ल्याई उसका चरण प्रक्षालन गरिदिनू, कुशल आदि कुरा सोधिसकेपछि आफ्नो स्थिति बताउनू, त्यसपछि आवश्यकताअनुसार अन्न आदि भोजन गराउनू।।२।।

**यस्योदकं मधुपर्कं च गां च**
**नमन्त्रवित्प्रतिगृह्णाति गेहे।**
**लोभाद्भयादथकार्पण्यतो वा**
**तस्यानर्थं जीवितमाहुरार्याः।।३।।**

जुन कृपण मनुष्यको घरमा लोभ, भय वा कन्जुसीका कारण वेदवेत्ता ब्राह्मणले जल, मधुपर्क र गाई स्वीकार गर्दैन त्यस्तो व्यक्तिको गृहस्थ जीवनलाई श्रेष्ठ व्यक्तिहरूले व्यर्थ बताएका छन्।।३।।

**चिकित्सकः शल्यकर्तावकीर्णी**
**स्तेनः क्रूरो मद्यपो भ्रूणहा च।**
**सेनाजीवी श्रुतिविक्रायकश्च**
**भृशं प्रियोऽप्यतिथिर्नोदकार्हः।।४।।**

वैद्य, चिरफार गर्ने, ब्रह्मचर्यबाट भ्रष्ट, चोर, क्रूर, रक्सीबाज, गर्भहत्यारा, सेनाजीवी र वेदविक्रेताहरू अत्यन्त प्रिय सम्बन्धी भए पनि घरमा आउँदा सत्कारयोग्य हुँदैनन्।।४।।

**अविकेयं लवणं पक्वमन्नं**
**दधि क्षीरं मधु तैलं घृतं च।**
**तिला मांसं मूलफलानि शाकं**
**रक्तं वासः सर्वगन्धा गुडाश्च।।५।।**

नुन, पाकेको अन्न, दही, दूध, मह, तेल, घिउ, तिल, मासु, फल, मूल, साग, रातो कपडा, सबै प्रकारको गन्ध एवम् गुड बेच्न योग्य वस्तु होइनन्।।५।।

**आरोषणो यः समलोष्ठाश्मकाञ्चनः**
**प्रहीणशोको गतसन्धिविग्रहः।**
**निन्दाप्रशंसोपरतः प्रियाप्रिये**
**त्यजन्नुदासीनवदेष भिक्षुकः।।६।।**

जो क्रोध नगर्ने, ढुङ्गोमाटो र सुवर्णलाई एउटै सम्झिने, शोकहीन, सन्धिविग्रहरहित, निन्दा-प्रशंसाबाट शून्य, प्रियाप्रियलाई त्याग गर्ने तथा उदासीन छ त्यही नै भिक्षुक (सन्न्यासी) हो।।६।।

**नीवारमूलेङ्गुदशाकवृत्तिः**
**सुसंयतात्माग्निकार्येषुचोद्यः।**
**वने वसन्नतिथिष्वप्रमत्तो**
**धुरन्धरः पुण्यकृदेष तापसः।।७।।**

नीवार (जङ्गली धान), कन्दमूल, इङ्गुद (लिसौडा) र साग खाएर जसले निर्वाह गर्छ, मनलाई वशमा राख्छ, अग्निहोत्र गर्छ, वनमा रहेर पनि अतिथिको सेवामा रत छ त्यही पुण्यात्मा तपस्वी (वानप्रस्थी) लाई श्रेष्ठ मानिएको छ।।७।।

**अपकृत्य बुद्धिमतो दूरस्थोऽस्मीति नाश्वसेत्।**
**दीर्घौ बुद्धिमतो बाहू याभ्यां हिंसति हिंसितः।।८।।**

बुद्धिमान् पुरुषलाई अपमान गरीं म टाढा छु भनेर निश्चिन्त रहनु हुँदैन। बुद्धिमान्का हात लामा हुन्छन्, यसरी सताइएको अवस्थामा उसले बदला लिएरै छाड्छ।।८।।

**न विश्वसेदविश्वस्ते विश्वस्ते नातिविश्वसेत्।**
**विश्वासाद् भयमुत्पन्नं मूलान्यपि निकृन्तति।।९।।**

जो विश्वास गर्न योग्य छैन त्यसलाई विश्वास नगरोस्, जो विश्वास गर्न योग्य छ त्यसलाई पनि अधिक विश्वास नगरोस्। विश्वासबाट जुन भय उत्पन्न हुन्छ त्यसले मूललाई पनि विच्छेद गर्छ।।९।।

**अनीषुयुर्गुप्तदारश्च संविभागी प्रियंवदः।**
**श्लक्ष्णो मधुरवाक्स्त्रीणां न चासां वशगो भवेत्।।१०।।**

मनुष्य ईर्ष्यारहित, नारीको रक्षक, सम्पत्तिको न्यायपूर्वक विभाग गर्ने, प्रियवादी, स्वच्छ र नारीसँग मीठो वचन बोल्ने हुनुपर्छ; परन्तु नारीको वशमा कहिल्यै पनि पर्नु हुँदैन।।१०।।

**पूजनीया महाभागाः पुण्याश्च गृहदीप्तयः।**
**स्त्रियः श्रियो गृहस्योक्तास्तस्माद्रक्ष्या विशेषतः।।११।।**

नारीलाई घरकी लक्ष्मी भनिएको छ। उनीहरू अत्यन्त सौभाग्यशालिनी, पूजनीया, पवित्र र घरको शोभा पनि हुन्। अतः नारीको विशेष रूपले रक्षा गर्नुपर्छ।।११।।

**पितुरन्तःपुरं दद्यान्मातुर्दद्यान्महानसम्।**
**गोषु चात्मसमं दद्यात्स्वयमेव कृषिं व्रजेत्।।१२।।**

अन्तःपुरको रक्षाको काम पितालाई छाडिदिनू, भान्साको प्रबन्धसम्बन्धी कामको जिम्मा आमालाई दिनू, गाईको सेवाका लागि आफूसमान व्यक्तिलाई सुम्पनू र कृषि सम्बद्ध काम आफैँले गर्नू।।१२।।

**भृत्यैर्वणिज्याचारं च पुत्रः सेवेत च द्विजान्।**
**अद्भ्योऽग्निर्ब्रह्मतः क्षत्रमश्मनो लोहमुत्थितम्।।१३।।**
**तेषां सर्वत्रगं तेजः स्वासु योनिषु शाम्यति।**
**नित्यं सन्तः कुले जाताः पावकोपमतेजसः।।१४।।**

सेवकद्वारा वाणिज्य-व्यापार र पुत्रद्वारा ब्राह्मणको सेवा गराउनुपर्छ। जलबाट अग्नि, ब्राह्मणबाट क्षत्रिय र ढुङ्गाबाट फलाम

पैदा हुन्छ। राम्रो कुलमा उत्पन्न तथा अग्निसमान तेजस्वी ब्राह्मणको तेज सर्वत्र व्यापक भए पनि उत्पत्ति स्थानमा शान्त हुन्छ।।१३–१४।।

**क्षमावन्तो निराकाराः काष्ठैऽग्निरिव शेरते।**
**यस्य मन्त्रं न जानन्ति बाह्याश्चाभ्यन्तराश्च ये।।१५।।**

क्षमाशील र विकारशून्य सन्त पुरुष काठमा अग्नि शान्त भावले रहेजस्तै तथा काठमा रहेको अग्नि नदेखिएजस्तै राजाको मन्त्रणा उसका बहिरङ्ग र अन्तरङ्ग सभासद्ले पनि जान्दैनन्।।१५।।

**स राजा सर्वतश्चक्षुश्चिरमैश्वर्यमश्नुते।**
**करिष्यन्न प्रभाषेत कृतान्येव च दर्शयेत्।।१६।।**

गरेको नदेखाई क्रियाको मात्र आभास गराउने र सबैतर्फ दृष्टि राख्ने राजाले लामो समयसम्म ऐश्वर्यको उपभोग गर्छ।।१६।।

**धर्मकामार्थकार्याणि तथा मन्त्रो न भिद्यते।**
**गिरिपृष्ठमुपारुह्य प्रासादं वा रहोगतः।।१७।।**

धर्म, अर्थ र काम सम्बद्ध काम कार्यभन्दा पहिले नबताउनू; गरेर मात्र देखाउनू। पर्वतको शिखर, राजमहल वा एकान्तमा मात्र मन्त्रणा गर्नुपर्छ।।१७।।

**अरण्ये निःशलाके वा तत्र मन्त्रो विधीयते।**
**नासुहृत्परमं मन्त्रं भारतार्हति वेदितुम्।।१८।।**

जङ्गलमा, घाँस आदिले घेरिएको स्थानमा मन्त्रणा गर्नुपर्छ। जो मित्र छैन त्यस्तो व्यक्तिलाई हे भारत! गोप्य कुरा दिनु हुँदैन।।१८।।

**अपण्डितो वापि सुहृत्पण्डितो वाप्यनात्मवान्।**
**नापरीक्ष्य महीपालः कुर्यात् सचिवमात्मनः।।१९।।**

मित्र भए पनि विद्वान् छैन भने, विद्वान् हुँदाहुँदै पनि आत्मवान् छैन भने र मनलाई वशमा गर्न सक्छ या सक्दैन भन्ने कुरा विचार गरेर मात्र आफ्नो सचिव वा मन्त्री नियुक्त गर्नुपर्छ।।१९।।

**अमात्ये ह्यर्थलिप्सा च मन्त्ररक्षणमेव च।**
**कृतानि सर्वकार्याणि यस्य पारिषदा विदुः।।२०।।**

धनप्राप्ति र मन्त्ररक्षाको भार मन्त्रीमा निर्भर रहन्छ, सबै कार्य गरिसकेपछि सभासद्ले जान्दछन्।।२०।।

**धर्मे चार्थे च कामे च स राजा राजसत्तमः।**
**गूढमन्त्रस्य नृपतेस्तस्य सिद्धिरसंशयम्।।२१।।**

धर्म, अर्थ र काम विषयक सम्पूर्ण कार्य पूर्ण भइसकेपछि सभासद्हरूले जान्दछन्; त्यही नै समस्त राजाहरूमा श्रेष्ठ मानिन्छ। मन्त्रणालाई गुप्त राख्ने त्यस्तो राजालाई निःसन्देह सिद्धि प्राप्त हुन्छ।।२१।।

**अप्रशस्तानि कर्माणि यो मोहादनुतिष्ठति।**
**स तेषां विपरिभ्रंशाद् भ्रंश्यते जीवितादपि।।२२।।**

जसले मोहका कारण नराम्रो कर्म गर्छ र नराम्रा कर्मका कारण प्राप्त विपरीत परिणामबाट उसले आफ्नो जीवन पनि गुमाउन सक्छ।।२२।।

**कर्मणा तु प्रशस्तानामनुष्ठानं सुखावहम्।**
**तेषामेवाननुष्ठानं पश्चात्तापकरं महत्।।२३।।**

उत्तम कर्मको अनुष्ठान सुखदायक हुन्छ, तर त्यो कर्मको अनुष्ठान गरिएन भने त्यही नै पश्चात्तापको कारण मानिन्छ।।२३।।

**अनधीत्य यथा वेदान् न विप्रः श्राद्धमर्हति।**
**एवमश्रुतषाड्गुण्यो न मन्त्रं श्रोतुमर्हति।।२४।।**

जसरी वेद नपढेको ब्राह्मण श्राद्धको अधिकारी हुँदैन त्यसै गरी सन्धि, विग्रह, आसन, यान, द्वैधी भाव र समाश्रय नामक छ गुणहरू नजानी कोही पनि गुप्त मन्त्रणाको अधिकारी हुन सक्दैन।।२४।।

**स्थानवृद्धिक्षयज्ञस्य षाड्गुण्यविदितात्मनः।**
**अनवज्ञातशीलस्य स्वाधीना पृथिवी नृप।।२५।।**

राजन्! जो सन्धि, विग्रह आदि छ गुणका कारण प्रसिद्ध छ; स्थिति, वृद्धि र ह्रासलाई जान्दछ तथा जसको मनोगत भावलाई अरूले जान्दैनन् त्यस्तो राजाको अधीनमा पृथिवी रहन्छिन्।।२५।।

**अमोघक्रोधहर्षस्य स्वयं कृत्यान्ववेक्षिणः।**
**आत्मप्रत्ययकोशस्य वसुधेयं वसुन्धरा।।२६।।**

जसको क्रोध र हर्ष व्यर्थ जाँदैन, जसले आवश्यक कार्यको देखभाल आफैँले गर्छ र खजानासम्बन्धी जानकारी पनि राख्छ उसलाई पृथिवीले पर्याप्त धन दिन्छिन्।।२६।।

**नाममात्रेण तुष्येत छत्रेण च महीपतिः।**
**भृत्येभ्यो विसृजेदर्थान्नैकः सर्वहरो भवेत्।।२७।।**

राजा राजोचित छत्रधारणबाटै सन्तुष्ट रहनुपर्छ। सेवकहरूलाई पर्याप्त धन दिनुपर्छ, आफूले मात्रै सेवन गर्नु हुँदैन।।२७।।

**ब्राह्मणो ब्राह्मणं वेद भर्ता वेद स्त्रियं तथा।**
**अमात्यं नृपतिर्वेद राजा राजानमेव च।।२८।।**

ब्राह्मणले ब्राह्मणलाई जान्दछ, पत्नीलाई पतिले जान्दछ, मन्त्रीलाई राजाले जान्दछ र राजालाई राजाले नै जान्दछ।।२८।।

**न शत्रुर्वशमापन्नो मोक्तव्यो वध्यतां गतः।**
**न्यग्भूत्वा पर्युपासीत वध्यं हन्याद् बले सति।**
**अहताद्धि भयं तस्माज्जायते नचिरादिव।।२९।।**

वशमा परेको वधयोग्य शत्रुलाई कहिल्यै छाड्नु हुँदैन। यदि आफ्नो बल पर्याप्त छैन भने नम्र भएर उसका साथ समय बिताउनुपर्छ र बल प्राप्त गरिसकेपछि खत्तम गर्नुपर्छ, किनभने शत्रु मारिएन भने त्यसबाट छिटै भय उपस्थित हुन्छ।।२९।।

**दैवतेषु प्रयत्नेन राजसु ब्राह्मणेषु च।**
**नियन्तव्यः सदा क्रोधो वृद्धबालातुरेषु च।।३०।।**

देवता, ब्राह्मण, राजा, वृद्ध, बालक र रोगीमाथि हुने क्रोधलाई प्रयत्नपूर्वक सधैँ रोक्नुपर्छ।।३०।।

**निरर्थं कलहं प्राज्ञो वर्जयेन्मूढसेवितम्।**
**कीर्तिं च लभते लोके न चानर्थेन युज्यते।।३१।।**

निरर्थक कलह गर्नु मूर्खहरूको काम हो, बुद्धिमान् पुरुषले यसलाई त्याग्नुपर्छ। यसो गर्नाले लोकमा यश मिल्छ र अनर्थको सामना गर्नुपर्दैन।।३१।।

**प्रसादो निष्फलो यस्य क्रोधश्चापि निरर्थकः।**
**न तं भर्तारमिच्छन्ति षण्डं पतिमिव स्त्रियः।।३२।।**

जुन राजा प्रसन्न हुँदा पनि कुनै फल प्राप्त हुँदैन र रिसाउँदा पनि कुनै हानि हुँदैन त्यस्तो राजालाई नारीले नपुंसक पतिलाई नचाहेजस्तै प्रजाले पनि चाहँदैनन्।।३२।।

**न बुद्धिर्धनलाभाय न जाड्यमसमृद्धये।**
**लोकपर्यायवृत्तान्तं प्राज्ञो जानाति नेतरः।।३३।।**

बुद्धिबाट धन प्राप्त हुन्छ र मूर्खता दरिद्रताको कारण हो भन्ने कुनै नियम छैन। संसारचक्रको वृत्तान्त केवल विद्वान् पुरुषले नै जान्दछन्, अरूले होइन।।३३।

**विद्याशीलवयोवृद्धान्बुद्धिवृद्धांश्च भारत।**
**धनाभिजनवृद्धांश्च नित्यं मूढोऽवमन्यते।।३४।।**

भारत! मूर्ख मनुष्य विद्या, शील, अवस्था, बुद्धि, धन र कुलमा माननीय पुरुषहरूको सदा अनादर गर्ने गर्छ।।३४।।

**अनार्यवृत्तमप्राज्ञमसूयकमधार्मिकम्।**
**अनर्थाः क्षिप्रमायान्ति वाग्दुष्टं क्रोधनं तथा।।३५।।**

जसको चरित्र निन्दनीय छ, जसले गुणहरूमा पनि दोष देख्छ, जो अधार्मिक, नराम्रो बोल्ने र क्रोधी छ त्यसमाथि छिटै अनर्थ (सङ्कट) आइलाग्छ।।३५।।

**अविसंवादनं दानं समयस्याव्यतिक्रमः।**
**आवर्तयन्ति भूतानि सम्यक्प्रणिहिता च वाक्।।३६।।**

ठगी नगर्ने, दान दिने, आफ्नो कुरामा अडिग रहने र राम्रोसँग भनिएको हितको कुराले सम्पूर्ण भूत आदिलाई पनि आफ्नो बनाउन सक्छ।।३६।।

**अविसंवादको दक्षः कृतज्ञो मतिमानृजुः।**
**अपि सङ्क्षीणकोशोऽपि लभते परिवारणम्।।३७।।**

कसैलाई धोका नदिने, चतुर, कृतज्ञ, बुद्धिमान् र सरल राजाले खजाना खत्तम भए पनि सहायक पाउँछ अर्थात् उसलाई सहायक मिल्छन्।।३७।।

**धृतिः शमो दमः शौचं कारुण्यं वागनिष्ठुरा।**
**मित्राणां चानभिद्रोहः सप्तैताः समिधः श्रियः।।३८।।**

धैर्य, मनोनिग्रह, पवित्रता, दया, कोमल वाणी र मित्रसँग द्रोह नगर्ने गरी यी सात कुराले लक्ष्मी बढाउँछन्।।३८।।

**असंविभागी दुष्टात्मा कृतघ्नो निरपत्रपः।**
**तादृङ्नराधमो लोके वर्जनीयो नराधिप।।३९।।**

राजन्! जसले आफूमा आश्रितहरूलाई धनको ठीकठीक बाँडफाँड गर्दैन; जो दुष्ट, कृतघ्न र निर्लज्ज छ त्यस्तो राजा यो लोकमा त्यागिदिन योग्य हुन्छ।।३९।।

**न स रात्रौ सुखं शेते ससर्प इव वेश्मनि।**
**यः कोपयति निर्दोषं सदोषोऽभ्यन्तरं जनम्।।४०।।**

जो स्वयम् दोषी भएर निर्दोष आत्मीयजनलाई रिसाउन हाल्छ त्यो व्यक्ति सर्पयुक्त घरमा रहने मनुष्यजस्तै रातमा सुखसँग सुत्न सक्दैन।।४०।।

**येषु दुष्टेषु दोषः स्याद्योगक्षेमस्य भारत।**
**सदा प्रसादनं तेषां देवतानामिवाचरेत्।।४१।।**

भारत! जसमाथि दोषारोपण गर्नाले योग एवम् क्षेममा बाधा आउँछ त्यस्तो व्यक्तिलाई देवतालाई जस्तै प्रसन्न राख्नुपर्छ।।४१।।

**येऽर्थाः स्त्रीषु समायुक्ताः प्रमत्तपतितेषु च।**
**ये चानार्ये समासक्ताः सर्वे ते संशयं गताः।।४२।।**

जसले धन आदि पदार्थ, स्त्री, प्रमादी, पतित एवम् नीच पुरुषको हातमा सुम्पिदिन्छ त्यस्तो व्यक्ति संशयमा पर्छ।।४२।।

**यत्र स्त्री कितवो यत्र बालो यत्रानुशासिता।**
**मज्जन्ति तेऽवशा राजन् नद्यामश्मप्लवा इव।।४३।।**

राजन्! जहाँको शासन स्त्री, जुवाडे र बालकको हातमा छ त्यहाँका जनता नदीमा पत्थरको डुङ्गामा बसेजस्तै विपत्तिको समुद्रमा डुब्छन्।।४३।।

**प्रयोजनेषु ये सक्ता न विशेषेषु भारत।**
**तानहं पण्डितान्मन्ये विशेषा हि प्रसङ्गिनः।।४४।।**

जो जति आवश्यकता ठान्छन् त्यति नै काममा लाग्छन्, अनावश्यक हात हाल्दैनन् उनीहरूलाई म पण्डित मान्छु, किनभने धेरैमा हात हाल्नु भनेको सङ्घर्षको कारण हो।।४४।।

**यं प्रशंसन्ति कितवा यं प्रशंसन्ति चारणाः।**
**यं प्रशंसन्ति बन्धक्यो न स जीवति मानवः।।४५।।**

जुवाडेले जसको प्रशंसा गर्छन्, चारणले जसको गीत गाउँछन् र वेश्याहरूले जसको बढाइँ गर्छन् त्यो मनुष्य जिउँदो हुँदाहुँदै पनि मुर्दासमान हो।।४५।।

**हित्वा तान्परमेष्वासान्पाण्डवानमितौजसः।**
**आहितं भारतैश्वर्यं त्वया दुर्योधने महत्।।४६।।**

भारत! हजुरले ती महान् धनुर्धर र अत्यन्त तेजस्वी पाण्डवहरूलाई छाडेर यो महान् ऐश्वर्यको भार दुर्योधनमाथि राखिदिनुभएको छ।।४६।।

**तं द्रक्ष्यसि परिभ्रष्टं तस्मात् त्वमचिरादिव।**
**ऐश्वर्यमदसम्मूढं बलिं लोकत्रयादिव।।४७।।**

यस कारण हजुरले छिटै ऐश्वर्यमदले मूढ दुर्योधनलाई साम्राज्यबाट गिरेको बलिजस्तै यो राज्यबाट भ्रष्ट भएको देख्नुहुने छ।।४७।।

●

# सप्तमोऽध्यायः

धृतराष्ट्र उवाच

**अनीश्वरोऽयं पुरुषो भवाभवे**
**सूत्रप्रोता दारुमयीव योषा।**
**धात्रा तु दिष्टस्य वशे कृतोऽयं**
**तस्माद्वद त्वं श्रवणे धृतोऽहम्।।१।।**

धृतराष्ट्रले भने– विदुर! पुरुष ऐश्वर्यको प्राप्ति र नाश मानिसले चाहेर हुँदैन, यो धागोले बाँधेको कठपुतली नारीजस्तै प्रारब्ध (ब्रह्म) को अधीनमा रहेको छ। यसर्थ तिमी भन्दै जाऊ, म सुन्नका लागि धैर्य धारण गरेर बसेको छु।।१।।

विदुर उवाच

**अप्राप्तकालं वचनं बृहस्पतिरपि ब्रुवन्।**
**लभते बुद्ध्यवज्ञानमवमानं च भारत।।२।।**

विदुरले भने– (भरतवंशोत्पन्न धृतराष्ट्र) भारत! असमयमा यदि बृहस्पतिले नै किन केही नभनून्, उनको पनि अपमान हुन्छ र उनको बुद्धिको पनि अवज्ञा नै हुन्छ।।२।।

**प्रियो भवति दानेन प्रियवादेन चापरः।**
**मन्त्रमूलबलेनान्यो यः प्रियः प्रिय एव सः।।३।।**

संसारमा कुनै मनुष्य दान दिनाले प्रिय हुन्छ, कुनै प्रिय वचन बोल्नाले र कोही मन्त्र एवम् औषधीमुलोको बलले प्रिय हुन्छ; तर जो प्रिय हुन्छ त्यो सदा प्रिय नै रहन्छ।।३।।

**द्वेष्यो न साधुर्भवति न मेधावी न पण्डितः।**
**प्रिये शुभानि कार्याणि द्वेष्ये पापानि चैव ह।।४।।**

जसका साथ द्वेष हुन्छ त्यो व्यक्ति त्यसको दृष्टिमा न साधु, न विद्वान्, न बुद्धिमान् नै मानिन्छ। प्रिय व्यक्तिका त सबै कर्म शुभ प्रतीत हुन्छन् र दुस्मनका सबै कर्म पापमय देखिन्छन्।।४।।

**उक्तं मया जातमात्रेऽपि राजन्**
**दुर्योधनं त्यज पुत्रं त्वमेकम्।**
**तस्य त्यागात् पुत्रशतस्य वृद्धि-**
**रत्यागात् पुत्रशतस्य नाशः।।५।।**

हे राजन्! मैले दुर्योधनले जन्म लिँदा नै केवल यही एक पुत्रलाई त्यागिदिनुहोस् भनेको थिएँ। यसको त्यागबाट सय पुत्रहरूको वृद्धि हुने छ र यसलाई त्याग नगर्नाले सय पुत्रहरूको नाश हुने छ।।५।।

**न वृद्धिर्बहु मन्तव्या या वृद्धिः क्षयमावहेत्।**
**क्षयोऽपि बहु मन्तव्यो यः क्षयो वृद्धिमावहेत्।।६।।**

जुन वृद्धि भविष्यको नाशको कारण बन्छ त्यसलाई धेरै महत्त्व दिनु हुँदैन। त्यो क्षय पनि धेरै आदरयोग्य हुन्छ जुन भविष्यमा अभ्युदयको कारण बन्छ।।६।।

**न स क्षयो महाराज यः क्षयो वृद्धिमावहेत्।**
**क्षयः स त्विह मन्तव्यो यं लब्ध्वा बहु नाशयेत्।।७।।**

महाराज! त्यो क्षय क्षय होइन जुन भविष्यमा वृद्धिको कारण बन्छ, तर त्यो लाभ पनि क्षय मानिन्छ जसको कारण अन्य धेरैको क्षति हुन्छ।।७।।

**समृद्धा गुणतः केचिद् भवन्ति धनतोऽपरे।**
**धनवृद्धान्गुणैर्हीनान्धृतराष्ट्र विवर्जय।।८।।**

धृतराष्ट्र! कतिपय व्यक्ति गुणका धनी हुन्छन् र कतिपय धनका धनी। जो धनका धनी हुँदाहुँदै गुणका कङ्गाल छन् त्यस्तालाई सर्वथा त्यागिदिनुपर्छ।।८।।

धृतराष्ट्र उवाच

**सर्वं त्वमायतोयुक्तं भाषसे प्राज्ञसम्मतम्।**
**न चोत्सहे सुतं त्यक्तुं यतो धर्मस्ततो जयः।।९।।**

धृतराष्ट्रले भने– तिमी जे भनिरहेका छौ त्यो परिणाममा हितकर छ। बुद्धिमान् व्यक्तिले यसको अनुमोदन गर्छन्। यो पनि ठीक हो कि जसतर्फ धर्म हुन्छ त्यसैको जित हुन्छ, तथापि म आफ्ना छोरालाई त्याग्न सक्दिनँ।।९।।

विदुर उवाच

**अतीवगुणसम्पन्नो न जातु विनयान्वितः।**
**सुसूक्ष्ममपि भूतानामुपमर्दमुपेक्षते।।१०।।**

विदुरले भने– जो अधिक गुणहरूले सम्पन्न र विनयी रहेका छन् उनीहरूले प्राणीहरूको थोरै पनि विनाश भएको देखेर त्यसको उपेक्षा गर्दैनन्।।१०।।

**परापवादनिरताः परदुःखोदयेषु च।**
**परस्परविरोधे च यतन्ते सततोत्थिताः।।११।।**
**सदोषं दर्शनं येषां संवासे सुमहद्भयम्।**
**अर्थादाने महान्दोषः प्रदाने च महद्भयम्।।१२।।**

जो अर्काको निन्दामा लागिरहन्छन्, जो अर्कालाई दुःख दिन र आपसमा फुट पार्नका लागि सदा उत्साहका साथ प्रयत्न गर्छन्, जसको दर्शन दोषयुक्त छ त्यस्ताका साथ रहनु पनि खतरापूर्ण हुन्छ। यस्ता व्यक्तिबाट धन लिनु महान् दोष हुन्छ र त्यस्ता व्यक्तिलाई धन दिनाले डर हुन्छ।।११–१२।।

**ये वै भेदनशीलास्तु सकामा निस्त्रपाः शठाः।**
**ये पापा इति विख्याताः संवासे परिगर्हिताः।।१३।।**

एकअर्कामा फुट पार्ने जसको स्वभाव छ र जो कामी, निर्लज्ज, शठ र प्रसिद्ध पापी छन् तिनीहरू साथमा राख्नका लागि अयोग्य र निन्दित मानिन्छन्।।१३।।

**युक्ताश्चान्यैर्महादोषैर्ये नरास्तान्विवर्जयेत्।**
**निर्वृत्तमाने सौहार्दे प्रीतिर्नीचे प्रणश्यति।।१४।।**
**या चैव फलनिर्वृत्तिः सौहृदे चैव यत्सुखम्।**

उल्लिखित दोषहरूका अतिरिक्त अन्य जुन महान् दोषहरू रहेका छन् त्यस्ता मनुष्यलाई त्यागिदिनुपर्छ। सौहार्द भाव निवृत्त भएपछि नीच पुरुषहरूको प्रेम नष्ट हुन्छ र त्यो सौहार्दबाट प्राप्त हुने फल सुखको पनि नाश हुन्छ।।१४।।

**यतते चापवादाय यत्नमारभते क्षये।**
**अल्पेऽप्यपकृते मोहान्न शान्तिमुपगच्छति।।१५।।**

फेरि त्यो नीच पुरुष निन्दा गर्नका लागि प्रयत्नरत रहन्छ र थोरै पनि अपराध भएको अवस्थामा विनाशका लागि उद्योग आरम्भ गरिदिन्छ। उसले थोरै पनि शान्ति प्राप्त गर्न सक्दैन।।१५।।

**तादृशैः सङ्गतं नीचैर्नृशंसैरकृतात्मभिः।**
**निशम्य निपुणं बुद्ध्या विद्वान्दूराद्विवर्जयेत्।।१६।।**

यस्ता नीच, क्रूर तथा अजितेन्द्रिय पुरुषहरूका साथ हुने सङ्गत आफ्नो बुद्धिले पूर्ण विचार गरेर विद्वान् पुरुषले त्यसलाई टाढैबाट त्यागिदिन्छन्।।१६।।

**यो ज्ञातिमनुगृह्णाति दरिद्रं दीनमातुरम्।**
**स पुत्रपशुभिर्वृद्धिं श्रेयश्चानन्त्यमश्नुते।।१७।।**

जसले आफ्ना कुटुम्ब, दरिद्र, दीन र रोगीमाथि अनुग्रह गर्छ त्यो पुत्र एवम् पशुहरूबाट समृद्ध हुन्छ र अनन्त कल्याणको अनुभव गर्छ।।१७।।

**ज्ञातयो वर्धनीयास्तैर्य इच्छन्त्यात्मनः शुभम्।**
**कुलवृद्धिं च राजेन्द्र तस्मात्साधु समाचर।।१८।।**
**श्रेयसा योक्ष्यते राजन्कुर्वाणो ज्ञातिसत्क्रियाम्।।१९।।**

राजेन्द्र! जसले आफ्नो हित चाहन्छ उसले आफ्नो जाति र भाइहरूलाई उन्नतिशील बनाउनुपर्छ। तसर्थ हजुर भलिभाँति आफ्नो कुलको विस्तारका लागि क्रियाशील रहनुपर्छ। राजन्! जसले आफ्ना कुटुम्बीजनको सत्कार गर्छ ऊ कल्याणको भागी पनि हुन्छ।।१८–१९।।

**विगुणा ह्यपि संरक्ष्या ज्ञातयो भरतर्षभ।**
**किं पुनर्गुणवन्तस्ते त्वत्प्रसादाभिकाङ्क्षिणः।।२०।।**

हे भरतश्रेष्ठ! आफ्नो कुटुम्बका व्यक्तिहरू गुणहीन नै किन नहोऊन्, उनीहरूको रक्षा गर्नुपर्छ भने जो आफ्ना कृपाभिलाषी एवम् गुणवान् छन् उनीहरूको त के नै कुरा रह्यो र?।।२०।।

**प्रसादं कुरु वीराणां पाण्डवानां विशाम्पते।**
**दीयन्तां ग्रामकाः केचित्तेषां वृत्यर्थमीश्वर।।२१।।**

हे राजन्! वीर पाण्डवहरूप्रति कृपा गर्नुहोस्, उनीहरूप्रति प्रसन्न हुनुहोस् र उनीहरूको जीवननिर्वाहका लागि केही गाउँ दिनुहोस्।।२१।।

**एवं लोके यशः प्राप्तं भविष्यसि नराधिप।**
**वृद्धेन हि त्वया कार्यं पुत्राणां तात शासनम्।।२२।।**

हे राजन्! यसो गर्नाले लोकमा हजुरको यश फैलिने छ। हजुर नै वृद्ध भएका कारण पनि छोराहरूलाई सही मार्गमा ल्याउनका लागि उनीहरूलाई निर्देशन दिनु हजुरकै काम हो।।२२।।

**मया चापि हितं वाच्यं विद्धि मां त्वद्धितैषिणम्।**
**ज्ञातिभिर्विग्रहस्तात न कर्तव्यो शुभार्थिना।**
**सुखानि सह भोज्यानि ज्ञातिभिर्भरतर्षभ।।२३।।**

हे दाजु! मैले पनि हितकारक वचन बोल्नुपर्छ। तसर्थ मलाई हजुरकै हितैषी ठान्नुहोस्। कल्याण चाहने सम्बन्धीहरूका साथ झगडा गर्नु उपयुक्त हुँदैन। हे राजन्! सुख भन्ने कुरा सबै नातागोता मिलेर भोग्नुपर्छ।।२३।।

**सम्भोजनं सङ्कथनं सम्प्रीतिश्च परस्परम्।**
**ज्ञातिभिः सह कार्याणि न विरोधः कदाचन।।२४।।**

आफ्ना ज्ञातिहरूका साथ सहभोजन, सहवार्तालाप र परस्पर प्रेमभाव रहनुपर्छ र कहिल्यै विरोध गर्नु हुँदैन।।२४।।

**ज्ञातयस्तरयन्तीह ज्ञातयो मज्जयन्ति च।**
**सुवृत्तास्तारयन्तीह दुर्वृत्ता मज्जयन्ति च।।२५।।**

यो संसारबाट आफ्ना सम्बन्धीहरूले नै पार लगाउँछन् भने सम्बन्धीहरूले नै डुबाउँछन्। यो संसारमा राम्रो आचरण गर्नेहरूले पार लगाउँछन् भने नराम्रो आचरण गर्नेहरूले डुबाउँछन्।।२५।।

**सुवृत्तो भव राजेन्द्र पाण्डवान् प्रति मानद।**
**अघर्षणीयः शत्रूणां तैर्वृतस्त्वं भविष्यसि।।२६।।**

हे राजेन्द्र! हजुरले पाण्डवहरूलाई राम्रो व्यवहार गर्नुभयो भने हजुर शत्रुहरूबाट अपराजित बन्नुहुने छ।।२६।।

**श्रीमन्तं ज्ञातिमासाद्य यो ज्ञातिरवसीदति।**
**दिग्धहस्तं मृग इव स एनस्तस्य विन्दति।।२७।।**

हे राजन्! हजुरका कारण कोही आफन्त दुःखी रहन्छ भने त्यो पापको भागी हजुर नै हुनुहुन्छ जसरी विषाक्त बाणका कारण मृग मरे पनि त्यो पापको भागी व्याधा बन्छ।।२७।।

**पश्चादपि नरश्रेष्ठ तव तापो भविष्यति।**
**तान्वा हतान्सुतान्वापि श्रुत्वा तदनुचिन्तय।।२८।।**

हे नरश्रेष्ठ! ती पाण्डवहरू वा हजुरका छोराहरूको मृत्युको खबर सुनेर हजुर दुःखी हुनुहुने छ। अतः यो कुरामा विचार गर्नुहोस्।।२८।।

**येन खट्वां समारूढः परितप्येत कर्मणा।**
**आदावेव न तत्कुर्यादध्रुवे जीविते सति।।२९।।**

कुनै कर्म गरेका कारण पछि खाटमा बसेर दुःखी हुनुभन्दा पहिले त्यो कर्म नै नगर्नु उपयुक्त हुन्छ। अर्थात् जुन कर्मका कारण भोलि लोकनिन्दा र सन्ताप बेहोर्नुपर्छ त्यो कर्म पहिल्यै नगर्नु श्रेयस्कर हुन्छ।।२९।।

**न कश्चिन्नापनयते पुमानन्यत्र भार्गवात्।**
**शेषसम्प्रतिपत्तिस्तु बुद्धिमत्स्वेव तिष्ठति।।३०।।**

यो संसारमा नीतिशास्त्रका आचार्य शुक्राचार्यबाहेक अन्य यस्तो कुनै व्यक्ति छैन जसले अनीतिको आचरण गरेको होस्। भविष्यमा हुने कार्यका बारेमा बुद्धिमान्‌ले पहिल्यै विचार पुऱ्याउनुपर्छ।।३०।।

**दुर्योधनेन यद्येतत्पापं तेषु पुरा कृतम्।**
**त्वया तत्कुलवृद्धेन प्रत्यानेयं नरेश्वर।।३१।।**

हे नरेश्वर! दुर्योधनले पाण्डवहरूप्रति गरेको पापकर्म रोक्ने काम कुलवृद्ध भएका कारण हजुरको हो। अर्थात् दुर्योधनले लिएको पाण्डवहरूको राज्य फिर्ता गरिदिने काम कुलवृद्ध भएका कारण हजुरले गर्नुपर्छ।।३१।।

**तांस्त्वं पदे प्रतिष्ठाप्य लोके विगतकल्मषः।**
**भविष्यसि नरश्रेष्ठ पूजनीयो मनीषिणाम्।।३२।।**

हे नरश्रेष्ठ! तपाईंले ती पाण्डवहरूलाई उनीहरूको राज्यमा प्रतिस्थापित गर्नुभयो भने तपाईं स्वयम् पापरहित भएर लोकमा विद्वान्हरूद्वारा पूजनीय हुनुहुने छ।।३२।।

**सुव्याहृतानि धीराणां फलतः प्ररिचिन्त्य यः।**
**अध्यवस्यति कार्येषु चिरं यशसि तिष्ठति।।३३।।**

जुन मनुष्यले विद्वान्द्वारा भनिएको राम्रो वचनको फलदृष्टिले विचार गरेर कार्य गर्छ त्यो धेरै कालसम्म यशको भागी हुन्छ।।३३।।

**असम्यगुपयुक्तं हि ज्ञानं सुकुशलैरपि।**
**उपलभ्यं चाविदितं विदितं चाननुष्ठितम्।।३४।।**

कुशल व्यक्तिहरूद्वारा दिइएको ज्ञान पनि व्यवहारमा ल्याइएन भने व्यर्थ हुन्छ। अथवा कर्तव्याकर्तव्य ज्ञानलाई व्यवहारमा ल्याउनुपर्छ। व्यवहारमा ल्याइएन भने विद्वान् व्यक्तिहरूद्वारा दिइएको ज्ञान नै किन नहोस्, त्यो व्यर्थ हुन्छ।।३४।।

**पापोदयफलं विद्वान् यो नारभति वर्धते।।३५।।**
**यस्तु पूर्वकृतं पापमविमृश्यानुवर्तते।**
**अगाधपङ्के दुर्मेधा विषमे विनिपात्यते।।३६।।**

जुन विद्वान्ले पापरूप फल दिने कर्म सुरु नै गर्दैन त्यसले वृद्धि प्राप्त गर्छ। जसले पहिले गरिएको पापकर्मको विचार नगरी त्यसैको अनुसरण गर्छ त्यस्तो दुर्बुद्धियुक्त मूर्ख हिलोले भरिएको विषम कष्टमा पर्छ।।३६।।

**मन्त्रभेदस्य षट् प्राज्ञो द्वाराणीमानि लक्षयेत्।**
**अर्थसन्ततिकामश्च रक्षेदेतानि नित्यशः।।३७।।**

**मदं स्वप्नमविज्ञानमाकारं चात्मसम्भवम्।**
**दुष्टामात्येषु विश्रम्भं दूताच्चाकुशलादपि।।३८।।**

धनसम्पत्ति र सन्तानको सुरक्षा गर्न चाहने बुद्धिमान् मनुष्यले मन्त्र (गोप्य कुरा)-भेदका छ वटा बाटाहरूबारे जान्नुपर्छ। यी छ वटा कुराहरू मद, निद्रा, आवश्यक कुराको जानकारी नराख्नु, आँखा-मुख आदिको विकार, दुष्टात्माको विश्वास र मूर्ख दूतमाथि भरोसा रहेका छन्।।३७–३८।।

**द्वाराण्येतानि यो ज्ञात्वा संवृणोति सदा नृप।**
**त्रिवर्गाचरणे युक्तः स शत्रूनधितिष्ठति।।३९।।**

मन्त्रभेदका छ वटा यी कुरा जानेर यिनीहरूलाई गोप्य राख्ने व्यक्ति धर्म, अर्थ र काम गरी त्रिवर्गका साथ शत्रुहरूलाई आफ्नो अधीनमा राख्न सक्षम हुन्छ।।३९।।

**न वै श्रुतमविज्ञाय वृद्धाननुपसेव्य वा।**
**धर्मार्थौ वेदितुं शक्यौ बृहस्पतिसमैरपि।।४०।।**

शास्त्रहरूको अध्ययन र वृद्धहरूको सेवाबिना बृहस्पतिसमान भए पनि धर्मार्थ जान्नका लागि निश्चित रूपले असमर्थ हुन्छ। अर्थात् शास्त्रहरूको अध्ययन र वृद्धहरूको सेवाबाट नै धर्मार्थ प्राप्त हुन्छ।।४०।।

**नष्टं समुद्रे पतितं नष्टं वाक्यमशृण्वति।**
**अनात्मनि श्रुतं नष्टं नष्टं हुतमनग्निकम्।।४१।।**

जसरी समुद्रमा खसेको वस्तु नष्ट हुन्छ त्यसै गरी असावधानीपूर्वक नसुन्ने व्यक्तिलाई भनेको वाक्य पनि व्यर्थ नष्ट

हुन्छ। यस्तै बुद्धिहीन पुरुषको हातमा गएको शास्त्र र अग्निबिना गरिएको हवन पनि नष्ट हुन्छ।।४१।।

**मत्या परीक्ष्य मेधावी बुद्ध्या सम्पाद्य चासकृत्।**
**श्रुत्वा दृष्ट्वाथ विज्ञाय प्राज्ञैर्मैत्रीं समाचरेत्।।४२।।**

विद्वान् व्यक्तिले युक्तिपूर्वक बुद्धिको परीक्षण गरेर, अनेक पटक बुद्धिपूर्वक व्यवहार गरेर, सुनेर, देखेर र जानेर विद्वान्हरूका साथ मैत्रीपूर्ण व्यवहार गर्नुपर्छ।।४२।।

**अकीर्तिं विनयो हन्ति हन्त्यनर्थं पराक्रमः।**
**हन्ति नित्यं क्षमा क्रोधमाचारो हन्त्यलक्षणम्।।४३।।**

विनयले अपयश, पराक्रमले अनर्थ, क्षमाले क्रोधलाई सदा टाढा भगाइदिएजस्तै सदाचारले दुर्व्यसनलाई नष्ट गरिदिन्छ।।४३।।

**परिच्छदेन क्षेत्रेण वेश्मना परिचर्यया।**
**परीक्षेत कुलं राजन्भोजनाच्छादनेन च।।४४।।**

हे राजन्! भोग्य सामग्री, जन्मस्थान, आवास, सेवा, भोजन, वस्त्र आदिबाट कुलको परीक्षा गर्नुपर्छ।।४४।।

**उपस्थितस्य कामस्य प्रतिवादो न विद्यते।**
**अपि निर्मुक्तदेहस्य कामसक्तस्य किं पुनः।।४५।।**

निर्मुक्त व्यक्तिले शरीरमा उपस्थित कामको प्रतिवाद गर्न सक्दैन भने कामासक्त व्यक्तिको त के नै कुरा रह्यो र?।।४५।।

**प्राज्ञोपसेविनो वैद्यं धार्मिकं प्रियदर्शनम्।**
**मित्रवन्तं सुवाक्यं च सुहृदं परिपालयेत्।।४६।।**

विद्वान्‌को सेवक, विद्वान् वैद्य, धार्मिक व्यक्ति जसलाई देख्दैमा आनन्द प्राप्त हुन्छ त्यस्ता मित्रहरूको सर्वथा रक्षा गर्नुपर्छ।।४६।।

**दुष्कुलीनः कुलीनो वा मर्यादां यो न लङ्घयेत्।**
**धर्मापेक्षी मृदुर्ह्रीमान् स कुलीनशतात् वरः।।४७।।**

उत्तम कुलमा जन्मेको होस् या अधम कुलमा जसले मर्यादा उल्लङ्घन गरेको छैन त्यस्तो धार्मिक एवम् लज्जाशील व्यक्ति सयौँ कुलीन व्यक्तिभन्दा पनि श्रेष्ठ हुन्छ।।४७।।

**ययोश्चित्तेन वा चित्तं निभृतं निभृतेन वा।**
**समेति प्रज्ञया प्रज्ञा तयोर्मैत्री न जीर्यति।।४८।।**

ती दुई व्यक्ति जसको चित्तका साथ चित्त, गुप्त रहस्यका साथ गुप्त रहस्य र बुद्धिका साथ बुद्धि मिलेको छ उनीहरूको मित्रता कहिल्यै समाप्त हुँदैन।।४८।।

**दुर्बुद्धिमकृतप्रज्ञं छन्नं कूपं तृणैरिव।**
**विवर्जयीत मेधावी तस्मिन्मैत्री प्रणश्यति।।४९।।**

बुद्धिमान् मनुष्यले विपरीत बुद्धियुक्त विवेकशून्य मनुष्यलाई त्यसरी नै छाडिदिन्छ जसरी घाँसले ढाकिएको कुवालाई सबैले छाडिदिन्छन्, किनभने उसका साथको मित्रता नष्ट भएर जान्छ।।४९।।

**अवलिप्तेषु मूर्खेषु रौद्रसाहसिकेषु च।**
**तथैवापेतधर्मेषु न मैत्रीमाचरेद् बुधः।।५०।।**

विद्वान्‌ले के बुझ्नुपर्छ भने अभिमानी, मूर्ख, क्रोधी, साहसी एवं अधार्मिक व्यक्तिका साथ मित्रता गर्नु हुँदैन।।५०।।

**कृतज्ञं धार्मिकं सत्यमक्षुद्रं दृढभक्तिकम्।**
**जितेन्द्रियं स्थितं स्थित्यां मित्रमत्यागि चेष्यते।।५१।।**

उपकारलाई सम्भने, धार्मिक, सत्यवादी, उदार, स्थिर भक्ति भएको, संयमी र मर्यादामा रहने मित्रलाई कहिल्यै त्याग्नु हुँदैन।।५१।।

**इन्द्रियाणामनुत्सर्गो मृत्युनापि विशिष्यते।**
**अत्यर्थं पुनरुत्सर्गः सादयेद्दैवतान्यपि।।५२।।**

इन्द्रियहरूको विषयबाट निवृत्ति हुनु भनेको मृत्युलाई पनि जित्नु हो। फेरि विषयमा अत्यधिक प्रवृत्तिले देवतालाई पनि नष्ट गरिदिन्छ।।५२।।

**मार्दवं सर्वभूतानामनसूया क्षमा धृतिः।**
**आयुष्याणि बुधाः प्राहुर्मित्राणां चाविमानना।।५३।।**

सबै प्राणीप्रति कोमल व्यवहार, गुणमा दोष नदेख्नु, सहनशीलता, धैर्य र मित्रहरूको अपमान नगर्नुजस्ता गुणले आयुलाई बढाउँछन्, यस्तो विद्वान्हरूको धारणा रहेको छ।।५३।।

**अपनीतं सुनीतेन योऽर्थं प्रत्यानिनीषते।**
**मतिमास्थाय सुदृढां तदकापुरुषव्रतम्।।४५।।**

जुन मनुष्यले अन्यायका कारण नष्ट भएको धनलाई स्थिर बुद्धिको सहारा लिएर श्रेष्ठ नीतिका साथ पुनः प्राप्त गर्ने इच्छा गर्छ त्यसले वीर पुरुषको आचरण गर्छ।।५४।।

**आयत्यां प्रतिकारज्ञस्तदात्वे दृढनिश्चयः।**
**अतीते कार्यशेषज्ञो नरोऽर्थैर्न प्रहीयते।।५५।।**

आउने समयमा दु:खको प्रतिकार गर्न जान्ने, वर्तमानमा निश्चयवाला र भूतका अवशिष्ट कार्य जान्ने मनुष्य धनरहित हुँदैन।।५५।।

**कर्मणा मनसा वाचा यदभीक्ष्णं निषेवते।**
**तदेवापहरत्येनं तस्मात्कल्याणमाचरेत्।।५६।।**

मनुष्यले मन, वाणी र कर्मले जुन विषयको पुन:पुन: सेवन गर्छ त्यसले उसलाई आफूतर्फ खिच्ने भएको हुनाले मुनष्यले सधैँ शुभकर्म मात्र गर्नुपर्छ।।५६।।

**मङ्गलालम्भनं योग: श्रुतमुत्थानमार्जवम्।**
**भूतिमेतानि कुर्वन्ति सतां चाभीक्ष्णदर्शनम्।।५७।।**

मङ्गलकारी वस्तुको स्पर्श, चित्तवृत्तिहरूको निरोध, शास्त्रश्रवण, उद्योग, सरलता र सत्पुरुषहरूको पुन:पुन: दर्शन कल्याणकारक एवम् सुखकारक हुन्छ।।५७।।

**अनिर्वेद: श्रियो मूलं लाभस्य च शुभस्य च।**
**महान्भवत्यनिर्विण्ण: सुखं चानन्त्यमश्नुते।।५८।।**

कर्मबाट निवृत्त नहुनु एवम् सदा प्रसन्नन रहनु सुख र लाभको मूल हो। महान् व्यक्तिले कहिल्यै दु:ख नभोगी अनन्त कालसम्म सुख भोग गर्छन्।।५८।।

**नात: श्रीमत्तरं किञ्चिदन्यत्पथ्यतमं मतम्।**
**प्रभविष्णोर्यथा तात क्षमा सर्वत्र सर्वदा।।५९।।**

हे तात! योभन्दा धेरै विभूतियुक्त र अत्यन्त कल्याणकारी अन्य कुनै उपाय छैन। समर्थ मनुष्यका लागि सबै स्थान र सबै कालमा क्षमायुक्त आचरण गर्नुपर्छ।।५९।।

**क्षमेदशक्तः सर्वस्य शक्तिमान्धर्मकारणात्।**
**अर्थानर्थौ समौ यस्य तस्य नित्यं क्षमा हिता।।६०।।**

शक्तिहीन मनुष्यले सबैलाई क्षमा गर्नुपर्छ, यसबाहेक ऊसँग अर्को उपाय छैन। शक्तिशाली मनुष्यले धर्माधर्मको विचार गरेर क्षमा गर्नुपर्छ। जसका लागि राम्रो-नराम्रो दुवै बराबर हुन्छ त्यसका लागि क्षमा नित्य हितकारी हुन्छ।।६०।।

**यत्सुखं सेवमानोऽपि धर्मार्थाभ्यां न हीयते।**
**कामं तदुपसेवेत न मूढव्रतमाचरेत्।।६१।।**

त्यो सुख भोग्दा पनि मनुष्य धर्म र अर्थबाट अलग हुँदैन, इच्छानुसार उपभोग गर्छ, तर विषयमा अत्यासक्त हुनु हुँदैन।।६१।।

**दुःखार्तेषु प्रमत्तेषु नास्तिकेष्वलसेषु च।**
**न श्रीर्वसत्यदान्तेषु ये चोत्साहविवर्जिताः।।६२।।**

दुःखले पीडित, प्रमादी, नास्तिक, आलसी र उत्साहहीन व्यक्तिसँग लक्ष्मी रहन्नन्। अर्थात् यस्ता अवगुण भएको मानिससँग लक्ष्मी रहन्नन्।।६२।।

**आर्जवेन नरं युक्तमार्जवात्सव्यपत्रपम्।**
**अशक्तं मन्यमानास्ते धर्षयन्ति कुबुद्धयः।।६३।।**

दुष्ट बुद्धि भएको मनुष्यले सरलतायुक्त र सरलताका कारणले लज्जाशील मनुष्यलाई दुर्बल सम्झेर तिरस्कार गर्छ।।६३।।

**अत्यार्यमतिदातारमतिशूरमतिव्रतम्।**
**प्रज्ञाभिमानिनं चैव श्रीर्भयान्नोपसर्पति।।६४।।**

अति श्रेष्ठ, अत्यन्त दानशील, अत्यधिक वीर, अत्यधिक व्रत पालन गर्ने र बुद्धिको अभिमान गर्नेसँग डरका कारण लक्ष्मी बस्दिनन्।।६४।।

**न चातिगुणवत्स्वेषा नात्यन्तं निर्गुणेषु च।**
**नैषा गुणान् कामयते नैर्गुण्यान्नानुरज्यते।**
**उन्मत्ता गौरिवान्धा श्रीः क्वचिदेवावतिष्ठते।।६५।।**

लक्ष्मी अति गुणवान्सँग पनि बस्दिनन् र गुणहीनसँग पनि बस्दिनन्। लक्ष्मीले न गुणीलाई चाहन्छिन् न त निर्गुणलाई नै। उन्मत्त गाईजस्तै अन्धी लक्ष्मी कहीँकहीँ मात्र रहन्छिन्।।६५।।

**अग्निहोत्रफला वेदाः शीलवृत्तफलं श्रुतम्।**
**रतिपुत्रफला नारी दत्तभुक्तफलं धनम्।।६६।।**

वेदको फल हवन र बलिवैश्वदेव, शास्त्रको फल शील तथा सदाचार, नारीबाट रति एवम् पुत्ररूपी फल प्राप्त हुन्छ भने धनको फल उपभोग र दान नै हो।।६६।।

**अधर्मोपार्जितैरर्थैर्यः करोत्यौर्ध्वदेहिकम्।**
**न स तस्य फलं प्रेत्य भुङ्क्तेऽर्थस्य दुरागमात्।।६७।।**

अधर्मोपार्जित अर्थबाट गरिएको और्ध्वदेहिक कर्मको फल मरिसकेको व्यक्तिले प्राप्त गर्न सक्दैन, किनभने त्यसको अर्थ प्राप्त गर्ने मार्ग नै दूषित छ।।६७।।

**कान्तारे वनदुर्गेषु कृच्छ्रास्वापत्सु सम्भ्रमे।**
**उद्यतेषु च शस्त्रेषु नास्ति सत्त्ववतां भयम्।।६८।।**

वनमा, वनको दुर्गम स्थानमा, विपत्तिको कठिन समयमा र युद्ध आदि हलचलको समयमा मर्ने र मार्ने उद्देश्यले शस्त्र उठ्दा मनोबलयुक्त मानिसलाई कुनै डर हुँदैन।।६८।।

**उत्थानं संयमो दाक्ष्यमप्रमादो धृतिः स्मृतिः।**
**समीक्ष्य च समारम्भो विद्धि मूलं भवस्य तु।।६९।।**

उद्योग, संयम, निपुणता, सावधानी, धैर्य र स्मरणशक्तिको विचार गरेर कार्य प्रारम्भ गर्ने व्यक्तिले उन्नतिका साथै सम्पन्नता प्राप्त गर्छ भन्ने कुरा बुझ्नुपर्छ।।६९।।

**तपो बलं तापसानां ब्रह्म ब्रह्मविदां बलम्।**
**हिंसा बलमसाधूनां क्षमा गुणवतां बलम्।।७०।।**

तपस्वीहरूको बल तपस्या, ब्रह्मविद्हरूको ब्रह्म, दुर्जनको बल हिंसा र गुणवान्को बल क्षमा हो।।७०।।

**अष्टौ तान्यव्रतघ्नानि आपो मूलं फलं पयः।**
**हविर्ब्राह्मणकाम्या च गुरोर्वचनमौषधम्।।७१।।**

जल, कन्दमूल, फल, दूध, घिउ, ब्राह्मणको कामना, गुरुको वचन र औषधी गरी उल्लिखित आठ कुराबाट व्रतको भङ्ग हुँदैन।।७१।।

**न तत्परस्य सन्दध्यात्प्रतिकूलं यदात्मनः।**
**सङ्ग्रहेणैष धर्मः स्यात्कामादन्यः प्रवर्तते।।७२।।**

जुन कुरा आत्माका (आफ्नो) लागि प्रतिकूल हुन्छ त्यो कुरा अर्काका लागि पनि गर्नु हुँदैन, सङ्क्षेपमा भन्दा यही नै धर्म हो। कामनाद्वारा अधर्मको उत्पत्ति हुन्छ।।७२।।

**अक्रोधेन जयेत्क्रोधमसाधुं साधुना जयेत्।**
**जयेत्कदर्यं दानेन जयेत्सत्येन चानृतम्।।७३।।**

क्रोधलाई प्रेमले, दुर्जनलाई सज्जनताले, कृपणलाई दानले र असत्यलाई सत्यले जिल्नुपर्छ।।७३।।

**स्त्रीधूर्तकेऽलसे भीरौ चण्डे पुरुषमानिनि।**
**चौरे कृतघ्ने विश्वासो न कार्यो न च नास्तिके।।७४।।**

स्त्री, धूर्त, आलसी, डरपोक, क्रोधी, पुरुषत्वको अभिमानी, चोर र कृतघ्न (उपकारको बदला अपकार गर्ने) र नास्तिकको कहिल्यै विश्वास गर्नु हुँदैन।।७४।।

**अभिवादनशीलस्य नित्यं वृद्धोपसेविनः।**
**चत्वारि सम्प्रवर्धन्ते आयुर्विद्या यशो बलम्।।७५।।**

गुरुजनलाई आदर र नित्य अभिवादन गर्ने तथा वृद्धको सेवा गर्ने व्यक्तिका आयु, विद्या, यश र बल गरी यी चार कुराको वृद्धि हुन्छ।।७५।।

**अतिक्लेशेन येऽर्थाः स्युर्धर्मस्यातिक्रमेण वा।**
**अरेर्वा प्रणिपातेन मा स्म तेषु मनः कृथाः।।७६।।**

क्लेश, धर्मको अतिक्रमण र शत्रुसँग झुकेर प्राप्त हुने धनमा कहिल्यै मन लगाउनु हुँदैन।।७६।।

**अविद्यः पुरुषः शोच्यः शोच्यं मैथुनमप्रजम्।**
**निराहाराः प्रजाः शोच्याः शोच्यं राष्ट्रमराजकम्।।७७।।**

विद्याविहीन पुरुष, सन्तानबिनाको मैथुन, भोजनबिनाका प्रजा र राजाबिनाको राष्ट्र शोचनीय हुन्छन्।।७७।।

**अध्वा जरा देहवतां पर्वतानां जलं जरा।**
**असम्भोगो जरा स्त्रीणां वाक्शल्यं मनसो जरा।।७८।।**

देहधारी प्राणीहरूको वृद्धत्वको कारण हिँडिरहनु (बाटो), अधिक जलवर्षण पर्वतको र असम्भोग नारीको वृद्धत्वको कारण भएजस्तै कटु वचन मनको कष्टको कारण बन्छ।।७८।।

**अनाम्नायमला वेदा ब्राह्मणस्याव्रतं मलम्।**
**मलं पृथिव्या बाह्लीकाः पुरुषस्यानृतं मलम्।**
**कौतूहलमला साध्वी विप्रवासमलाः स्त्रियः।।७९।।**

वेदहरूको अभ्यास र व्रत पालन नगर्नु ब्राह्मणको मल हो। पृथिवीको मल बाह्लीक देश हो। भूटो बोल्नु पुरुषको मल, पतिव्रता नारीका लागि हासपरिहास र नारीका लागि परदेशमा रहनु मल हो।।७९।।

**सुवर्णस्य मलं रूप्यं रूप्यस्यापि मलं त्रपु।**
**ज्ञेयं त्रपुमलं सीसं सीसस्यापि मलं मलम्।।८०।।**

सुनको मल चाँदी हो, चाँदीको मल राङ हो, यस्तै राङको मल सिसा हो र सीसाको मल पनि त्यसैको मल हो।।८०।।

**न स्वप्नेन जयेन्निद्रां न कामेन जयेत् स्त्रियः।**
**नेन्धनेन जयेदग्निं न पानेन सुरां जयेत्।।८१।।**

सुतेर निद्रालाई वशमा राख्न सकिँदैन, कामोपभोगबाट नारीलाई वशमा राख्न सकिँदैन, दाउरा राखेर अग्निलाई निभाउन सकिँदैन र मदिरापानबाट उसलाई त्यो व्यसनबाट बचाउन सकिँदैन। अर्थात् यी कुराहरूलाई अधीनमा राख्नका लागि प्रवृत्ति होइन, निवृत्ति (संयम) को आवश्यकता पर्छ।।८१।।

**यस्य दानजितं मित्रं शत्रवो युधि निर्जिताः।**
**अन्नपानजिता दाराः सफलं तस्य जीवितम्।।८२।।**

जसले दानद्वारा मित्र, युद्धद्वारा शत्रु, अन्नपान आदिबाट नारीलाई जितेको छ त्यसैको जीवन सफल मानिन्छ।।८२।।

**सहस्त्रिणोऽपि जीवन्ति जीवन्ति शतिनस्तथा।**
**धृतराष्ट्र विमुञ्चेच्छां न कथञ्चिन्न जीव्यते।।८३।।**

हे धृतराष्ट्र! हजार रुपियाँ हुनेहरू पनि जीवित छन्, सय रुपियाँ हुनेहरू पनि त्यसै गरी जीवित छन्। इच्छालाई नछाडीकन सहजतापूर्वक जीवन यापन गर्न सकिँदैन।।८३।।

**यत्पृथिव्यां ब्रीहियवं हिरण्यं पशवः स्त्रियः।**
**नालमेकस्य तत्सर्वमिति पश्यन्न मुह्यति।।८४।।**

पृथिवीमा जति धान, जौ, सुन, पशु र नारीहरू छन् ती सबै एउटाका लागि पर्याप्त छैनन्। तिनलाई हेरेर पनि जो मोहित हुँदैन त्यही नै मुक्तिको अधिकारी हो।।८४।।

**राजन्भूयो ब्रवीमि त्वां पुत्रेषु सममाचर।**
**समता यदि ते राजन् स्वेषु पाण्डुसुतेषु च।।८५।।**

हे राजन्! म हजुरलाई फेरि पनि भन्छु, हजुर पाण्डुपुत्र युधिष्ठिर आदि र आफ्ना पुत्रहरू दुर्योधन आदिमाथि समताको भाव राख्नुहुन्छ भने युधिष्ठिर आदिसँग समताको व्यवहार गर्नुहोस्।।८५।।

# अष्टमोऽध्यायः

विदुर उवाच

**योऽभ्यर्थितः सद्भिरसज्जमानः**
**करोत्यर्थं शक्तिमहापयित्वा।**
**क्षिप्रं यशस्तं समुपैति सन्त-**
**मलं प्रसन्ना हि सुखाय सन्तः।।१।।**

विदुरले भने– सज्जनद्वारा प्रशंसित भएर अनासक्ति भावबाट शक्तिको उल्लङ्घन नगरी यथाशक्ति कार्य गर्ने मनुष्यले शीघ्र यश प्राप्त गर्छ, किनभने प्रसन्न सज्जन नै कल्याणका लागि समर्थ हुन्छन्।।१।।

**महान्तमप्यर्थमधर्मयुक्तं**
**यः सन्त्यजत्यनपाकृष्ट एव।**
**सुखं सुदुःखान्यवमुच्य शेते**
**जीर्णां त्वचं सर्प इवावमुच्य।।२।।**

जुन मनुष्य अधर्मयुक्त धनप्रति आकृष्ट नभई सहज रूपमा त्यसलाई त्यागिदिन्छ त्यसले कष्टलाई छोडेर सुख प्राप्त गर्छ जसरी सर्पले काँचुली (काँचुली छाड्ने समयमा सर्पले देख्न र छिटो हिँड्न सक्दैन) छाडेर सुख प्राप्त गर्छ।।२।।

**अनृते च समुत्कर्षो राजगामि च पैशुनम्।**
**गुरोश्चालीकनिर्बन्धः समानि ब्रह्महत्यया।।३।।**

असत्य व्यवहारबाट उन्नति, राज्यको निन्दा र मान्यजनसँग झूटो व्यवहार गर्नु ब्रह्महत्यासमान पाप हुन्।।३।।

**असूयैकपदं मृत्युरतिवादः श्रियो वधः।**
**अशुश्रूषा त्वरा श्लाघा विद्यायाः शत्रवस्त्रयः।।४।।**

अर्काको गुणमा दोष देख्नु आफ्नै मृत्युसमान हो। अति प्रशंसाबाट श्रीको नाश हुन्छ। गुरुको सेवा नगर्नु, अति छिटो गर्न खोज्नु र आत्मप्रशंसा विद्याका तीन शत्रु हुन्।।४।।

**आलस्यं मदमोहौ च चापलं गोष्ठिरेव च।**
**स्तब्धता चाभिमानित्वं तथा त्यागित्वमेव च।**
**एते वै सप्त दोषाः स्युः सदा विद्यार्थिनां मताः।।५।।**

आलस्य, मद्यपान, मोह, चञ्चलता, सभामा व्यर्थ समय नष्ट गर्ने, जडता र अभिमान गरी विद्यार्थीका सात दोष छन्। यी सात वटा दोष भएका विद्यार्थीलाई विद्या प्राप्त हुन सक्दैन।।५।।

**सुखार्थिनः कुतो विद्या नास्ति विद्यार्थिनः सुखम्।**
**सुखार्थी वा त्यजेद्विद्यां विद्यार्थी वा त्यजेत् सुखम्।।६।।**

सुख चाहनेलाई कहाँ विद्या प्राप्त हुन्छ, त्यस्तै विद्यार्थीलाई सुख कहाँ प्राप्त हुन्छ र? तसर्थ विद्यार्थीले सुख छाड्नुपर्छ र सुखार्थीले विद्यालाई छाडिदिनुपर्छ।।६।।

**नाग्निस्तृप्यति काष्ठानां नापगानां महोदधिः।**
**नान्तकः सर्वभूतानां न पुंसां वामलोचना।।७।।**

जतिसुकै दाउरा राखिदिए पनि अग्नि शान्त हुँदैन, नदीको जल जतिसुकै पुगे पनि समुद्र तृप्त हुँदैन, संसारमा रहेका सबै प्राणीको नाश गरे पनि यमराज तृप्त नभएजस्तै पुरुषबाट नारी पनि तृप्त हुन सक्दैनन्।।७।।

**आशा धृतिं हन्ति समृद्धिमन्तकः**

**क्रोधः श्रियं हन्ति यशः कदर्यता।**

**अपालनं हन्ति पशूंश्च राज-**

**न्नेकः क्रुद्धो ब्राह्मणो हन्ति राष्ट्रम्।।८।।**

हे राजन्! आशाले धैर्य, यमराजले ऐश्वर्य, क्रोधले धन, कायरताले यश र पशुलाई देखभाल नगरेका कारण नष्ट भएजस्तै एउटा क्रोधित ब्राह्मणले सम्पूर्ण राष्ट्रलाई नष्ट गरिदिन सक्छ।।८।।

**अजाश्च कांस्यं च रजतं च नित्यं**

**मध्वाकर्षः शकुनिः श्रोत्रियश्च।**

**वृद्धो ज्ञातिरवसन्नः कुलीन**

**एतानि ते सन्तु गृहे सदैव।।९।।**

हे राजन्! हजुरको घरमा सदा बाख्रा, काँसका भाँडा, चाँदीका पात्र, मह, विष जान्ने पक्षी, वेद जानेका ब्राह्मण, कुलवृद्ध र दुःखी कुलीन पुरुष सदा रहून्।।९।।

**अजोक्षा चन्दनं वीणा आदर्शो मधुसर्पिषी।**

**विषमौदुम्बरं शङ्खः स्वर्णनाभोऽथ रोचना।।१०।।**

**गृहे स्थापयितव्यानि धन्यानि मनुरब्रवीत्।**

**देवब्राह्मणपूजार्थमतिथीनां च भारत।।११।।**

हे भरतकुलोत्पन्न धृतराष्ट्र! मनुले भनेका छन्– देव, ब्राह्मण एवम् अतिथिहरूको पूजाका लागि अजा, साँढे, चन्दन, वीणा, दर्पण, मह, घिउ, विष, ताम्रपात्र, शङ्ख, स्वर्णनाभ, गोरोचन आदि मङ्गलकारी वस्तु सदा घरमा राख्नुपर्छ।।१०–११।।

**इदं च त्वां सर्वपरं ब्रवीमि**
**पुण्यं पदं तात महाविशिष्टम्।**
**न जातु कामान्न भयान्न लोभा-**
**द्धर्मं जह्याज्जीवितस्यापि हेतोः।।१२।।**

हे तात! म हजुरलाई उत्तम पद प्राप्त गराउने खालको विशिष्ट कुरा बताउँछु। त्यो के भने पुरुषले प्राणको रक्षाका लागि काम, भय एवम् लोभमा परेर धर्मको परित्याग गर्नु हुँदैन।।१२।।

**नित्यो धर्मः सुखदुःखे त्वनित्ये**
**जीवो नित्यो हेतुरस्य त्वनित्यः।**
**त्यक्त्वा नित्यं प्रतितिष्ठस्व नित्ये**
**सन्तुष्य त्वं तोषपरो हि लाभः।।१३।।**

हे राजन्! यो लोकमा धर्म नै त्यस्तो नित्य वस्तु हो, सुखदुःख भनेका अनित्य हुन्। जीव नित्य हो, तर त्यसको हेतु अनित्य हो। तसर्थ अनित्यलाई छाडेर नित्यको खोजीमा लाग्नुपर्छ। सन्तुष्ट भएर रहनु नै सर्वश्रेष्ठ लाभ हो।।१३।।

**महाबलान्पश्य महानुभावान्**
**प्रशास्य भूमिं धनधान्यपूर्णाम्।**
**राज्यानि हित्वा विपुलांश्च भोगान्**
**गतान्नरेन्द्रान् वशमन्तकस्य।।१४।।**

हे राजन्! ती बलशाली उदार चित्त भएका राजाहरूलाई हेर्नुहोस् जसले धनधान्यले परिपूर्ण राज्यको शासन गरेका थिए। उनीहरू पनि त्यस्तो राज्य र त्यो सुखभोगलाई छाडेर मृत्युको वशमा परेर गए।।१४।।

**मृतं पुत्रं दुःखपुष्टं मनुष्या**
**उत्क्षिप्य राजन् स्वगृहान्निर्हरन्ति।**
**तं मुक्तकेशाः करुणं रुदन्ति**
**चितामध्ये काष्ठमिव क्षिपन्ति।।१५।।**

हे राजन्! मृत पुत्रलाई मानिसले दुःखपूर्वक उठाएर बाहिर लैजान्छ। उसकी पत्नीले कपाल फुकाएर करुण रोदन गर्छे र उसलाई चिताको बीचमा काठ राखेजस्तै राखिदिइन्छ।।१५।।

**अन्यो धनं प्रेतगतस्य भुङ्क्ते**
**वयांसि चाग्निश्च शरीरधातून्।**
**द्वाभ्यामयं सह गच्छत्यमुत्र**
**पुण्येन पापेन च वेष्ट्यमानः।।१६।।**

मानिस मरिसकेपछि उसको धन अन्य व्यक्तिले भोग्छन्। शरीर जलाए अग्निले र त्यसै छाडिदिए काग, गिद्ध आदिले खान्छन्। उसका साथ जाने भनेको उसले गरेको पाप र पुण्य मात्र हो।।१६।।

**उत्सृज्य विनिवर्तन्ते ज्ञातयः सुहृदः सुताः।**
**अपुष्पानफलान् वृक्षान् यथा तात पतत्रिणः।।१७।।**

हे तात! जसरी फलफूल नभएका वृक्षहरूलाई पक्षीहरूले छाडिदिन्छन् त्यसै गरी मृत व्यक्तिको शरीरलाई जलाएर सम्बन्धी, मित्र, पुत्र आदि फर्किन्छन्।।१७।।

**अग्नौ प्रास्तं तु पुरुषं कर्मान्वेति स्वयं कृतम्।**
**तस्मात्तु पुरुषो यत्नात् धर्मं सञ्चिनुयाच्छनैः।।१८।।**

मरिसकेपछि शरीर आगोमा जल्छ, उसको साथमा उसले गरेको धर्माधर्म मात्र जान्छ। तसर्थ बिस्तारै धर्मको सञ्चय गर्नुपर्छ।।१८।।

**अस्माल्लोकादूर्ध्वममुष्य चाद्यो**
**महत्तमस्तिष्ठति ह्यन्धकारम्।**
**तद्वै महामोहनमिन्द्रियाणां**
**बुध्यस्व मा त्वां प्रलभेत राजन्।।१९।।**

हे राजन्! यो लोकको तलमाथि घना अन्धकार छ जुन निश्चय पनि इन्द्रियहरूका लागि महामोहमा पार्नेवाला छ। हजुरलाई त्यस्तो केही नहोस्।।१९।।

**इदं वचः शक्ष्यसि चेद्यथाव-**
**न्निशम्य सर्वं प्रतिपत्तुमेव।**
**यशः परं प्राप्स्यसि जीवलोके**
**भयं न चामुत्र न चेह तेऽस्ति।।२०।।**

हे राजन्! मेरा यी वचनहरू यथावत् जान्न सक्षम भएको अवस्थामा मनुष्यलोकमा निश्चय पनि यश प्राप्त हुने छ र परलोकमा पनि हजुरलाई कुनै किसिमको भय हुने छैन।।२०।।

**आत्मा नदी भारत पुण्यतीर्था**
**सत्योदका धृतिकूला दयोर्मिः।**
**तस्यां स्नातः पूयते पुण्यकर्मा**
**पुण्यो ह्यात्मा नित्यमलोभ एव।।२१।।**

हे धृतराष्ट्र! आत्मारूपी नदी पुण्य तीर्थ हो, सत्य जल हो, धैर्य किनार र दया लहर हो। त्यस्तो नदीमा स्नान गर्ने पुण्यशील पुण्यात्मा पवित्र बन्छ। आत्मा नित्य एवं लोभरहित बन्छ।।२१।।

**कामक्रोधग्राहवतीं पञ्चेन्द्रियजलां नदीम्।**
**कृत्वा धृतिमयीं नावं जन्मदुर्गाणि सन्तर।।२२।।**

हे राजन्! कामक्रोधरूपी ग्राह (जलजन्तु), पञ्चेन्द्रियरूपी नदी र धैर्यरूपी डुङ्गाबाट जन्मरूपी दुर्ग पार गर्नुपर्छ।।२२।।

**प्रज्ञावृद्धं धर्मवृद्धं स्वबन्धुं**
**विद्यावृद्धं वयसा चापि वृद्धम्।**
**कार्याकार्ये पूजयित्वा प्रसाद्य**
**यः सम्पृच्छेन्न स मुह्येत्कदाचित्।।२३।।**

जुन व्यक्तिले कार्याकार्यका सम्बन्धमा सन्देह भएको अवस्थामा बुद्धि, धर्म, विद्या एवम् अवस्थाले वृद्ध व्यक्तिहरूलाई सत्कारपूर्वक सोधेर कार्य गर्छ त्यसले कहिल्यै दुःख पाउनुपर्दैन।।२३।।

**धृत्या शिश्नोदरं रक्षेत्पाणिपादं च चक्षुषा।**
**चक्षुःश्रोत्रे च मनसा मनो वाचं च कर्मणा।।२४।।**

धैर्यबाट जननेन्द्रिय एवम् पेटको, नेत्रद्वारा हात एवम् गोडाको, मनद्वारा आँखा एवम् कानको र कर्मद्वारा मन एवम् वाणीको रक्षा गर्नुपर्छ। अर्थात् उदरपूर्ति एवम् कामवासनाको दमन धैर्यबाट गर्नुपर्छ। आँखाले राम्ररी हेरेर हातगोडाले गर्ने काम गर्नुपर्छ। निन्दित कर्मलाई हेर्न र सुन्नका लागि आँखा र कान लगाउनु हुँदैन। त्यस्तै मन एवम् वाणीलाई अनुचित कर्मको चिन्तन एवम् कथनमा लगाउनु हुँदैन।।२४।।

नित्योदकी नित्ययज्ञोपवीती
नित्यस्वाध्यायी पतितान्नवर्जी।
ऋतं ब्रुवन्गुरवे कर्म कुर्व-
न्न ब्राह्मणश्च्यवते ब्रह्मलोकात्।।२५।।

नित्य स्नान गर्ने, नित्य यज्ञोपवीत धारण गर्ने, नित्य स्वाध्याय गर्ने, पतित पुरुषको अन्नका साथै उसको संसर्गबाट टाढा रहने, सधैँ सत्य बोल्ने र गुरुजनको सेवा गर्ने ब्राह्मण ब्राह्मलोकबाट कहिल्यै तल झर्दैन।।२५।।

अधीत्य वेदान्परिसंस्तीर्य
चाग्नीनिष्ट्वा यज्ञैः पालयित्वा प्रजाश्च।
गोब्राह्मणार्थं शस्त्रपूतान्तरात्मा
हतः सङ्ग्रामे क्षत्रियः स्वर्गमेति।।२६।।

वेद पढेर, अग्निको चारैतर्फ कुश बिछ्याई विधिपूर्वक यज्ञ गरेर, प्रजाको विधिपूर्वक पालन गरेर गोब्राह्मण र प्रजाको हितार्थ शस्त्रद्वारा मारिएको क्षत्रिय पनि स्वर्गीय सुखको अधिकारी बन्छ।।२६।।

वैश्योऽधीत्य ब्राह्मणान्क्षत्रियांश्च
धनैः काले संविभज्याश्रितांश्च।
त्रेतापूतं धूममाघ्राय पुण्यं
प्रेत्य स्वर्गे दिव्यसुखानि भुङ्क्ते।।२७।।

वैश्य वर्ण वेद पढेर, समय आएको अवस्थामा ब्राह्मण, क्षत्रिय आदि वर्ण र आश्रितहरूलाई धन दिएर, तीन प्रकारका अग्निबाट उठेको धूवाँ सुँघेर मरिसकेपछि स्वर्गीय सुखको भागी बन्छ।।२७।।

**ब्रह्मक्षत्रं वैश्यवर्णं च शूद्रः**
**क्रमेणैतान्न्यायतः पूज्यमानः।**
**तुष्टेष्वेतेष्वव्यथो दग्धपाप-**
**स्त्यक्त्वा देहं स्वर्गसुखानि भुङ्क्ते।।२८।।**

ब्राह्मण, क्षत्रिय र वैश्य जातिको न्यायपूर्वक क्रमशः सेवा गर्दै आफूलाई दुःखरहित बनाएर शूद्र पनि स्वर्गीय सुखको भागी बन्छ।।२८।।

**चातुर्वर्ण्यस्यैष धर्मस्तवोक्तो**
**हेतुं चानुब्रुवतो मे निबोध।**
**क्षात्राद्धर्माद्धीयते पाण्डुपुत्र-**
**स्तं त्वं राजन् राजधर्मे नियुङ्क्ष्व।।२९।।**

हे राजन्! मैले जुन कारणले हजुरलाई चारै वर्णको धर्मका सम्बन्धमा बताएँ त्यो कुरा सुन्नुहोस्। पाण्डुपुत्र युधिष्ठिर क्षात्रधर्मबाट वञ्चित भइरहेको अवस्थामा उनलाई हजुर प्रजापालनरूप क्षात्रधर्ममा लगाइदिनुहोस् र उनको राज्य फिर्ता गरिदिनुहोस्।।२९।।

धृतराष्ट्र उवाच

**एवमेतद्यथा मां त्वमनुशाससि नित्यदा।**
**ममापि च मतिः सौम्य भवत्येवं यथात्थ माम्।।३०।।**

धृतराष्ट्रले भने– हे विदुर! तिमीले मलाई सधैँ भन्ने गरेजस्तो पाण्डवहरूको राज्य फिर्ता गरिदिऊँ भन्ने कुरा मेरो बुद्धिले पनि भन्छ। अर्थात् म पाण्डवहरूलाई राज्य दिन चाहन्छु।।३०।।

**सा तु बुद्धिः कृताप्येवं पाण्डवान्प्रति मे सदा।**
**दुर्योधनं समासाद्य पुनर्विपरिवर्तते।।३१।।**

हे विदुर! पाण्डवहरूलाई हेर्दा मलाई लाग्छ, उनीहरूको राज्य फिर्ता गरिदिऊँ। तर दुर्योधनलाई देखेपछि मेरो बुद्धि बदलिन्छ।।३१।।

**न दिष्टमभ्यतिक्रान्तुं शक्यं मर्त्येन केनचित्।**
**दिष्टमेव ध्रुवं मन्ये पौरुषं तु निरर्थकम्।।३२।।**

यो संसारमा भाग्यलाई बदल्न कोही पनि समर्थ छैन। म पुरुषार्थलाई भन्दा भाग्यलाई नै बलवान् ठान्छु।।३२।।

# श्लोकानुक्रमणिका

आ

## द

## भ



## म

## य

## ष



## स



## लेखक परिचय

नामः डा. वासुदेव खनाल

जन्मस्थानः सितगङ्गा नगरपालिका, वडा नं. ५, गल्धा, अर्घाखाँची

हालः तारकेश्वर नगरपालिका, वडा नं. ४, उज्यालो बस्ती, काठमाडौं

पिताः स्व.पं. तोयनाथ खनाल

माताः स्व. लीलावती खनाल

पत्नीः श्रीमती शारदा खनाल

छोरीः पुष्पा खनाल

छोराः महेश खनाल

अध्ययनः धर्मशास्त्राचार्य (प्रथम श्रेणीमा प्रथम)

विद्यावारिधिः शीर्षक 'स्मृतिपरम्परामा नारीको स्थान' नेपाल संस्कृत विश्वविद्यालय

पेशाः सह-प्राध्यापक, धर्मशास्त्रविभाग, नेपाल संस्कृत विश्वविद्यालय, वाल्मीकि विद्यापीठ, काठमाडौं

सम्पर्कः फोनः ०१-५१३६२८४, मोबाइलः ९८४९५८४६९०

सेवा/संलग्नता

१. विभिन्न ग्रन्थ, स्मृतिग्रन्थ र सञ्चारका माध्यमहरूमा भाषाविशेषज्ञ र सम्पादक रही सेवा

२. राष्ट्रिय तथा अन्तर्राष्ट्रिय जर्नल, पत्रपत्रिकाहरूमा दर्जनौ अनुसन्धानमूलक लेखरचना र धार्मिक तथा सांस्कृतिक पक्षसंग सम्बद्ध सयौं लेखरचनाको प्रकाशन

पदकः महेन्द्र विद्या भूषण-(ख) २०५२

भ्रमणः भारत, चीन, बेलायत र अमेरिका

RATNA PUSTAK BHANDAR

www.ratnabook.com

**Vidur Niti**
*(The Wisdom of Vidur)*
Dr. Basudev Khanal

philosophy

17500
9 789937 331692